'भक्तिर्ज्ञानायकल्पते।' तात्त्विक दृष्टिबाट अन्त्यमा ज्ञान र भक्तिमा अन्तर छैन। भक्तिमा पहिले 'दासोऽहम्' हुन्छ अनि फेरि 'सोऽहम्' हुन्छ।

नौ कन्याहरूको जन्मपछि कर्दन संन्यास लिन तयार भए। एक दिन कर्दमले सोचे अब यो विलासी जीवनको अन्त्य आएदेखि असल हुने थियो।

'सत्त्व प्रधानाः ब्राह्मणाः।' वैश्यले विलासी जीवन बिताएमा केही कुरा छैन, तर ब्राह्मणलाई यो शोभा दिँदैन। त्यसकारण कर्दमले एकान्तमा बसेर तप गर्नुपर्‍यो भनी सोचे। देवहूतिले भनिन्— 'म पनि त्याग गर्न चाहन्छु।' विवाहको अर्थ हो तन देऊ, तर मन एउटै।

देवहूति भन्छिन्—'नाथ तपाईंले त वचन दिनुभएको थियो एक पुत्रको जन्म भएपछि म संन्यास लिनेछु। पुत्रको जन्म अहिलेसम्म भएकै छैन। फेरि यी कन्याहरूको र मेरो याद विचार कसले गर्ला ? यी कन्याहरूको व्यवस्था गरेर मात्र संन्यास लिनुहोस्।'

शुकदेवजी वर्णन गर्नुहुन्छ—

कर्दम-देवहूतिले विकारको त्याग गरे। उनीहरूले कैयौं वर्षसम्म परमात्माको आराधना गरे, यसपछि देवहूतिको गर्भमा साक्षात् नारायणले वास गर्नुभयो। नौ महिनाको समय समाप्त भयो। आचार्यहरू, योगीहरू र साधुहरूका आचार्य प्रकट हुनेवाला थिए। ब्रह्मादिदेव कर्दम ऋषिको आश्रममा आए। ब्रह्माजीले कर्दम ऋषिलाई भन्नुभयो—'तिम्रो गृहस्थाश्रम सफल भयो। अब तिमी जगत्का पिता भयौ। त्यो बालकले जगत्लाई दिव्य ज्ञानको उपदेश दिनेछ।'

जीव भगवान्का निमित्त आतुर हुन्छ, आतुरताको कारणले भगवान्को दर्शन हुन्छ।

कर्दम र देवहूतिको तपश्चर्या र आतुरताले भगवान् उनीकहाँ पुत्ररूपबाट आए।

योगीजन योगबाट ब्रह्माको दर्शन गर्न सक्छन् तर संसारी मानिसले शुद्ध भक्तिद्वारा भगवान्लाई पुत्ररूपमा प्राप्त गर्न सक्छ र भगवान्को लालन-पालन गर्न सक्छ।

कपिल भगवान्ले जन्म लिएपछि देवहूतिले कर्दमलाई भनिन्—'अब गृहस्थाश्रमको त्याग गर्न सक्नुहुन्छ।'

कर्दम भन्नुहुन्छ मलाई यी नौ कन्याहरूको चिन्ता लागिरहेछ।

एक दम्पत्ती थिए। प्रभुमा पतिको दृढ़ श्रद्धा थिएन। पत्नीले कालो लुगा लगाई। पतिले कारण सोध्यो तब उसले भनी—'तिम्रा दृष्टिमा भगवान् हुनुहुन्न, त्यसैले मैले कालो लुगा लगाएकी हुँ।'

महाभारतमा एउटा कथा छ। भीष्मले प्रतिज्ञा गर्नुभयो—'भोलि म अर्जुनको वध गर्छु।' भीष्माचार्यको प्रतिज्ञा व्यर्थ हुन सक्दैन। पाण्डव सेनामा हाहाकार मच्चियो। अर्जुन नित्य नियमानुसार भगवत्-चिन्तन गर्दै सुतिहाले। श्रीकृष्णलाई चिन्ता हुन थाल्यो—'भोलि मेरो अर्जुनको के हुने हो। उहाँ अर्जुनकहाँ भेट गर्न आउनुभयो। अर्जुन सुतिरहेका थिए : श्रीकृष्णले उनलाई ब्यूँझाएर

सोध्नुभयो—'तिमी कसरी सुतिरहेका ? तिमीलाई आज निद्रा कसरी आइरहेछ ?' तब अर्जुनले भने—'मेरा निमित्त जब तपाईं स्वयं जागा बस्नुभएको छ भने मलाई केको चिन्ता हुन सक्छ ? मैले आफ्नो कर्तव्य पूरा गरें, अब तपाईंलाई आफ्नो कार्य पूरा गर्नु छ।'

मनुष्यको कर्तव्य हो अनन्य शरणागति। त्यसले सधैं यही सोचोस् मेरा मरणले श्रीकृष्णाको अपकीर्ति हुनेछ।

कर्दम भन्दछन्—'मलाई नौ कन्याहरूको चिन्ता छ।' तब ब्रह्माले भन्नुभयो—'तपाईंले किन चिन्ता लिइरहेको ? तपाईंको घरमा स्वयं भगवान् आउनुभएको छ। तपाईंले चिन्ता गर्नु साटो प्रभुको चिन्तन गर्नुस्।'

बल्लभाचार्यजीले भन्नुभएको छ—'चिन्ता कदापि न कार्या।' सेवा स्मरण गर्दै जो वैष्णव तन्मय हुन्छन् उनको चिन्ता भगवान् गर्नुहुन्छ।

ब्रह्माले नौ ऋषिहरूलाई आफ्ना साथमा ल्याउनु भएको थियो। सबै ऋषिलाई एक-एक कन्या दिनुभयो, अत्रिलाई अनसूया, वशिष्ठलाई अरुन्धति आदि। कर्दम ऋषिले सोचे अब आफ्नु सिरबाट सारा भार पन्सियो। उनी कपिलकहाँ आए र भन्न लागे मलाई संन्यास लिनुछ।

**काम्यानां कर्मणां न्यासं संन्यासं कवयोविदुः।**

केवल ईश्वरका निमित्त जो बाँच्दछ, त्यही संन्यासी हो।

कपिलले भने—'तपाईंको इच्छा ठीक छ। संन्यास लिएपछि तपाईंले कुनै प्रकारको चिन्ता नगर्नू, तपाईंले आफ्नो जीवन ईश्वरलाई अर्पण गरिदिनुहोस्।'

मुक्ति दुइ प्रकारका छन्—( १ ) कैवल्य मुक्ति र भागवती मुक्ति। कैवल्य मुक्ति—यसमा जीव ईश्वरमा लीन हुन्छ र दुवै एउटै बन्न जान्छन्। ( २ ) भागवती मुक्ति—यसमा पनि ईश्वरसँग जीव प्रेमद्वारा एक हुन्छ, तर अलिकति द्वैत राखेर नित्य लीला, नित्य सेवामा मग्न रहन्छ।

ऋषिले संन्यास ग्रहण गरे।

परमात्माका निमित्त सबै संसार-सुखको त्याग संन्यास हो, विना त्यागको संन्यास उज्यालो हुँदैन। कतै मानिस निवृत्त भरणपछि पनि दोस्रो नोकरीको तलाशमा हुन्छन्। सरकारले जब भनिदियो तिमी नोकरीका योग्य छैनौ, तब दोस्रो नोकरी किन खोज्नुपर्‍यो ? अब भगवान्को भजन गर्ने दिन आएका छन्।

संन्यासको विधि हेर्नाले वैराग्य लाग्छ। संन्यासको क्रियामा विरजा होम गर्नुपर्छ। देव, ब्राह्मण, सूर्य, अग्नि आदिको साक्षीमा विरजा होम गरिन्छ। फेरि नदीमा स्नान गरेर, लँगौटी फ्याँकेर नग्नावस्थामा बाहिर निस्कनुपर्छ।

आदि नारायणको चिन्तन गर्दा-गर्दै कर्दम ऋषिलाई भागवती मुक्ति मिल्यो।

'कपिल गीता' को आरम्भ भयो। प्रसंग दिव्य छ। पुत्र आमालाई उपदेश दिइरहेछन्। भागवतको यस महत्त्वको प्रकरण नौ अध्यायमा छ। 'कपिल गीता' को प्रारम्भ २५ सौं अध्यायबाट छ। यसमा साङ्ख्यशास्त्रको उपदेश छ। तीन अध्यायहरूमा पहिले वेदान्तको ज्ञान आउँछ र अन्त्यमा भक्तिको वर्णन गरिएको छ। फेरि त्यसपछि संसारचक्रको वर्णन छ।

देवहूतिले सोचिन् 'ऋषिहरूले मलाई भनेका थिए यो बालक आमाको उद्धार गर्न आएको छ। त्यसकारण म कपिल भगवान्सँग सोद्धछु जसको उत्तर उनले अवश्य दिनेछन्।' देवहूति कपिल भगवान्कहाँ आउँछिन् र उनलाई प्रश्न गर्छिन् 'यदि तपाईंको अनुमति छ भने म तपाईंसँग प्रश्न गर्न सक्छु ?'

कपिलले भने—'आमा, सङ्कोच नर्गुहोस्, तपाईं जे सोध्न चाहनुहुन्छ सोध्नुहोस्।'

माता देवहूतिले आरम्भमा नै शरणागति स्वीकार गर्नुभयो।

विना ईश्वरको सहारा जीवको उद्धार हुन सक्दैन। गीतामा अर्जुनले पनि पहिले शरणागति स्वीकार गरेका थिए र भगवान्सँग भनेका थिए—

शिष्यस्तेहऽम् शाधि मां त्वां प्रपन्नम्।

देवहूति सोद्धछिन्—'संसारमा सच्चा सुख कहाँ छ ? संसारमा सच्चा आनन्द कहाँ छ ? जसको नाश हुन नसकोस् यस्तो आनन्द बताउनुहोस्।'

अनेक चोटि इन्द्रियहरूको लालन-पालन गर्नामा कुनै सार छैन। इन्द्रियहरूले जे-जति मागे, ती सबै मैले दिएँ र पनि तृप्ति हुँदैन।

इन्द्रियहरू प्रत्येक दिन नयाँ-नयाँ विषय माग्दछन्। जीवलाई रस-सुखतर्फ तान्दछन्। आँखाले रूप-सुखतर्फ र छालाले स्पर्श-सुखतर्फ तान्दछन्। धेरै मानिसहरू संझिरहन्छन् दुइ महीनादेखि फलानो चीज खाएको छैन। दुइ महीनादेखि नखाएको कुरा संझन्छन् तर त्यही चीज आजसम्म कतिपटक खाएहोलान् सो उनीहरू संझना गर्दैनन्। खाई-पिईकन जिब्रोलाई सन्तोष दिएनन् आँखाहरूले सताउन थाल्दछन् दुइ महीनादेखि फिल्म हेरेको छैन। यस प्रकार सोचिरहेको हुन्छ यत्तिकैमा पत्नी भन्दछिन् छर-छिमेकका मानिसहरू महीनामा चारपटक फिल्म हेर्न जान्छन्। नयाँ फिल्म पनि उनीहरूले हेरिसके। हामी कहिले जानु ?

रुपियाँ-पैसा खर्च गरेर फिल्म हेर्नलाई अँध्यारामा बस्नुपर्छ। उनलाई सुध्रिएका भनौं वा बिग्रिएका ? कोही भन्छन् हामी धार्मिक फिल्म हेर्दछौं। धार्मिक चित्र पनि हेर्नु पर्दैन किनभने रामको अभिनय गर्ने मानिस राम हुँदैन, रामको अभिनय गर्ने मानिसले यदि परस्त्रीलाई काम भावले हेर्‍यो भने त्यस्ता फिल्महरू किन हेर्ने ? राम जस्तै कुनै पुरुषले रामको अभिनय गरेर पार लायो भने मात्र राम्रो हुनेछ। तपाईं भन्नुहोला म कटु वाक्य भनिरहेछु।' तर म जे देख्दैछु त्यही भनिरहेछु विलासी चित्र हेरेर जीवन बिग्रन्छ।

एक ठाउँमा शंकरस्वामीले भन्नुभएको छ 'यी इन्द्रियहरू चोर हुन्। इन्द्रियहरू चोरभन्दा पनि बड़ी खराब छन्। चोर जसको घरमा, जसका सहाराले बस्दछ त्यहाँ ऊ चोरी गर्दैन। उता

इन्द्रियहरू आफ्नो पतिका समान आत्मालाई धोखा दिन्छन्। देवहूति भन्दछिन् 'यी चोर जस्ता इन्द्रियहरूसँग म आजीत भइसकेकी छु। मलाई भन जगत्‌मा सच्चा सुख, सच्चा आनन्द कहाँ छ ? उसलाई पाउने-साधन कुन चाहिँ हो ?'

कपिल भगवान्‌लाई आनन्द भयो। उहाँले भन्नुभयो—'माताजी, कुनै जड़मा आनन्द रहन सक्दैन। आनन्द त आत्माको स्वरूप हो। अज्ञानवश जीवले जड़ वस्तुमा आनन्द खोज्दछ। जड वस्तुमा आनन्द रहन सक्दैन। संसारका विषयले सुख दिन सक्छ तर आनन्द दिँदैन। जो तिमीलाई सुख देला, त्यसैले तिमीलाई दुःख पनि देला। तर भगवान्‌ले सदा आनन्द मात्र दिनेछन्। आनन्द परमात्माको स्वरूप हो।'

संसारको सुख लुतो जस्तो हो, किनभने जबसम्म त्यसलाई कन्याउँछौ तबसम्म राम्रो लाग्छ। तर कन्याउँदाखेरि नङको विषले लुतोको बेथा बढ्दछ। सर्वोत्तम मिठाईको स्वाद पनि घाँटीसम्म मात्र रहन्छ।

जगत्‌का पदार्थहरूमा आनन्द छैन, त्यसको भासमात्र हो। यो जगत् दुःखरूप हो। गीतामा पनि भनेको छ—

अनित्यमसुखं लोकं इमं प्राप्य भजस्व माम्।

भगवान् भन्नुहुन्छ—'हे अर्जुन ! क्षणभंगुर र सुखरहित यस जगत्‌लाई र मनुष्य शरीरलाई प्राप्त गरेर तिमी मेरो नै भजन गर।'

आरम्भमा जड़ वस्तुमा सुखको अनुभव हुन्छ तर त्यो सुख विषमय नै हुन्छ।

विषयेन्द्रिय संयोगाद्यत्तग्रेऽमृतोपमम्।
परिणामे विषमिव तत्सुखं राजसं स्मृतम्॥

(गी० १८ श्लोक ३८)

विषयहरू र इन्द्रियहरूका संयोगबाट जो सुख उत्पन्न हुन्छ, त्यो आरम्भमा (भोगकालमा) अमृतजस्तो लाग्छ तर परिणामको दृष्टिबाट त्यो विषसमान हुन्छ। यसै कारणले यस सुखलाई राजस भनेको हो।

इन्द्रियहरूलाई सुखबाट तृप्ति हुँदैन। विवेकरूपी धनको अपहरण गरेर इन्द्रियहरूले जीवलाई संसाररूपी खाल्टामा फ्याँकिदिन्छन्। बाहिरका विषयहरूमा न आनन्द छ न सुख। आनन्द बाहिर होइन, भित्र छ, आत्मामा छ। आनन्द अविनाशी अन्तर्यामीको स्वरूप हो। कपिल अगाड़ि भन्नुहुन्छ—'हे माता, यदि शरीरमा आनन्द हुँदो हो तब त्यसबाट प्राण निस्किएपछि पनि मानिसहरूले त्यसलाई सङ्गालेर आफ्ना साथमा राख्ता हुन्।'

विषय जड़ हुन्। जड़ पदार्थमा आनन्द रहन सक्दैन, चैतन्यको स्पर्शको कारणले गर्दा जड़ पदार्थमा आनन्द जस्तो थाहा पाइन्छ।

दुइ शरीरका स्पर्शले सुख पाइँदैन, तर दुइ प्राणहरू एक हुनाले आनन्दको अनुभव हुन्छ। यदि दुइ प्राणहरू जम्मा भएपछि सुख मिल्छ जसमा अनेक प्राणहरू अटाएका छन् भने, यस्ता परमात्माको मिलनबाट कति बढ्ता आनन्द हुँदो होला ?

बाहिरका विषयहरूमा आनन्द छैन, तर चित्तमा, मनमा आत्माको प्रतिविम्ब पर्नाले आनन्द जस्तो अनुभव हुन्छ। इन्द्रियहरूले मनले खोजेको पदार्थ पाएपछि विषयहरूमा तद्रूप भइ हाल्छन्, त्यसकारण केही समयका निमित्त एकाग्र र एकाकार हुन्छ। त्यस समय चित्तमा आत्माको प्रतिविम्ब पर्दछ, जसले गर्दा आनन्दको भास हुन्छ। जगत्का विषयहरूमा जबसम्म मन फँसिरहन्छ, तबसम्म आनन्द पाउन नसकिने हुन्छ। आनन्द आत्माको सहज स्वरूप हो जुन प्रकार शीतलता जलको सहज स्वरूप हो, आनन्द आत्मामै छ।

आत्मा र परमात्माको मिलन परमानन्द हो। भगवान्मा मन अल्मलियो र डुब्न लाग्यो भने तब मात्र आनन्द पाइन्छ।

बारम्बार आफ्नो मनलाई तिमीले संझाऊ संसारका जड़पदार्थहरूमा सुख छैन। सुतेपछि सबै बिर्सिनाले आनन्द पाइयो। सारा संसारलाई बिर्सिएपछि मात्रै गाढ़ा निद्रा आउँछ।

आत्मा नित्य, शुद्ध र आनन्दस्वरूप छ। सुख-दुःख मनको धर्म हो। मन निर्विषयी भएपछि आनन्द पाइन्छ। दृश्यमध्येबाट दृष्टि हटाएर द्रष्टामा स्थिर गर्नसकेमा आनन्द पाइन्छ। आनन्द परमात्माको स्वरूप हो।

कपिल भन्नुहुन्छ—माताजी, यदि विषयहरूमा आनन्द अटाएको हुँदो हो सबैले सदा एकनासको आनन्द पाउनुपर्ने हो। तृप्त भएको मानिसका अगाड़ि यदि श्रीखण्ड ( एक प्रकारको मिठाई ) पनि राखिदियौ भने त्यसले सो कुरा मन पराउँदैन। बिरामी मानिसका सामुन्ने मालपुवा राखिदियौ भने पनि उसले खाँदैन। त्यसकारण श्रीखण्डमा, मालपुवाहरूमा अर्थात् विषयहरूमा, जड़पदार्थहरूमा आनन्द छैन। यदि श्रीखण्डमा आनन्द अटाएको भए बिरामीले पनि सो खानाको आनन्द पाउनुपर्ने थियो तर उसले आनन्द पाउँदैन, त्यसकारण आनन्द श्रीखण्डमा छैन। यस्तै प्रकारले सबै विषयहरूका बारेमा पनि संझनुपर्‍यो।

संसारका पदार्थहरूमा आनन्द छैन, तर इन्द्रियहरूलाई मनले रोजेका विषयपदार्थ पाएमा उनीहरू अन्तर्मुखी भइहाल्छन्। अन्तर्मुखी भएको मनमा ईश्वरको प्रतिविम्ब पर्दछ, त्यसकारण आनन्द पाइन्छ। मनभित्र आएमा सुख पाइन्छ र बाहिर गएमा सुख उड्छ। कल्पना गर एउटा सेठ श्रीखण्ड-पुरीको भोजन गरिरहेको होस् त्यत्तिकैमा कतैबाट तार आयो त्यसको कारोबार डुब्यो तब त्यही उसलाई विषतुल्य हुनेछ र खानलाई मन पनि लाग्ने छैन।

संसारका जड़ पदार्थहरूमा आनन्द छैन। जाहिले-जहिले आनन्द पाइन्छ, चेतन परमात्माको सम्बन्धको कारणले पाइन्छ। परमात्मा सोझो हुनुहुन्छ। जीवले उपेक्षा गरे पनि परमात्मा उसको अपराधलाई क्षमा गरिदिनुहुनेछ। आनन्द नारायणकै स्वरूप हो।

आनन्दको विरोधी शब्द पाईंदैन। आनन्द—यो ब्रह्मस्वरूप हो। जीवात्मा पनि आनन्दरूप हो। अज्ञानका कारणले जीव आनन्द खोज्नका निमित्त बाहिर जान्छ। बाहिरको आनन्द लामो समयसम्म टिक्न सक्दैन।

आत्माका निमित्त कुनै वास्तविक सुख-दुःख छैन। सुख-दुःख मनमा नै हुन्छ। सुख-दुःखको मनको धर्म हो। जन्म-मरण शरीरको धर्म हो। भोक र प्यास आत्माको धर्म हो। मनमा सुख-दुःख भएपछि मलाई दुःख हुन्छ भनेर आत्मा कल्पन्छ। मनमाथि भएको सुख-दुःखको आरोप अज्ञानद्वारा आत्मा आफूमाथि लाउँछ। आत्मस्वरूपमा उपाधिका कारणले सुख-दुःखको भास हुन्छ—आत्मा स्फटिक मणि जस्तो सेतो र शुद्ध छ। त्यसमा विषयहरूको प्रतिविम्ब परेपछि मनका कारणले आत्मा मान्दछ उसलाई सुख-दुःख भएको छ। स्फटिक मणिमा पछिल्तिर जुन रङ्गको फूल राख्ने छौ, त्यस्तै देखिने छ। त्यो रङ्ग स्फटिकको होइन, फूलको हो। स्फटिक मणि सेतो छ। त्यसका पछिल्तिर रातो गुलाब राख्यौ भने त्यो रातै देखिने छ। गुलाबको संसर्गले त्यो रातो हुन जान्छ।

पानीमा चन्द्रमाको प्रतिविंब पर्दछ। पानीको हलचलले गर्दा त्यो प्रतिविम्ब पनि हलचल गर्छ, काँप्दछ। तर वास्तविक चन्द्रमामाथि त्यसको केही प्रभाव पर्दैन। यस्तै किसिमबाट देहादिको धर्म, स्वयं नभए पनि जीवात्मा तिनलाई आफूमा कल्पित गर्दछ, अन्यथा जीवात्मा त निर्लेप छ। जीवात्मामा देखिए जस्तो हुँदै देहादिको धर्म निष्काम भागवत धर्म अनुसरणले, भगवान्‌को कृपाले र उसैबाट प्राप्त भगवान् माथिको भक्तियोगले बिस्तार-बिस्तार त्यो प्रतीति हट्दै जान्छ। जो भक्तनिष्ठ छ त्यो समस्त लोकमा व्याप्त परमात्मालाई देख्न सक्नेछ।

संसारका विषयहरू बीचबाट सबै प्रकारले हटेको मन ईश्वरमा लीन हुन्छ। जब मन निर्विषयी हुन्छ तब त्यो आनन्दरूप हुन्छ।

जीव जस्तो कपटी र ईश्वर जस्तो भोला ( सोझो ) अरू कोही छैन।

अरूलाई केही गर्नुपर्‍यो भने कष्टजस्तो हुन्छ, तर आफ्नाहरूलाई गर्नु छ भने आनन्द हुन्छ। रातको एघार बजे कोही साधु आए भने उनलाई सोधिन्छ—'महाराज, चिया ल्याऊँ या दूध ल्याऊँ ?' मन भन्दछ यति रात गइसक्यो यो झंझट कहाँबाट आइलाग्यो। विवेक चाहिँ गर्नै पर्छ। महाराज सरल भएका भए भन्लान् 'बिहानदेखि भोको छु। पुरी बनाइहाल।' कसैको पत्र लिएर आएका छन्, त्यसकारण बनाउनै पर्छ, तर खाना बनाउनका साथ-साथै झर्किएर भाँड़ाहरूको ठंचाइ ठुङ् ग्रुङ पनि सुनिने होला।

तर यदि माइतबाट आफ्ना भाई आए भने भन्लान्—'मैले खानेकुरा खाइसकेको छु, त्यसकारण भोक लागेको छैन।' तर उनले भन्लिन् 'होइन, तिमी भोकाएका हौला। म अहिले नै हलुवापुरी बनाइदिन्छु। केही बेर लाग्दैन।' आफ्ना भाइहरूलाई हलुवापुरी खुवाउलिन् तर महाराजलाई चियामा मात्रै टारिदेलिन्।

यो सबै मनको खेल हो। मन बड़ो कप्टी हुन्छ।'मेरो र तेरो'-को खेल यसै मनले रचेको छ। मन बन्धन र मोक्षको कारण हो।

कपिल भन्नुहुन्छ—'हे माता, मनलाई यस जीवको बन्धन र मोक्षको कारण मानिएको छ। मन जब विषयहरूमा आसक्त हुन्छ छ तब त्यो बन्धनको कारण बन्दछ र त्यही मन यदि परमात्मामा आसक्त हुन्छ भने मोक्षको कारण बन्दछ।'

चेतः खल्वस्य बन्धाय मुक्तये चात्मनो मतम्।
गुणेषु सक्तं बन्धाय रतं वा पुंसि मुक्तये॥
(भा० ३-२५-१५)

भगवान्‌ले मनुष्यको शरीर या घर होइन तर हृदय हेर्नुहुन्छ। मन विशाल भयो भने भगवान् आउनुहुन्छ। मनभित्र लुकेको अहन्ता-ममता, आफ्नो अर्काको भावनाले नै मनलाई दुःखी गराउँछ। मनको धर्म आत्मस्वरूपमा भासमान हुनाको कारणले आत्मा स्वयंलाई सुखी-दुःखी मान्दछ र मन बिग्रियो भने सबै कुरा बिग्रन्छ। सुख-दुःखका दाता हुन्, अहंमन्यता र ममता। तिनलाई छोड़ेपछि मात्र आनन्दरूप भेट्टिन्छ।

पाप गर्नलाई कसैलाई प्रेरणा दिने आवश्यकता पर्दैन, तर पुण्य गर्नका निमित्त प्रेरणा दिनुपर्छ। मन अधोगामी छ।

मानिसको मन पापी जस्तो खाड़लतर्फ नै बग्दछ, पानीजस्तै मन पनि अधोगामी छ। जलको जस्तै मनको स्वभाव पनि मास्तिर होइन तल्तिरै जाने हुन्छ। यस मनलाई मास्तिर उकास्नु छ। उसलाई परमात्माको चरणसम्म लैजानु छ। यन्त्रको सहायताले पानी माथि चढ्छ, त्यस्तै किसिमले मन्त्रको सङ्गमा लागेमा मन मास्तिर चढ्छ। मनलाई मन्त्रको साथ देऊ। मन्त्रको सङ्ग भयो भने अधोगामी मन उर्ध्वगामी बन्नेछ। जसले आफ्नो मन सुधारेको छ उसले अरूहरूलाई पनि सुधार्न सक्छ। मनलाई सुधार्ने अरू कुनै साधन छैन। मन शब्दलाई उल्टाइदियौ भने 'नम' शब्द बन्दछ। नम र नामले मात्र मनलाई सुधार्ने छ।

मनलाई स्थिर गर्नका निमित्त नाम जपको आवश्यकता छ। जपले मनको मलिनता र चञ्चलता हट्दछ। त्यसकारण कुनै पनि मन्त्रको जप गर सांसारिक विषयहरूको सङ्गबाट बिग्रिएको मन ईश्वरको ध्यानले गर्दाले सुध्रिन्छ। सबैका भित्र परमात्मा हुनुहुन्छ र पनि उहाँले सबैको दुःख टार्नुहुन्न। भित्र राज भएको चैतन्यरूप परमात्माले मन-बुद्धिलाई प्रकाश दिनुहुन्छ। भगवान्‌को स्वरूप यस्तो तेजोमय छ कि हामीजस्ता जीवले उहाँलाई देख्न सक्तैनौं।

भगवान्‌को निर्गुणस्वरूप सूक्ष्म हुनाको कारणले देखिँदैन र भगवान्‌को सगुणस्वरूप तेजोमय छ, त्यसकारण त्यो पनि देखिँदैन। त्यसकारण हामीजस्तालाई भगवान्‌को नामस्वरूप, मन्त्रस्वरूप इष्ट छ। भगवान्‌ले इच्छा गरेमा आफूलाई लुकाए पनि आफ्नो नाउँलाई लुकाउन सक्नुहुन्न। नामस्वरूप प्रकट छ, त्यसकारण परमात्माको कुनै नामस्वरूपको दृढ़ मनले शरण पर।

मन्त्र विना मन शुद्धि हुन सक्तैन। बिग्रेको मन ध्यानका साथ तप गर्नाले सुध्रिन्छ। सांसारिक भावनाले मन बिग्रन्छ र अलौकिक वासनाको जागरण भएपछि त्यो सुध्रिन्छ। वासनाको नाश वासनाद्वारै गर्नुपर्छ। असत् वासनाको विनाश सद्वासनाले हुन्छ।

जब मानिसले सोच्दछ मलाई जन्मको चक्करबाट मुक्त हुनु छ, मलाई कृष्ण-कथामा जानु छ, मलाई फेरि कुनै आमाको गर्भमा जानु छैन, मलाई यसै जन्ममा परमात्माको दर्शन गर्नु छ यस्तो भावना राख्नाले मन सुध्रिन्छ। काँड़ा काँड़ैले निकालिन्छ यस्तै किसिमले वासनाले वासनालाई झिकेर फ्याँकिदिन्छ। फिल्म हेर्ने वासना हटाउनु छ भने परीक्षामा पहिला हुने वासना राख। यस्तो भावनाले अध्ययनमा चाख बढ्छ र अध्ययनको रुचिले फिल्म हेर्ने वासना छुट्दछ।

कुनै एक राजाको एउटा बाख्रो थियो। राजाले एकपटक घोषणा गरे—'यस बाख्रालाई जंगलमा लगेर चराएर तृप्त जसले पारी ल्याउँछ, त्यसलाई म आधा राज्य दिनेछु, तर बाख्राको पेट पूरा भरेको छ वा छैन त्यसको परीक्षा म स्वयं गर्छु।'

यो घोषणा सुनेपछि एउटा मानिस राजाकहाँ आयो र भन्यो—'बाख्रा चराउने कुनै ठूलो काम होइन' भनेर त्यो बाख्रालाई जङ्गलमा लिएर गयो। त्यहाँ सारा दिन उसले कमला-कमला घाँस बाख्रालाई ख्वायो। बेलुका भएपछि उसले सोच्यो—अब त बाख्राको पेट भरियो होला किनभने उसलाई सारा दिन चराउँदै हिँड़ेको छु। बाख्रो सहित त्यो राजाछेउ आयो। राजाले अलिकति हरियो घाँस बाख्राका सामुन्ने राखिदिए। बाख्राले घाँस खान थाल्यो। त्यसपछि राजाले भने—'तैंले यसलाई पेट भरी खान दिएको रहिनछस्, होइन भने यसले घाँस खान किन लाग्यो?'

धैरैले बाख्राको पेट भर्ने कोशिश गरे, तर जसै दरबारमा उसका सामुन्ने घाँस हालिदिन्छन् तब ऊ खान थाल्छ।

एउटा सत्संगीले सोच्यो राजाको यस घोषणाको केही रहस्य छ, तत्त्व छ। म जुक्तिले काम गर्छु। उसले बाख्रालाई चराउन लाग्यो। जसै त्यो बाख्रो घाँस खान भनी जान्थ्यो त्यसले उसलाई लट्ठीले कुट्थ्यो। सारा दिनभरि यस्तै कति पटक भयो। अन्तमा बाख्राले सोच्यो यदि म घाँस खाने कोशिश गरौं तब पिटाइ खानु पर्ला।

बेलुकी त्यो सत्संगीले बाख्रो लिएर दरबारमा आयो। बाख्रालाई बिलकुलै घाँस ख्वाएको थिएन तापनि उसले राजालाई भन्यो, 'मैले यसलाई पेटभरी ख्वाएको छु त्यसकारण यसले अब बिलकुलै घाँस खाँदैन। परीक्षा गरेर हेर्नुहोस्।'

राजाले घाँस हाले तर त्यस बाख्राले हेर्नु परै जाओस् सुँघ्दा पनि सुँघेन। बाख्राको मनमा यो कुरा गाड़िएको थियो घाँस खाएँ भने चुटाइ खानुपर्ला। त्यसकारण उसले घाँस खाएन।

यो बाख्रो हाम्रै मन हो। बाख्रालाई घाँस चराउन लाने चाहिँ जीवात्मा हो। मनलाई मार। मनमाथि अंकुस राख। मन सुध्रिएपछि जीवन सुध्रिने छ। मनलाई विवेकरूपी लट्ठीले सधैं पिट। भोगले जीव तृप्त हुन सक्तैन। त्यागमा मात्र तृप्ति अटाएको छ।

मन अहन्ता र ममताले भरिएको छ। मनले जब केही माग्यो भने उसलाई विवेकरूपी लट्ठीले चुट्यौ भने त्यो वशमा हुनेछ।

रामदास स्वामीले मनलाई ज्ञान दिनुभएको छ। दृढ वैराग्य, तीव्र भक्ति र यस नियमादिको अभ्यासले चित्त वशमा हुन्छ र स्थिर हुन्छ। अन्त्यमा विस्तार-विस्तार प्रकृति पनि अदृश्य हुन्छिन्।

संसारमा वैराग्य ल्याउन एउटै उपाय छ।

जन्ममृत्यु जरा व्याधि दुःखदोषानुदर्शनम्।

यस जगत्मा सुखी हुने दुइ मार्ग छन्—एक ज्ञानमार्ग र अर्को भक्तिमार्ग।

ज्ञानमार्ग भन्छ—सबै कुरा छोड़ेर परमात्माका पछि पर। विना वैराग्यको ज्ञान पाईंदैन। ज्ञानमार्गमा वैराग्य मुख्य हो। यसमा सबैकुरा छोड़िदिनुपर्छ। ज्ञानी सबै कुरा छोड़ेर एक भगवान्लाई मात्रै समातेर बस्छ। यस मार्गमा त्याग मुख्य छ। यस मार्गका आचार्य शिवजी हुनुहुन्छ। सर्वस्वको त्याग गर्न बड़ो कठिन काम छ।

भक्तिमार्ग भन्दछ सर्वस्वको त्याग कठिन छ। यसको अपेक्षा असल हुन्थ्यो सबै कुरामा ईश्वर हुनुहुन्छ यस्तो मानेर सबैसँग विवेकपूर्ण प्रेम गर। यस मार्गमा भागवद्भाव राखेर समर्पण गर्नु छ। भक्तिमार्गमा केही पनि छोड्ने कुरा छैन। वैष्णव भन्लान् केराका बोक्रामा पनि भगवान् हुनुहुन्छ। म यसलाई गाईलाई खुवाउँछु।

भक्तिमार्गमा समर्पण मुख्य छ। यस मार्गका आचार्य श्रीकृष्ण हुनुहुन्छ। भगवान् श्रीकृष्ण प्रत्येक मानिसमा प्रेम गर्नुहुन्छ। यस मार्गमा प्रत्येक मानिसका साथ प्रेम गर्नुपर्छ। भगवान् जस्तो प्रेमी न कोही भएको छ र न कोही होला।

एक पटक भृगु ऋषि बैकुण्ठमा गए। भगवान् सुतिरहनुभएको थियो। भृगुलाई यी कुनै विलासी जस्तो लाग्यो। यसलाई ठूलो देवता भनेर कसले भन्ने ? ऋषि परीक्षा गर्न भनी आएका थिए, त्यसकारण उनले सुतेका भगवान्को छातीमा लात हाने।

भृगुऋषिले लात मारे तर ती लात हान्नेसँग पनि मेरा प्रभु प्रेम गर्छन्। भगवान्ले ऋषिलाई— 'मेरो छाती बड़ो सारो छ र तपाईंका पाउ कोमल छन्। सायद यहाँका चरणहरूमा चोट लाग्यो होला' भनेर भगवान् ऋषिको पाउ मिच्न थाल्नुभयो।

छ कोही यस जगत्मा यस्तो प्रेम गर्ने दोस्रो ?

विष दिनेलाई पनि कृष्ण प्यारो गर्छन्। लक्ष्मीजीलाई नराम्रो लाग्यो, उनले भनिन्—'यस्तो पनि कहीं परीक्षा हुन सक्छ ? परीक्षा गर्ने यो ढङ्ग राम्रो भएन। म ब्राह्मणहरूका घर जान्नँ।' लक्ष्मीले ब्राह्मणहरूलाई त्यागिदिइन्। त्यसैले त सामान्यतः ब्राह्मण गरीब भएका छन्।

ज्ञानी मान्दछन् जबदेखि यो शारीरिक सम्बन्ध भएको छ, तबदेखि यसद्वारा दुःख भएको छ। त्यसकारण उनीहरू शरीरसँग प्रेम गर्दैनन्।

प्रेम गर्नु छ भने सबैसँग प्रेम गर। कोहीसँग पनि प्रेम गर्नु छैन भने कुनै कुरो भएन तर आफ्नो शरीरसँग प्रेम गर्दै नगर। एउटा परमात्मासँग प्रेम गर। सबैसँग प्रेम गर अथवा सबैको त्याग गर र यदि तिमी सबैको त्याग गर्न सक्दैनौ भने सबैमा ईश्वरभाव राखेर सबैसँग प्रेम गर। सबैंबाट ममतालाई त्याग गर अथवा सबै कुरा ईश्वरलाई समर्पित गरेर सबै कर्मफलहरूको त्याग गर।

सबैका प्रति ममता, मेरोपन हुनु समर्पण मार्ग हो। कुनै खासका प्रति मात्र ममता हुनु स्वार्थमार्ग हो, आज तर सबै स्वार्थमार्गी छन्।

पैसा मारो परमेश्वरने, पत्नी मारी गुरु,
छैयाँ छोकरां मारा शालीग्राम-पूजा कोनी करूँ ?

अर्थात् धन-सम्पत्ति मेरा परमेश्वर हुन्, मेरी पत्नी मेरी गुरु हो र सन्तान मेरा शालिग्राम हुन्। अब म पूजा गरूँ पनि कसको ?

जो संसारमा जागृत हुँदैन, त्यसले कहिले पनि कृष्णलाई पाउन सक्दैन। कंस, काम र अभिमान हो। त्यसले सबैलाई कारागृहमा राख्छ।

जागृत को हो ? जसले मनबाट विषय सुखको त्याग गरेर भगवान्‌को नामको जप गर्छ त्यही मात्र जागृत हो।

जगत्‌मा को जाग्रत भएको छ ? तुलसीदास भन्नुहुन्छ—

जानिय तबहिं जीव जग जागा।
जब सब विषय विलास विरागा॥

जब सबैमा विषय-विलासका प्रति वैराग्य उत्पन्न हुन्छ तब जानिलेऊ त्यो जीव जागेको छ। कपिल भन्नुहुन्छ—'माताजी, यो मन अनादि कालदेखि संसारमा बाटो बिराउँदै आएको छ। सत्सङ्गबाट मन सुध्रिन्छ। वासनाको त्याग गर्नाले मन सुध्रिन्छ। विवेकी पुरुषले सङ्ग अथवा आसक्तिलाई आत्माको बन्धन मान्दछन्, तर सन्त-महात्माहरूका प्रति जब सङ्ग या आसक्ति हुन जान्छ तब मोक्षको द्वार खुल्दछ। त्यसकारण सत्सङ्ग गर्नुहोस्।'

देवहूतिले भनिन्, 'तपाईं सत्सङ्ग गर भनेर आज्ञा गर्नुहुन्छ तर मलाई त यस संसारमा कहीं पनि कुनै सन्त देखिइँदैनन्।'

कपिल भगवान भन्नुहुन्छ—'माता, तब भन्ठान्नुहोस् तपाईं पापी हुनुहुन्छ। पाप भएमा सन्तसँग भेट भए पनि सद्‌भावना हुँदैन। सन्तलाई खोज्न तपाईं कहाँ जाने ? तपाईं सन्त बन्नुभयो भने सन्त तपाईंकहाँ भेटिने छन्।'

एकनाथ, तुकाराम, नरसिंह आदि गृहस्थ थिए। तिनीहरू घरमै बसेर सन्त भएका थिए। सन्तहरूको लक्षण जीवनमा घटाउन सक्यौ भने सन्त बन्ने छौ।

विना सत्संग सुख छैन। स्वयं सन्त नबनिकन सच्चा सन्त पाईंदैनन्। जस्तो दृष्टि उस्तै सृष्टि। क्रोधका कारणले हनुमानजीलाई सेतो फूल पनि रातो देखिन गयो।

एकनाथ महाराज रामायणको सुन्दर काण्डको कथा भनिरहनु भएको थियो।

यस सुन्दरकाण्डमा सबै कुरा सुन्दर छ। सुन्दरकाण्डको यो नाउँ यस कारणले राखिएको हो यसमा हनुमानजीलाई माता सीताजीको पराभक्तिको दर्शन भएको छ।

ब्रह्मचर्य र रामनाम भयो भने यस संसारसागरलाई तर्न सकिन्छ। सागर पारि तरेर हनुमानजी अशोक वनमा आए। एकनाथ महाराज कथामा भन्नुहुन्छ जब हनुमान अशोक वनमा आए तब त्यहाँ अशोक बाटिकामा सुन्दर सेता फूल फक्रिरहेका थिए। जहाँ सीताजी त्यहीं अशोकवन। जहाँ भक्ति त्यहीं अ—शोक ( शोकको अभाव )।

हनुमानजी त्यहाँ कथा सुन्न भनी आउनु भएको थियो। उहाँले प्रकट भएर विरोध गर्दै भन्नुभयो—'महाराज, तपाईं अशुद्ध भनिरहनु भएको छ। अशोक वनमा त्यस समयमा रातफूल फक्रिरहेका थिए, सेता होइन। मैले आफ्नै आँखाले देखेको थिएँ।' एकनाथ महाराजले भन्नुभयो 'म आफ्ना सीतारामलाई मनाएर कथा भनिरहेछु र मलाई जस्तो देखियो त्यस्तै भनिरहेछु।' अन्त्यमा यस झगड़ालाई लिएर दुवै श्रीरामका नजिक गए। रामचन्द्रजीले भन्नुभयो 'तपाईंहरू दुवै जनाको कुरा ठीक छ। क्रोधावेशले राता आँखा भएको कारणले हनुमानजीले फूल राता देखेका हुन् अन्यथा फूल तर सेतै थिए।'

जसको दृष्टि जस्तो हुनेछ उसलाई त्यस्तै सृष्टि देखिने छ। दुर्योधनलाई जगत्‌मा कोही सन्त फेला परेनन्। उसलाई सबै दुर्जनै भए। युधिष्ठिरलाई कोही दुर्जन भेटिएनन्, उनले सबैलाई सज्जन पाए।

सन्तहरूको धर्म ( लक्षण )-मा तितीक्षालाई प्राधान्य दिइएको छ। सहन गऱ्यौ भने सुखी हुनेछौ।

सन्तहरूको चरित्र पढ़। सन्तहरूलाई कति दुःख सहनुपरेको छ। तर ती दुःखहरूले सन्तमा कुनै केही पनि असर पार्दैन। अतिशय सहन जसले गर्छ त्यही सन्त हो।

एकनाथ महाराज पैठणमा बस्थे। गोदावरी नदीतिर जाने बाटामा एउटा पठान बस्थ्यो। एकनाथ महाराज त्यही बाटाबाट स्नान गर्न जाने गर्थे। त्यस पठानले महाराजलाई अति नै सताउँथ्यो, तर महाराज सबै कुरा सहन्थे।

एक दिन त्यस पठानले सोच्यो 'यी ब्राह्मण रिसाउँदैनन्, त्यसकारण आज म यिनलाई क्रोधित पारेरै छोड्छु।' महाराज स्नान गरेर फर्किरहेका थिए। त्यस पठानले महाराजलाई थुकिदियो। महाराज दोस्रो पटक स्नान गर्न गए। फेरि त्यस पठानले महाराजमाथि थुकिदियो। कैयौं चोटि यो क्रम चलिरह्यो तर महाराज क्रोधित भएनन्। गोदावरीसँग उनी भन्न थाले 'तिम्रो कृपा हो तिमीले मलाई स्नान गर्नलाई पटक-पटक बोलाइरहिछौ। त्यो पठान चाहे दुर्जनता गरिरहोस् म आफ्नो सज्जनता छोड्न सक्तिनँ।' पठानले एक सौ आठ पटक महाराजमाथि थुक्यो र त्यति पटक

महाराजले गोदावरीमा स्नान गरे। अन्त्यमा त्यो पठान लज्जित भयो। उसले महाराजको गोड़ा छोयो र क्षमा माग्यो। उसले भन्यो—'महाराज तपाईं सन्त हुनुहुँदोरहेछ, ईश्वर हुनुहुन्छ। मैले यहाँलाई चिन्न सकिनँ।' महाराजले उत्तर दिए 'क्षमाको कुनै प्रश्नै छैन। तिम्रै कारणले आज मलाई एक सौ आठ पटक गोदावरी स्नानको पुण्य मिल्यो।'

शान्ति त्यसैको बसिरहन्छ जो भित्रबाट ईश्वरको सम्बन्धमा छ। जो ईश्वरबाट टाढ़ा रहन्छ त्यसलाई शान्ति कहाँबाट पाइएला?

कपिलजी भन्नुहुन्छ—'माता, जो ज्यादा सहन गर्छ त्यही मात्र सन्त बन्न सक्छ। अतिशय विपत्तिमा पनि जो ईश्वरको अनुग्रह संझन्छ, त्यही महान् वैष्णव हो।'

दुष्ट मानिस कसैलाई पनि असल देख्न सक्तैनन्। दुष्टहरूले तुकारामलाई गधामाथि बसाए। तुकारामकी पत्नीलाई बड़ो दुःख लाग्यो तर तुकारामले उनीसङ्ग भने 'मेरा विट्ठलनाथजीले मलाई जो गरुड़ पठाइदिनु भएको छ म त्यसैमाथि चढ़ेको छु।' सबैले गधा देखे तर तुकारामकी पत्नीले गरुड़ देखिन्।

जगत्मा सबै कुरा सहँदै गर।

जगत्मा अन्धकारको अस्तित्व छ। त्यसकारण प्रकाशको मूल्य छ।

सन्तको पहिलो लक्षण तितीक्षा हो र दोस्रो हो करुणा, तेस्रो लक्षण हो सबै देहधारीका प्रति सुहृद्भाव। आजातशत्रु, शान्त, सरल स्वभाव आदि पनि सन्तहरूका लक्षण हुन्। शान्तिको परीक्षा प्रतिकूलतामा हुन्छ। अर्थ, धन, सम्पत्तिसँग प्रतिदिन सम्बन्ध राख्छौ तर त्यसका साथ-साथ परमात्मासङ्ग पनि सम्बन्ध राख्यौ भने सम्पत्ति पाइने भो र शांति पनि। भागवतकार भन्दछन् यस जीवन गाड़ीको केवल फलेक मात्र फेर्नु छ। ईश्वरका निमित्त केही न केही त्याग।'

सन्त पुरुष प्रभुको हितार्थ सर्वस्वको त्याग गर्छन्। ''मत्कृते त्यक्त कर्माणिः त्यक्त स्वजन बान्धवाः।'' सन्त मेरो अर्थात् परमात्माको सम्पूर्ण कर्म तथा आफ्ना सङ्गीसम्बन्धीहरूको त्याग गर्छन्। सन्त परमात्माका निमित्त संसारका विषयहरूलाई बुद्धिपूर्वक त्याग गर्छन्।

भगवान् परीक्षा गरेर मात्र आफ्नो गराउनु हुन्छ—

**भूखे मारूँ, भूखे सुवाडुँ।**
**तननी पाडुं छाल, पछी करीश न्याल।**

म भोकले व्याकुल गराउँला, भोकै सुताउँला। शरीरलाई गलाइदिउँला र तब उसलाई मालामाल गराइदिउँला।

भगवान्ले नरसिंह मेहताको कति पटक परीक्षा लिनुभएको थियो।

तर हे भगवान्! यस कलियुगमा तपाईं यस्तो परीक्षा गर्नुहुनेछ कोही पनि तपाईंको सेवा गर्न सक्ने छैन।

भगवत्-परायण भएर भगवान्का कथाहरूको श्रवण-कीर्तन गरून्, भगवान्मा नै चित्त रमाइरह्यो भने भक्तिको विकास हुन्छ। भगवान्को कथा सुन्नाले श्रद्धा दृढ हुन्छ। त्यसपछि भगवान्का प्रति आसक्ति बढ्छ। आसक्ति बढ्नाले व्यसनात्मिकता शक्ति प्राप्त हुन्छ र जसको भक्ति व्यसनात्मिकता बन्ला, त्यसको मुक्ति सुलभ हुन्छ। भक्ति जब व्यसन जस्तो उत्कृष्ट बन्दछ तब ईश्वरका नजिक पुऱ्याउँछ।

'हे माता ! तीव्र भक्तिविना मुक्ति पाउन सकिँदैन। तीव्र भक्तिको अर्थ हो व्यसनात्मिकता भक्ति।'

तुकारामले भक्तको बढ़ो राम्रो व्याख्या गरेका छन्। एक क्षण पनि जो भगवान्सँग विभक्त हुन पाउँदैन त्यही मात्र भक्त हो। ''तीव्रेण भक्तियोगेन।''

माता देवहूतिलाई तीव्र भक्ति गर्ने आज्ञा दिइएको छ। तीव्र भक्तिको अर्थ हो—एक क्षण पनि ईश्वरसँग विभक्त नहुनु।

यस्ता तरहले, प्राकृतिक गुणहरूद्वारा निष्पन्न शब्दादि विषयहरूको त्याग गरेर, वैराग्ययुक्त ज्ञानबाट, योगबाट र मेराप्रति गरिएको सुदृढ़ भक्तिबाट मानिसले आफ्नो यसै देहमा, आफ्नो अन्तरात्माका समान मलाई प्राप्त गरिलिन्छ।

भगवान्को अहैतुकी निष्कामभावना भक्तिभन्दा श्रेष्ठ छ।

कपिल भगवान् माता देवहुतिलाई भन्नुहुन्छ—'यी सबै जो दृश्यमान छन् ती सबै सत्य होइनन्। स्वप्न असत्य हुँदा-हुँदै पनि सुख-दुःख दिन्छ, जस्ता प्रकार स्वप्न देख्नेलाई आफ्नो टाउको नकाटिए पनि उसलाई काटिएको भ्रान्ति हुन्छ र त्यो रुन थाल्छ। त्यसै प्रकारले अविद्याको कारण जीवात्मालाई सबै भ्रान्ति हुन्छ। यसैलाई माया भन्छन्। वस्तु नभए पनि त्यो स्वप्नमा देखिन्छे, त्यस्तै किसिमबाट तात्त्विक दृष्टिले केही नहुँदै पनि जाग्रत् अवस्थामा माया र अज्ञानका कारणले सब कुराको आभास हुन्छ।'

कपिल अगाड़ि भन्नुहुन्छ—'माता, जगत् स्वप्न जस्तो लाग्छ। यो सिद्धान्त भागवतमा बराबर यस निमित्त भनिन्छ जसलाई जगत्को पदार्थका निमित्त मोह नजागोस्। संसारका विषयहरूप्रति पूर्णतः वैराग्य होस् यसैले यो भनिएको हो।'

सांसारिक सुखको उपभोगको लोभ जबसम्म बनिरहन्छ तबसम्मलाई तिमी सुतेकै छौ। जागा हुनेलाई मात्र कृष्ण भेटिनुहुन्छ। सुख भोग्ने इच्छा बड़ो दुःखद छ। भागवत् ध्यानमा जगत् बिर्सिएपछि ब्रह्म सम्बन्ध जोड़िन्छ। ध्यान गर्दा पहिले शरीरलाई स्थिर गर, फेरि आँखाहरूलाई स्थिर गर अनि अन्त्यमा मनलाई स्थिर गर।

जबसम्म शरीर र आँखाहरू स्थिर हुँदैनन् तबसम्म मन स्थिर हुन पाउँदैन। आँखाहरूमा श्रीकृष्ण स्थिर हुनुभएपछि मन शुद्ध हुन्छ। भागवत गोवर्धननाथको स्वरूप हो। श्रीकृष्णाको स्वरूपमा ध्यान राखेर कथा सुन, आँखाहरू श्रीकृष्णामा र प्राण कानहरूमा स्थिर गरेर कथा सुन।

जसले ध्यान गर्नु छ, उसले एक आसनमा बसोस् र मन स्थिर गरोस्। ध्यान गर्दाखेरि संसारलाई मनबाट बाहिर निकालिदेऊ।

ध्यान गर्नाले मन स्थिर हुन्छ, विना ध्यानको दर्शन परिपूर्ण हुँदैन।

भोगभूमिमा बसेर भगवान्‌को ध्यान गर्नु बड़ो टेढ़ो काम छ। संसारमा बसेर ज्ञान-भक्तिमा निष्ठा राख्न सजिलो छैन। भूमिको मनमाथि अवश्य प्रभाव पर्छ। ध्यान गर्नेले पवित्र र एकान्तस्थानमा बसेर ध्यान गरोस्।

कपिल भन्नुहुन्छ—'माता, जसलाई ध्यान गर्नु छ, त्यसले परिमित मात्रामा पवित्र भोजन गरोस्। आहार सात्त्विक र थोरै हुनुपर्छ। जसलाई अजीर्ण हुन्छ, त्यसले ब्रह्मचर्यको सेवन गर्न सक्दैन।'

जसलाई ध्यान गर्नु छ त्यसले चोरी नगरोस्। 'अस्तेयम्।' मानिस कतिपटक आँखा र मनले पनि चोरी गर्छ। अन्य वस्तुसरह मानसिक चिन्तन पनि चोरी हो।

जो ध्यान गर्न चाहन्छ, त्यसले ब्रह्मचर्यको पालन गर्नुपर्छ। सबै इन्द्रियहरूद्वारा ब्रह्मचर्यको पालन गरियोस्। कति मानिस शारीरिक ब्रह्मचर्यको पालन गर्छन् तर मानसिक ब्रह्मचर्यको पालन गर्दैनन्। ब्रह्मचर्यको मानसिक भङ्ग, शारीरिक भङ्ग जस्तै हो। मनले गर वा आँखाले गर तर चोरी, चोरी हो। त्यसकारण प्रत्येक इन्द्रियले ब्रह्मचर्य पालन गर। केवल शरीरले मात्र होइन मनले पनि ब्रह्मचर्यको पालन गर। एक दिनको ब्रह्मचर्य भङ्गले चालीस दिनसम्म मनस्थिर हुन पाउँदैन। जबसम्म देहको भान छ तबसम्म धर्मलाई नछोड़।

यसपछि ध्यानको विधि बताइएको छ, जसको वर्णन अघिबाटै भइसकेको छ।

कपिल भगवान्‌ले माता देवहूतिलाई ध्यान गर्न भन्नुभयो। ध्यानका विना ईश्वरको अनुभव हुँदैन। राती सुत्नुभन्दा अघि प्रभुको ध्यान गर।

उहाँ भन्नुहुन्छ—'माता, परमात्माका अनेक स्वरूप छन्, यिनमध्ये कुनैलाई पनि इष्टदेव मानेर ध्यान गर्नू।'

व्यासजीले कुनै विशेष स्वरूपको आग्रह गर्नुभएन। तिमीलाई जुन पनि स्वरूप मन पर्छ उसैको ध्यान गर।

हे माता ! तपाईंले चतुर्भुज नारायणको ध्यान गर्नुहोस्।'

ध्यान गर्नुभन्दा अघिबाट ठाकुरजीसँग सम्बन्ध स्थापित गर्नु जरूरी छ। दास्य भक्तिमा पहिले चरणहरूमा दृष्टि स्थिर गर्नुपर्छ।

बारम्बार मनलाई कुनै पनि एक स्वरूपमा स्थिर गर। ध्यानमा तन्मयता भएपछि संसार विस्मरण हुन्छ। ध्यानमा देहभान र जगत्‌भान विस्मृत भइहाल्छ। जसै-जसै संसारको विस्मरण हुँदै जान्छ तसै-तसै प्रभुस्मरणमा आनन्द आउन थाल्दछ।

चिनीकी एउटी पुतली समुद्रको गहिरो नाप्नालाई भित्र गई तर गएको गयै भई। परमात्मा समुद्रजस्तै व्यापक हुनुहुन्छ, विशाल हुनुहुन्छ। ज्ञानी पुरुष परमात्मा-स्वरूपका साथ यसरी पग्लिन्छ

मिलन हुन्छ फेरि ऊ यो भन्न सक्दैन यी जान्दछन् वा जान्दैनन्। ध्यान गर्ने मानिस ध्यान गर्दा-गर्दै ध्येयमा मिल्न जान्छ। यही अद्वैत हो। ध्यान गर्ने मानिसको ''अहम्—मेरो पन'' ईश्वरसँग मिलिहाल्छ। देहभानको विस्मृत भएपछि जीव र शिव एक भइहाल्छ।

केही ज्ञानीहरू भेदभावले ध्यान गर्दछन् भने केही ज्ञानीहरू अभेदभावाट। पहिले भेदभावबाट ध्यान गर्छन् र पछि अभेदभावले।

फेरि जीवको जीवत्व ईश्वरमा मिल्न जान्छ, जीवत्व स्वतन्त्र बस्न पाउँदैन। जस्ता प्रकारले कीरा भँवरीको स्मरण गर्दै स्वयं भँवरी हुन जान्छ, त्यस्तै किसिमबाट जीव ईश्वरको चिन्तन गर्दा-गर्दै प्रभुमय हुन जान्छ, दुवैको मिलन भएपछि जीवभाव रहँदैन।

तुलसदासजीले रामचरितमानसमा भन्नुभएको छ—

सोई जानइ जेहि देहु जनाइ।
जानत तुम्हहि तुम्हहि होई जाई॥

तर यसलाई कसले थाहा पाउन सक्छ? जसमाथि ती (प्रभु) स्वयं कृपा गर्दछन् उही उनलाई (प्रभुलाई) थाहा पाउन सक्छ र फेरि उसलाई (प्रभुलाई) थाहा पाएर त्यो तन्मय (ईश्वरमय) भइहाल्छ।

ध्याता जुन स्वरूपको ध्यान गर्छ, त्यही ध्येयको शक्ति ध्याता (ध्यानकर्त्ता)-मा आउँछ।

शङ्कराचार्यको जीवनको एउटा प्रसङ्ग छ। एउटा यवनले भन्यो, 'म भैरव-यज्ञ गर्न चाहन्छु। भैरव-यज्ञमा पृथ्वीको चक्रवर्ती राजाको टाउको आहुति दिनुपर्छ। त्यो त पाइँदैन, त्यसकारण तिमीनै आफ्नो शिर बनाइदेऊ। तिमीले स्वयं भनेका थियौ आत्मा देहबाट भिन्न छ, परमात्माबाट भिन्न छ। देहदानबाट तिमी मर्ने छैनौ, त्यसकारण शिर मलाई देऊ।'

शङ्कराचार्यले भन्नुभो—'मेरो शारीरिक शिरबाट यदि तिम्रो काम बन्न सक्छ भने लैजाऊ।'

शङ्कराचार्यजीको देहाध्यास हटिसकेको थियो त्यसकारण उहाँ शिर दिन तयार हुनुभयो। उहाँले भन्नुभयो, 'जब शिष्य यहाँ नहोला म ध्यानमग्न हौंला तब आएर मेरो शिर लिएर जानू।'

एक दिन मठमा जब अरू कोही थिएनन् तब त्यो यवन शिर लिन आयो।

भगवान् शङ्करका शिष्य पद्मपाद (जो नृसिंह स्वामीका भक्त थिए)-लाई गङ्गा किनारमा धेरै पटक अपशकुन भयो। त्यसकारण उनी दौड़िँदै आश्रममा फर्किएर आए। उनले त्यहाँ देखेकि एक यवन तलवार लिएर गुरुजीको सिरमा प्रहार गर्ने तरखरमा थियो। पद्मपादले क्रोधसाथ सिंह बनेर त्यस यवनलाई चिरफार गरेर मारिदिए।

यो प्रसङ्गले हामीलाई यो सिकाउँछ उपासकमा उपाश्यको शक्ति आरोपित हुन्छ। नृसिंह स्वामीको ध्यान गर्नाले पद्मपादमा नृसिंहको आवेश उत्रिएर आयो।

शुकदेवजी वर्णन गर्नुहुन्छ—

'रक्सीबाट मदान्ध भएको व्यक्तिलाई देहभान रहँदैन। त्यस्तै प्रकार ध्यान गर्दै जो देहभान बिर्सिन्छ, त्यो भगवान्का पछि पर्न जान्छ। प्रभु प्रेममा जो पागल भएको छ, त्यो सुखी हो र अन्य सबै दुःखी हुन्।'

भगवान्का सिवाय अरू कोही छँदै छैन ! त्यस समयमा द्रष्टा पनि भगवद्-रूप हुन जान्छ। यो अपरोक्ष साक्षात्कार हो। यस्तो तन्मयता भएपछि भक्ति सुलभ हुन्छ।

कपिल उपदेश दिनुहुन्छ—'माता, यी सबको अपेक्षा श्रीकृष्णको ध्यान गर्दै जो व्यक्तिले देहभान बिर्सिन्छ, त्यो सर्वश्रेष्ठ हो।'

प्रेम अन्योन्य हुन्छ। तिमीले कृष्णको स्मरण गऱ्यौ भने उहाँले पनि तिमीलाई बिर्सिनुहुने छैन।

एकपटक नारदजी बैकुण्ठलोकमा आउनुभयो। लक्ष्मीजी त्यहाँ हुनुहुन्थ्यो तर भगवान् देखिनुभएन। यताउति खोजेपछि उहाँले देख्नुभयो भगवान् ध्यान लगाएर बसिरहनु भएको।

भगवान्ले जवाफ दिनुभयो—म आफ्ना भक्तहरूको ध्यान गरिरहेछु।

भगवान् आफ्ना प्रिय भक्तहरूको ध्यान गर्नुहुन्छ।

नारदजीले सोध्नुभयो 'यी वैष्णव के तपाईंभन्दा पनि श्रेष्ठ छन् र तपाईं उनको ध्यान गर्नुहुन्छ।?'

भगवान्ले भन्नुभयो—'हो, उनीहरू मभन्दा पनि श्रेष्ठ छन्।'

तब नारदजीले भन्नुभयो, 'आफ्नो कुरा सिद्ध गरेर देखाउनुहोस्।'

भगवान्ले प्रश्न गर्नुभयो—'जगत्मा सबभन्दा ठूलो को छ ?'

नारदले भन्नुभयो—'पृथ्वी।'

प्रभुले भन्नुभयो—'पृथ्वी शेषनागको शिरमाथि आधार राख्दछिन्, फेरि उनी कसरी श्रेष्ठ मानिने ?'

नारदजी—'त्यसो भए शेषनाग ठूलो हुनुहुन्छ।'

भगवान्—'त्यो कसरी ठूलो भयो ? त्यो शंकरजीको हातको चुरो हो। अतः शेषभन्दा शिवजी महान् हुनुहुन्छ। ऊभन्दा ठूलो रावण हो, किनभने उसले कैलाश पर्वत उठाइलिएको थियो। रावण पनि कसरी ठूलो मानिने, किनभने बालीले उसलाई आफ्नो काखीमुनि च्यापेर सन्ध्या गर्थ्यो। बाली कसरी ठूलो मानिने किनभने उसलाई रामजीले मार्नुभएको थियो।'

नारदजी—'तब तपाईंनै श्रेष्ठ हुनुहुन्छ।'

भगवान्—'होइन, म पनि श्रेष्ठ छैन। मेरो अपेक्षा मेरा भक्तजन श्रेष्ठ छन् किनभने म भक्तहरूको हृदयमा अटाएको छु। मलाई आफ्ना हृदयमा राखेर यी भक्तजनहरू सारा व्यवहार चलाउँछन्। अतः यी ज्ञानी भक्त बरू मभन्दा र सबैभन्दा श्रेष्ठ छन्।'

भगवान्का भक्त भगवान्भन्दा पनि अगाड़ि छन्, बढ़ेर छन्।

**रामसे अधिक रामकर दासा।**

मेरो निष्काम भक्त कुनै प्रकारको मुक्तिको इच्छा गर्दैन। मेरो सेवा बाहेक ऊ कुनै अरू इच्छा राख्दैन।

सालोक्य सार्ष्टिसामीप्यसारूप्यैकत्वमप्युत।
दीयमानं न गृह्णन्ति विना मत्सेवनं जनाः॥

(भा० ३-२९-१३)

मेरा निष्काम भक्त मेरो सेवालाई छोड़ेर सालोक्य, सार्ष्टि, सामीप्य, सारूप्य र सायुज्य मुक्तिलाई पनि स्वीकार गर्ने छैनन्। नरसिंह मेहताले गाएको छ—

हरिना जन तो मुक्ति न माँगे, माँगे जनम-जनम अवतार रे;
नित सेवा, नित कीर्तन, ओच्छाव, निरखवा नन्दकुमार रे;
धन्य वृन्दावन, धन्य ए लीला, धन्य ए ब्रजनां वासी रे;
अष्ट महासिद्धि आँगनणीये ऊभी, मुक्ति छे ऐमनी दासी रे;
भूतल भक्ति पदारथ मोटूँ, ब्रह्मलोकमाँ नाहीं रे।

अर्थात् हरिजन मुक्ति होइन, जन्म-जन्ममा अवतार चाहन्छन् जसले गर्दा प्रभुको नित्य सेवा, कीर्तन, उत्सव गरेर नन्दकुमारको दर्शन गर्न पाइयोस्। वृन्दावन धन्य छ, लीला धन्य छ र ती व्रजवासीहरू पनि धन्य छन् जसका आँगनमा अष्टमहासिद्धि उभिएकी छिन् र मुक्ति जसकी दासी छिन्। ब्रह्मलोकमा पनि जो प्राप्त हुन सक्तैन यस्तो श्रेष्ठ पदार्थभक्ति केवल पृथ्वीमा मात्र पाइन्छ।

मेरा भक्तजन मेरो प्रेमरूपी अप्राकृत स्वरूपलाई प्राप्त गर्छन्, जबकि देह, गेहमा आसक्त पुरुष अधोगति पाउँछन्।

कपिलजी भन्नुहुन्छ—'माता, अरू म के भनूँ? ईश्वरसङ्ग टुक्रिएको जीव कहिल्यै सुखी हुन सक्तैन।'

वृद्धावस्थामा यो शरीर जर्जर हुन्छ, तर मन र बुद्धि तन्नेरी रहन्छन्। यौवनमा जुनको उपभोग गरिएको थियो, तिनै सुखहरूलाई बराबर संझिरहन्छ। भगवान्को चिन्तन हुन नसकेमा केही हानि छैन, तर सांसारिक विषयहरूको चिन्तन कहिल्यै गर्दै नगर, वृद्धावस्थामा दुःख सहनुपर्छ, सेवा कसैले गर्दैनन्।

यदि तिमी आफ्ना माता-पिताको सेवा गर्छौ भने तिम्रो वृद्धावस्थामा तिम्रा सन्तानहरूले तिम्रो सेवा गर्नेछन्। माता-पिता, गुरु, अतिथि र सूर्य यी पाँच यस संसारमा प्रत्यक्ष देव हुन्। उनको सेवा गर।

मानिससङ्ग वृद्धावस्थामा धन भएन भने त्यसको दशा कुकुरको जस्तो हुनेछ। ''गृहपाल इवाहरन्।'' वृद्धावस्थामा दुःखी भए पनि ममता, माया छुट्दो रहेनछ। अरूहरूलाई सुखी गरायौ भने सुखी हुने छौ।

वृद्धावस्थामा शरीर दुर्बल भएपछि पनि सत्सङ्ग र भजन गर्नाले मन र जिब्रो तरुणो हुन जान्छ। वृद्धावस्थामा यस जिब्रोले अतिनै सताउँछ। पाचनशक्ति ठीक नभएमा पनि बारम्बार खाने इच्छा हुन्छ। शरीर ठीक रहेसम्म आफ्नो जीत छ। यतिकैमा प्रभुलाई प्रसन्न गर्‍यौ भने पारि तरिहाल्यौ।

बूढो खाटमा सुतिरहेछ। दिशा पिसाब पनि ओछ्यानमै गर्नुपर्छ। केही 'पापीहरू'-लाई तर यसैलोकमा नरक-यातना भोग्नुपर्दछ। मृत्युको ६ महीना अगाडिदेखि यमदूतको स्वरूपमा दर्शन हुन्छ। अति पापीलाई तर वृद्धावस्थामा यमदूत देखा पर्छन्। जसका निमित्त पानी जस्तो पैसाको खोलो बगायो। तिनीहरू स्वयं त्यस मरणको किनारमा पुगेको बूढोको मरणको हतारिएर बाटो हेरिरहेछन्। मर्दा-मर्दै पनि हामीलाई केही दिएर जालान्, यस्तो सोचेरै आप्तवर्ग उसको सेवा गर्छन्। सबै स्वार्थी नाता कुटुम्ब आइपुग्छन्। नाता कुटुम्बलाई भागवतले स्याल-कुकुरजस्तो भनेको छ। छोरीहरू पनि बड़ी लोभी हुन्छन्। बाबुको बिमारीको समाचार सुन्नासाथ दौड़ेर आउँछन् ''पिताजी, म तपाईंकी मणि, मलाई चिन्नु भएन ?'' तर मणि बहिनीले अलिकता पनि प्रकाश दिन सकिनन्। ऊ रोइरहेछ। ऊ जान्दछ, स्त्री या सन्तान कोही साथ जाँदैनन्। मलाई एक्लै जानुपर्नेछ। तैपनि विवेक चाहिँ आउँदैन।

यमदूतले यस जीवात्मालाई शरीरभित्रबाट बाहिर तानेर निकाल्छन्। अन्तकालमा दुइ यमदूत आउँछन्—पुण्य पुरुष र पाप पुरुष। दुवै यमदूतले जीवात्मालाई मार्दछन्। पुण्य पुरुष जीवलाई भन्छ : 'पुण्य गर्ने अवसर तिमीलाई दिएको थियो, तैपनि तिमीले पुण्य कमाएनौ।' मर्ने समयमा जीव बड़ो छट्पटाउँछ। यमदूतहरूको गति पैतालादेखि आँखासम्म हुन्छ।

ब्रह्मरन्ध्रमा जसले आफ्नो प्राणलाई स्थिर गर्न सक्छ, त्यसको यमदूतले केही गर्न सक्तैन।

मृत्युपछि पूर्वजन्मको संज्ञना हुँदैन।

स्थूल शरीरभित्र सूक्ष्म शरीर हुन्छ र सूक्ष्म शरीरभित्र कारण शरीर। सूक्ष्म शरीरभित्र बसेका वासनाहरू पनि कारण शरीर हुन्।

यमदूत जीवात्मालाई आफ्ना साथै यमपुरी लैजान्छन्। अतिशय पापी व्यक्तिका निमित्त यमपुरीको मार्ग भयङ्कर हुन्छ। पापीले तातो बालुवामा हिँड्नुपर्छ।

जीवात्मालाई उसले गरेका पापहरूको सूची यमको राजसभामा चित्रगुप्तले सुनाउँछन्। चौध साक्षीहरू पनि उपस्थित गराइन्छन्। ती साक्षी हुन्—पृथ्वी, चन्द्र, सूर्य आदि। जीवात्मालाई उसका पापहरूका अनुसार नरक-दण्ड दिइन्छ। यदि कसैको पाप-पुण्य समान भयो भने उसलाई चन्द्रलोकमा पठाइन्छ। पुण्यको समाप्तिपछि जीवलाई फेरि मनुष्यलोकमा जन्म लिनुपर्छ। कति जन्म-मरणको दुःख उसलाई भोग्नुपर्छ।

वृन्दावनमा एक महात्मा बस्थे। उनी एक पटक ध्यानमा बसेका थिए। एउटा मूसो उनको काखमा लुक्यो, किनभने त्यसका पछि बिरालो दगुरिरहेको थियो। महात्माले दयापूर्वक त्यस मूसालाई भने 'तिमी जस्तो इच्छा गर्छौ त्यस्तै तिमीलाई बनाइदिन्छु।' मुसाको बुद्धि आखिर कस्तो हुन सक्छ ? त्यसले सोच्यो यदि म बिरालो बनें भने फेरि कसैको पनि कतैतिरबाट डर रहने भएन।

मूसाको मागअनुसार महात्माले उसलाई बिरालो बनाइदिए। एक पटक त्यस बिरालालाई एउटा कुकुरले लखेट्यो तब उसले कुकुर बन्न चाह्यो। त्यो कुकुर भयो। त्यसलाई एकपटक जंगलमा बाघले लखेट्यो। उसले महात्मासङ्ग बाघ बन्ने इच्छा गऱ्यो। महात्माले त्यसलाई बाघ बनाइदिनुभयो। अब त्यसको मति भ्रष्ट भयो र हिंस्रक वृत्ति जागेर आयो। उसले सोच्यो म यी महात्मालाई खाइहालौं जसले गर्दा यिनले मलाई फेरि मूसो बनाइदिन नसकून्। जब त्यो महात्मालाई खान भनेर आयो तब महात्माले भने तँ मलाई खान चाहन्छस् भनेर उनले फेरि बाघलाई मूसो बनाइदिए।

यो कथा केवल मूसो-बिरालोको होइन, हाम्रो पनि हो। यो जीव कहिले मूसो थियो, बिरालो थियो र अब मानव भएर भन्न थाल्यो म ईश्वरलाई मान्दिनँ। धर्म मलाई स्वीकार्य छैन। तब भगवान पनि सोच्नुहुन्छ अब तँ कहाँ जालास् र ? म तँलाई फेरि मूसो-बिरालो बनाइदिउँला। यस मनुष्य जन्ममा जीवले ईश्वरलाई चिन्ने र प्राप्त गर्ने प्रयत्न नगरेमा त्यसलाई फेरि पशु बन्नु पर्नेछ।

पशु-पक्षीहरूका अवतारहरूमा कति प्रकारका कष्ट सहन गरेपछि जीवले मनुष्ययोनि पाउँछ। गर्भाधानका दिन जीव पानीको फोका जस्तो सूक्ष्म हुन्छ। दस दिनपछि त्यो फल जस्तो ठूलो हुन्छ, एक महीनापछि गर्भ टाउको भएको हुन्छ। दुई महीनापछि हात-गोड़ा, तीन महिनापछि कपाल र नङ, चार महीनापछि सात धातु, पाँच महीनामा भोक-प्यासको ज्ञान, ६ महीनामा माताको पेटमा भ्रमण यस्तो क्रम हुन्छ। अनेक जन्तु उत्पन्न हुनसक्छन्। बिष्ठा-मूत्रले भरिएको भागमा जीवले बस्नुपर्छ। जन्तुको टोकाइले ऊ मूर्च्छित हुन्छ। आमाद्वारा खाइएको पीरो, तीतो, अमिलो आदि आहारबाट पनि उसका अङ्गहरूमा वेदना हुन्छ। यस प्रकार गर्भमा त्यसले कैयौं प्रकारको कष्ट बेहोर्छ, पिञ्जड़ामा बन्द पक्षी जस्तै ऊ केही पनि गर्न असमर्थ हुन्छ। सातौं महीनामा जीवात्मालाई पूर्व जन्मको ज्ञान हुन्छ। त्यो गर्भमा प्रभुको स्तुति गर्न थाल्छ। 'नाथ ! मलाई बाहिर निकालिदिई बक्सियोस्। गर्भवास र नरकवास एक समान हो। मलाई बाहिर निकालिदिइबक्सियो भने म तपाईंको सेवा गर्नेछु, भक्ति गर्नेछु।' गर्भमा जीव ज्ञानी हुन्छ। भगवान्का सामुन्ने ऊ अनेक प्रकारका प्रतिज्ञाहरू गर्दछ। 'मलाई बाहिर झिकिदिनुहोस्, म बहुतै दुःखी छु।' प्रसव-समयको पीड़ाले गर्दा उसले पूर्वजन्मको ज्ञान बिर्सन्छ। जीव अनादि कालदेखि बाल्यावस्थामा, यौवनमा र वृद्धावास्थामा दुःख खप्दै आएको छ।

जन्म-मरणको दुःख एक समान हो। तिनको कहिल्यै अन्त्य हुँदैन।

जन्म हुनासाथ मायाको स्पर्श भइहाल्छ। संसारमा माया कसैलाई छोड्दिन।

जीवले एकै वस्तुसँग प्रेम गऱ्यो भने ईश्वर खुशी हुनुहुन्छ। जीव बाल्यावस्थामा आमासँग र फेरि खेलौनासँग प्रेम गर्छ। फेरि अलिकति ठूलो भएपछि पुस्तकसँग प्रेम गर्न थाल्दछ। पुस्तकहरूको मोह घट्दा नघट्दै रुपियाँ-पैसासँग प्रेम गर्न थाल्दछ। फेरि पत्नीसँग प्रेम गर्न थाल्दछ। पत्नीसँग उसले भन्छ म तेरा निम्ति हजारौं रुपियाँ खर्च गर्न सक्छु। त्यो पत्नीको इशारामा नाच्न थाल्दछ। तर पत्नीप्रेम पनि सँधै रहँदैन। दुइ-चार केटाकेटी भएपछि व्याकुल हुन थाल्छ। सन्तानहरू भएपछि पत्नीको मोह घट्न थाल्दछ। प्रभुको माया बड़ो विचित्र छ। विवाहित पनि पछुताउँछ र अविवाहित पनि।

अनेक जन्महरूमा यो जीव यस्तै किसिमबाट भट्कँदै आएको छ। त्यसकारण कपिल भगवान् भन्नुहुन्छ—'माता, अब पनि तपाईंलाई कति रल्लिनु छ? आफ्नो मनलाई संसारका विषयहरूबाट हटाएर प्रभुमा स्थिर गर्नुहोस्।'

परमात्माका चरणको आश्रय ग्रहण गरेर जन्म-मरणको चक्करबाट जो मुक्त भएको छ, त्यसैको जीवन सफल भएको छ, यस्तो भन्ठान।

आमालाई उपदेश दिएर कपिल भगवान् त्यहाँबाट जान थाल्नुभयो। आमासँग आज्ञा माग्नुभयो।

कपिल भगवान् कलकत्ताको नजीक संगम तीर्थमा पुग्नुभयो। आज पनि वहाँ उनको दर्शन हुन्छ। समुद्रले कपिल नारायणको स्वागत गरे।

माता देवहूति सरस्वतीको किनारमा गएर बस्नुभयो। स्नान गर्नुहुन्छ, ध्यान गर्नुहुन्छ त्यसकारण मनको शुद्धि हुन्छ। मनलाई नारायणको चिन्तन गर्दागर्दै मुक्ति पाइयो, उहाँलाई सिद्धि प्राप्त भएको कारणले त्यस गाउँको नाउँ सिद्धपुर भयो। देवहूतिको उद्धार भएको कारणले त्यसको दोस्रो नाउँ मातृगया पनि भयो।

यस कपिलगीताको श्रवणले श्रोता-वक्ता दुवैको पाप नष्ट हुन जान्छ।

अनेक प्रकारको कर्म, यज्ञ, दान, तप, वेदाध्ययन, वेदविचार, मन-इन्द्रियहरूको संयम, कर्म त्याग, अनेक प्रकारका योगाभ्यास, भक्तियोग, प्रवृत्तिमार्ग-निवृत्तिमार्ग र सकाम-निष्कामधर्म, आत्मतत्त्वको ज्ञान तथा दृढ वैराग्य यी सबै साधनहरूद्वारा सगुण-निर्गुणरूप परमात्माको प्राप्ति गर्न सकिन्छ। यी सबै मार्गहरूबाट प्राप्त गर्ने तत्त्व एउटै हो—परमात्मा।

# ❀ चतुर्थ स्कन्ध ❀

प्रथम स्कन्धमा अधिकारको वर्णन गरिएको छ। भागवतका श्रोता कस्तो हुनुपर्छ इत्यादि कुराहरू भनिएको छ। दोस्रो स्कन्धमा ज्ञानलीला वर्णन गरिएको छ। मरण जब नजिक आएको हुन्छ तब जीवले कस्तो व्यवहार गरोस् त्यस समयमा मनुष्य मात्रको के कर्त्तव्य छ, आदिको ज्ञान गुरुले द्वितीय स्कन्धमा दिएको छ।

पात्रताको अभावमा ज्ञान टिक्दैन। सुपात्रको अभावमा ज्ञानले शोभा पाउँदैन। धन र ज्ञानले सुपात्रको विना शोभा पाउँदैनन्।

जबसम्म ज्ञान क्रियात्मक हुँदैन तबसम्म त्यो अज्ञान जस्तै हुन्छ। धेरै जान्न खोज्नुको अपेक्षा जति जानिलिएको छ त्यसलाई जीवनमा उतार्ने प्रयत्न गर्नुपर्छ। ज्ञान जबसम्म क्रियात्मक हुँदैन तबसम्म त्यसको केही मूल्य हुँदैन। जब ज्ञान क्रियात्मक हुन्छ अनि त्यसले शान्ति दिन्छ। ज्ञानलाई शब्दरूपमै रहन नदेऊ, त्यसलाई क्रियात्मक बनाऊ। विचार गरेपछि ज्ञान हुन्छ ज्ञानको अन्त न कहिल्यै भयो न कहिल्यै हुने छ। तर जब ज्ञान क्रियात्मक बन्दछ तब शान्ति पाइन्छ।

गुरुद्वारा पाइएको ज्ञानलाई क्रियामा र जीवनमा कुन प्रकार उतार्नुपर्छ यो कुरो तेस्रो स्कन्धमा भनिएको छ। ज्ञान र क्रियाको मधुर मिलन कसरी गर्नुपर्छ यो कुरा तेस्रो स्कन्धमा भनिएको छ।

कपिल अर्थात् जो जितेन्द्रिय छन् उनैले ज्ञानलाई पचाउन सक्छन्। विलासी मानिस ज्ञानको अनुभव गर्न सक्दैनन्। वेदान्त-ज्ञानको अधिकार सबैलाई छैन, वेदज्ञानको अधिकार विरक्तलाई मात्र छ।

वेदको संहिता भाग मन्त्ररूप हो। ब्राह्मण संहिताको भाष्य हो, आरण्यकमा उपनिषद् आउँछ। अत्यन्त सात्त्विक जीवन बिताउने ऋषि जो चिन्तन गर्छन् त्यो उपनिषद् हो। त्यही वेदान्त हो। वेदको अन्तनै वेदान्त हो। अन्तको अर्थ हो समाप्ति। वेदको समाप्ति उपनिषद् हो।

वैराग्य र संयमको अभावमा ज्ञान पच्दैन। त्यस ज्ञानलाई जीवनमा उतारेर भक्तिमय जीवन बिताउने मानिस बहुतै बिरला हुन्छन्।

ज्ञान प्राप्त गर्नु छ भने सरस्वतीको किनारमा बस्नु पर्छ। कर्दम हुनुपर्छ। तिमी कर्दम बन्यौ भने तिम्रो बुद्धि देवहूति बन्ने छ। अर्थात् यदि तपाईं जितेन्द्रिय हुनु भयो भने तपाईंको बुद्धि निष्काम बन्ने छ। ज्ञान सिद्ध हुनेछ। ज्ञानको सिद्धि भएपछि पुरुषार्थ सिद्ध हुनेछ। चौथो स्कन्धमा त्यस्ता चार पदार्थका कथाहरू छन्।

तृतीय स्कन्धमा सर्गलीला थियो र यस चौथो स्कन्धमा विसर्गलीला छ। पुरुषार्थ चार छन्—धर्म, अर्थ, काम र मोक्ष। त्यसकारण चौथो स्कन्धमा चार प्रकरण छन्—धर्म, अर्थ, काम, मोक्ष।

धर्म प्रकरणमा सात अध्याय छन्। सात प्रकारको शुद्धि भएपछि धर्मको सिद्धि हुन्छ। ( १ ) देशशुद्धि, ( २ ) कालशुद्धि, ( ३ ) मन्त्रशुद्धि, ( ४ ) देहशुद्धि, ( ५ ) विचारशुद्धि, ( ६ ) इन्द्रियशुद्धि र ( ७ ) द्रव्यशुद्धि।

अर्थ प्रकरणमा पाँच अध्याय छन् जसले यो वर्णन गर्छ अर्थको प्राप्ति पाँच साधनहरूबाट हुन्छ। अर्थको प्राप्तिका पाँच साधन यी हुन्—( १ ) माता-पिताको आशीर्वाद, ( २ ) गुरुकृपा, ( ३ ) उद्यम, ( ४ ) प्रारब्ध र ( ५ ) प्रभुकृपा। यी पाँच प्रकारका साधनहरूले ध्रुवलाई अर्थको प्राप्ति भएको थियो।

काम प्रकरणमा एघार अध्याय छन्। यी अध्यायहरूले यो कुरा उल्लेख गर्छन् काम इन्द्रियहरूमा बसेका छन्। पाँच इन्द्रियहरू, पाँच कर्मेन्द्रियहरू र एघारौं मन। यी एघार स्थानहरूमा काम बसेको छ। रावणका दस शिर थिए, त्यसकारण रावण अर्थात् काम इन्द्रियहरूमा बसेको छ। जो सबैलाई आनन्द दिन्छ त्यो राम हो र जो सबलाई रुवाउँछ त्यो रावण हो। काम जीवमात्रलाई रुवाउँछ।

काम मनबाट जाँदैन, यही नै हो विघ्नरूप, मनमा काम आँखाद्वारा प्रवेश गर्छ, त्यसो हुनाले आँखाहरूमा रावण—कामलाई जान नदेऊ।

रामजस्तै निर्विकारी बन्यौ भने रावण अर्थात् काम मर्ने छ। काम मऱ्यो भने राम भेटिनुहुनेछ।

मोक्षप्रकरण—यस प्रकरणका आठ अध्याय छन्। महाप्रभुजीले भन्नुभएको छ प्रकृतिका आठ प्रकार छन्।' *भूमिरापोऽनलोवायुः खं मनो बुद्धिरेव च, अहंकार इति।'* पृथ्वी, जल, अग्नि, वायु, आकाश, मन, बुद्धि र अहङ्कार। यी अष्टधा प्रकृतिलाई जसले काबूमा राख्छ, त्यसलाई मोक्ष प्राप्त हुन्छ। जो अष्टधा प्रकृतिको बन्धनबाट मुक्त हुन्छ त्यो कृतार्थ बन्छ।

प्रकृतिमाथि विजय पाउनेलाई मुक्ति प्राप्त हुन्छ, पृथ्वी, जल, वायु, तेज, आकाश, मन, बुद्धि तथा अहङ्कारलाई काबूमा राख। प्रकृतिको अर्थ हो स्वभाव। अनेक जन्महरूको संस्कार मनमा सञ्चित रहन्छ। बड़ा-बड़ा ऋषिहरूले पनि प्रकृतिलाई अर्थात् स्वभावलाई वशमा राख्न सकेका छैनन्। यसैले बन्धनमा परेका छन्। अष्टधा प्रकृतिमाथि विजय पाउनेलाई मुक्ति प्राप्त हुन्छ। प्रकृतिको वशमा जो हुन्छ त्यो जीव हो र जसले प्रकृतिलाई वशमा राख्छ त्यो हो ईश्वर। श्रवण, कीर्तन र आठ प्रकारको भक्ति जसलाई सिद्ध हुन्छ त्यो ईश्वरको भइहाल्छ। तिमी भगवान् जस्तो नबन्न सके त्यसमा हर्जा छैन, तर भगवान्कै भएर रहू। यस प्रकार एकतीस अध्यायहरूको चतुर्थ स्कन्ध हो।

चार पुरुषार्थहरूमा पहिलो धर्म हो र अन्त्यमा मोक्ष। बीचमा, अर्थ र काम छ। यस्तो क्रम बसाल्नुको केही रहस्य छ। धर्म र मोक्षको बीचमा काम र अर्थलाई राखेको छ। यस क्रमले यो भन्दछ अर्थ र कामलाई धर्म र मोक्षका अनुसार प्राप्त गर्नु छ। धर्म र मोक्ष यी दुवै पुरुषार्थ मुख्य हुन्। बाँकीका—दुवै अर्थ र काम-गौण हुन्। धर्मका विरुद्ध कुनै पनि पुरुषार्थ सिद्ध हुँदैन। धर्मको सदा स्मरण राख। सबभन्दा पहिलो पुरुषार्थ हो। धर्मानुसारै अर्थ र कामको प्राप्ति गर्नुपर्छ।

पैसा मुख्य होइन, धर्म नै मुख्य हो। मानव जीवनमा धर्म मात्र प्रधान छ। धनद्वारा सुख पाईंदैन। सुख पाइन्छ राम्रा संस्कारहरू, संयमद्वारा र सदाचारद्वारा। प्रभु भक्तिद्वारा र त्यागद्वारा सुख पाइन्छ। धर्मभन्दा धन कहिले पनि श्रेष्ठ हुन सक्तैन। धर्मले यस लोक र परलोकमा सुख दिन्छ। मरेपछि धन साथै जाँदैन, धर्म मात्र साथ जान्छ। त्यसकारण धनभन्दा धर्म श्रेष्ठ हो। जबदेखि मानिसहरूले अर्थलाई महत्त्व दिनथालेका छन् तबदेखि जीवन बिग्रिएको छ। स्वामी श्री शङ्कराचार्यले एक ठाउँमा अर्थलाई अनर्थ भन्नुभएको छ। 'अर्थमानर्थं भावय नित्यम्।' जब मानिसले धर्मलाई धनभन्दा विशेष महत्त्व दिन थाल्छ तब जीवन सुधिन्छ।

अर्थलाई धर्मानुकूल राख। जो अर्थ धर्मानुकूल हुँदैन त्यो अनर्थ हो। देशलाई सम्पत्तिको जतिसम्म आवश्यकता छ, त्योभन्दा बढ्ता राम्रा संस्कारहरूको आवश्यकता पर्छ। तिमीले आफ्ना जीवनमा धर्मलाई सबभन्दा पहिलो स्थान देऊ। जीवनमा जब कामसुख र अर्थ गौण बन्दछ, तब जीवनमा दिव्यता आउँछ। दिव्यताको अर्थ हो देवत्व।

धर्मको गति सूक्ष्म छ। धर्म पनि अनेकौं पटक अधर्म बन्न जान्छ। सद्भावनाको अभावमा गरिएको धर्म सफल हुँदैन। सत्‌को अर्थ हो ईश्वर। ईश्वरको भाव जब मनमा प्रत्यक्ष सिद्ध गर्न सकिन्छ अनि त्यसैको धर्म पूर्णतः सफल हुन्छ।

मानिसहरूका शत्रु बाहिर छैनन्, तिनीहरू तर मनभित्रै छन्। भित्रका शत्रुहरूलाई मार्‍यौ भने जगत्‌मा तिम्रा कोही शत्रु हुने छैनन्।

धर्मक्रिया सद्भावनाका विना सफल हुँदैन। जगत्‌का कुनै पनि जीवप्रति कुभाव राख्यौ भने त्यो जीवले तिम्राप्रति पनि कुभाव राख्ने छ।

सबै क्षेत्रहरूमा क्षेत्रज्ञ रूपबाट परमात्मा बस्नु भएको छ, त्यसकारण कुनै पनि जीवप्रति कुभाव राख्नु ईश्वरप्रति कुभाव राखे बराबर हुन्छ। शास्त्रले यहाँसम्म भनेको छ कुनै जीवका साथ के कुनै जड़ पदार्थका प्रति पनि कुभाव राख्नु हुँदैन। भनिएको छ—'सुहृदः सर्वभूतानाम्।' तर (''सुहृदः सर्वजीवानाम्'') भनेको छैन। जड़पदार्थहरूका साथ पनि प्रेम गर्नु छ। सबैमा सद्‌भाव राख अर्थात् जड़ पदार्थहरूका प्रति पनि प्रेमभाव राख।

मानिसमा जब स्वार्थ बुद्धि जागेर आउँछ तब त्यसले अर्काको विनाश गर्न तयार हुन्छ। तिमीले यदि अर्काका प्रति कुभाव राख्यौ भने त्यसका मनमा पनि तिम्राप्रति कुभाव जागेर आउँछ।

यस बारेमा विचार गर्ने योग्य एउटा दृष्टान्त यस प्रकार छ—एकादेशमा त्यहाँका राजाको शहरको एक सेठसँग खूब राम्रो मित्रता थियो। दुवैजना सत्सङ्ग गर्थे। दुवैको एक-दोस्राका प्रति खूब प्रेम थियो। त्यो सेठको व्यापार चन्दनको काठ बेच्ने थियो। सेठको व्यापार राम्ररी चलिरहेको थिएन। चार-पाँच वर्षसम्म नोक्सान लागिरह्यो। अन्तमा कारिन्दाले भन्यो—'अब काठमा धमिरा लाग्नथाल्यो। बिग्रेको माल कोही लिँदा पनि लिँदैन। यदि यस सालमा सबै चन्दन बिकेन भने व्यापार एकदम बन्द हुनेछ। अब चन्दन जस्तो काठ राजाबाहेक अरू कसले प्रशस्त परिणाममा लिन सक्ला?'

स्वार्थले मानिसलाई बहुलाहा बनाइदिन्छ। मानिसका मनमा जब स्वार्थ जागेर आउँछ तब ऊ अर्काको विनाश गर्नमा तयार भइहाल्छ। अर्काको नोक्सान गर्नेलाई कहिले पनि फायदा हुँदैन। मानिसको हृदयमा जब स्वार्थ जाग्दछ, तब विवेक रहँदैन। प्रत्येक मनुष्यको हृदयमा स्वार्थ हुन्छ तर त्यसमा विवेक राख्नै पर्ने हो। जुन कुरा बोल्नमा लाज लाग्छ भने त्यस्तो सोच्नु पनि हुँदैन। नगर सेठले भन्ठान्यो यस राजालाई केही भइदिएदेखि बहुतै असल हुने थियो। त्यो मरेका खण्डमा उसलाई पोल्न भनी चन्दनको दाउरा चाहिन्छ। यस प्रकार मेरो सारा चन्दन बिक्ने छ र व्यापार पनि ठीक हुनेछ। यस प्रकार सेठको मनमा राजाका प्रति कुभाव उत्पन्न भयो।

उतापट्टि राजाको मनमा सेठका प्रति कुभाव जागेर आयो। त्यस दिन जब सेठ राजाकहाँ भेट्न भनेर आयो, तब राजाको मनमा विचार उत्पन्न भयो यो सेठ निःसन्तान छ, यदि यो मरिहाल्यो भने त्यसको सारा धन राजढुकुटीमा आइहाल्छा। सधैंको जस्तो सत्सङ्ग नियमानुसार भयो, तर कुनैलाई पनि आनन्द भएन।

दुइ-तीन दिनपछि राजाको मनमा विचार आयो 'जो पहिले कहिले उत्पन्न भएको थिएन, यस्तो दुष्ट विचार नगरसेठका बारेमा मलाई कसरी उत्पन्न भयो?'

मानिस पापलाई मनमा लुकाएर राख्छ, जसले गर्दा उसको जीवन बिग्रन्छ। राजाले सारा कुरा सेठलाई भने। राजाले भने—'तिम्रा बारेमा मेरा मनमा खराब विचार कहिल्यै आएन। यस कारण म बुझ्न सक्दिनँ कारण क्या हो? के तिमीले पनि मेरा बारेमा केही खराब विचार गरेका थियौ?'

सेठले भन्यो 'मेरो चन्दनको व्यापार चलिरहेको छैन। सबैको पोषण गर्नु छ। कसैले माल लिँदैन, त्यसैले मैले विचार गरें तपाईंको मरण भए कति असल हुने थियो। तपाईं मर्नुहोला, तपाईंलाई पोल्न चन्दनको आवश्यकता पर्ला र मेरो चन्दन बिक्री भइजाला।' राजाले सेठलाई दोष दिँदै भने 'खराब विचार तिमीले किन गऱ्यौ? वैष्णव भएर यस्तो दुष्ट विचार किन गर्दछौ। वैष्णवलाई यो कुरा सुहाएन। तिम्रो मनमा यस्तो विचार किन आएन? यी राजाले आफ्नो महलको फाटक चन्दनको बनाऊन् जसले गर्दा चन्दन किनियोस्। राजाले ठाकुरजीका निमित्त चन्दनको झूला बनाऊन् जसले गर्दा मेरो चन्दन बिक्री भैहालोस्।' यस प्रकार राजाको मन पनि शुद्ध

भयो र बनियाँ सेठको पनि। यसपछि दुवैमा एक-अर्काका प्रति शुभ भावना जाग्यो र दुवै सुखी भए।

दक्षप्रजापतिले शिवजीका प्रति कुभाव राखे त्यसकारण धर्म अधर्ममा बदलियो। उसको यज्ञ उसैलाई मार्ने भयो।

प्रत्येक मनुष्यका प्रति सद्भाव राख्नाले कार्य सफल हुन्छ। सबैको कल्याण होस् यही मात्र सत्य र सत्कार्य हो।

## 'सत्यं भूतहितं प्रोक्तम्।'

अनेकमा एउटाको दर्शन गर्नुनै सबैभन्दा उत्तम हो। एउटा ब्राह्मणले बाटामा कुनै स्त्रीलाई देखेर उसमा लक्ष्मीको भावना गर्छ भने त्यस स्त्रीमा बसेका अन्तर्यामी ईश्वरले उसलाई आशीर्वाद दिने छन्। जब एक कामी पुरुषले त्यस स्त्रीलाई कामभावनाले हेर्छ भने त्यस स्त्रीमा बसेका परमात्माले उसलाई श्राप दिनेछन्। सबैमा ईश्वरभाव राख। तिमीले सबैमा ईश्वरभाव राख्यौ भने अरूले पनि तिमीमा ईश्वरभाव राख्दछन्। कति पटक धर्म पनि अधर्म बन्न गएको छ। त्यसको कारण यो हो धर्म गर्ने मानिसले सबैमा समभाव राख्दैन। सबैमा समभाव राख्नु सुखी हुनु हो। सद्भावको अर्थ हो ईश्वरको भाव। सबैमा जसले ईश्वरको भाव राख्छ त्यो सुखी हुन्छ। त्यसको धर्म पनि सफल हुन्छ। कुनै पनि जीवमा कुभाव राख्ने मानिसको धर्म सफल हुँदैन। महाभारतमा हामीले देखेका छौं श्रीकृष्णले कति पटक अधर्म गर्नुभएको छ। तर उहाँको मनमा सबैका निमित्त सद्भाव मात्र हुन्छ, त्यसकारण उहाँको अधर्म पनि धर्म भयो।

महाभारतको कर्णपर्वमा, द्रोणपर्वमा यही कुराको दृष्टान्त पाइन्छ।

कर्णपर्वमा भनिएको छ जुन समयमा कर्णले आफ्नो रथको पाङ्ग्रा पृथ्वीबाट बाहिर झिकिरहेका थिए र निःशस्त्र थिए त्यसवेला भगवान्ले अर्जुनलाई भन्नु भयो 'यस कर्णलाई मार।'

कर्ण भन्दछन्—'युद्धशास्त्रको नियम छ जब शत्रु निःशस्त्र हुन्छ त्यस बखत उसमाथि प्रहार नगर्नू। त्यसकारण अर्जुनले ममाथि प्रहार गर्नुहुँदैन।'

तब श्रीकृष्ण कर्णलाई भन्नुहुन्छ—'कर्ण, आजसम्म तिमीले धर्मको कति पालन गरेका छौ ? तिमीले स्वयं धर्मको पालन गरेका छैनौ र अरूहरूलाई धर्म पालन गर्न उपदेश दिन्छौ। भरी सभामा द्रौपदीको अपमान गरियो त्यस वेला तिम्रो धर्म कहाँ गएको थियो ?'

यस प्रकार द्रोणपर्वमा कथा आउँछ—द्रोणाचार्य पाण्डवसेनाको विनाश गरिरहनुभएको थियो। श्रीकृष्णले सोच्नु भयो यो बूढ़ो मरेन भने अनर्थ हुनेभो। यत्तिकैमा अश्वत्थामा नाउँको हात्ती मारियो। श्रीकृष्णले सोच्नु भयो 'यदि द्रोणाचार्यलाई भनौं तिम्रो छोरो मारियो तब पुत्रशोकको कारणले यिनले युद्ध बन्द गर्नेछन्।' यस्तो सोचेर भगवान्ले घोषणा गराइदिनुभयो 'अश्वत्थामा

मारिए।' द्रोणाचार्यले सोच्नुभयो छोरो पनि मारियो भने अब युद्ध किन गरूँ। तर यदि धर्मराज युधिष्ठिरले अश्वत्थामा मारियो भनेमात्र यो कुरा साँचो मान्दछु।' युधिष्ठिरसँग भगवान् भन्नुहुन्छ— भन्नुहोस् न, अश्वत्थामा मारियो। युधिष्ठिर भन्छन् राज्यका निमित्त म असत्य कसरी बोलूँ?'

भगवान् भन्नुहुन्छ 'दुर्योधन पापी छ। त्यो मऱ्यो भने सुखी होला र जीवित रह्यो भने धेरै पाप गर्ला र दुःखी होला। जसबाट सबैको कल्याण हुन्छ त्यही सत्य हो। द्रोणाचार्य ब्राह्मण भएर पनि अधर्मी दुर्योधनको सहायता गरिरहनु भएको छ। उहाँले पाप गरिरहनुभएको छ। द्रोणाचार्यले युद्ध छोड़िदिनु भयो भने उहाँबाट ज्यादा अधर्म हुने छैन। त्यसकारण भन्दछु बोल 'अश्वत्थामा हतः।' भगवान्ले ज्यादै आग्रह गर्नुभयो त्यसकारण युधिष्ठिरलाई बोल्नुपऱ्यो 'अश्वत्थामा हतः।' असत्य बोल्ने पाप नलागोस् भन्नाका निमित्त उनले त्यसपछि भने 'नरो वा कुञ्जरो वा।' तर यी अन्तिम शब्द कसैलाई पनि नसुनियोस् भन्ना खातिर योभन्दा अगाड़ि प्रभुले जोरसङ्ग शङ्ख बजाइदिनुभयो र यी शब्दहरू कसैले सुनेनन्।

दक्ष प्रजापतिको यज्ञरूप धर्म शिवजीका प्रति कुभाव राखेर गर्नाले अधर्म बनेर उसैलाई मार्नेवाला बन्यो। दोस्रो तर्फ श्रीकृष्णको असत्य भाषणरूप अधर्म पनि सबको कल्याणका निमित्त गरिएको हुनाले धर्म हुनगयो।

सत्कर्म गर्दाखेरि भाव शुद्ध राख। शुद्ध भाव राख्नु सबैभन्दा ठूलो तप हो त्यसैले 'सर्वेषामविरोधेन ब्रह्म कर्म समारभे।' यो मन्त्र पढ़ेर प्रत्येक सत्कर्मको आरम्भ गरिन्छ। सबैका प्रति सद्भाव राख। सबैलाई सद्भावले हेर। सद्भावविना गरिएको सत्कर्म सफल हुँदैन।

मैत्रेयजी भन्नुहुन्छ—मनु भगवान्कहाँ तीन कन्याहरू उत्पन्न गए। एक आकुति, दोस्रो देवहूति र तेस्रो प्रसूति। देवहूतिको विवाह कर्दमका साथ भएको थियो। उनका नौ कन्या थिए। ती नौ कन्याहरूको विवाह नौ ब्रह्मर्षिका साथ भएको थियो। प्रसूतिको विवाह दक्षप्रजापतिका साथ भएको थियो। यी सबको कथा भनिसकिएको छ। अब यी कर्दमका कन्याहरूको वंश वर्णन गर्दछु। मरीचि र कलाकहाँ कश्यप र पूर्णिमा नामका दुइ सन्तान भए। अत्रि पत्नी अनुसूयाबाट दत्तात्रेय, दुर्वासा र चन्द्रमा नामका तीन पुत्र भए। तिनीहरू अनुक्रमबाट विष्णु, शंकर र ब्रह्माका अंशबाट उत्पन्न भएका थिए।

विदुरजी सोध्दछन्—'यी सर्वश्रेष्ठ देवहरूले अत्रि मुनिकहाँ के गर्ने इच्छाले अवतार लिएका थिए, त्यो कथा भन्नु हवस्।

मैत्रेयजी भन्नुहुन्छ—दत्तात्रेय अत्रिका घर आएका हुन्, पुरुष यदि अत्रि जस्तो तपस्वी भए र स्त्री अनुसूया जस्ती तपस्वी भए आज पनि उनका घरमा दत्तात्रेय आउनलाई तयार हुन्छन्।'

नत्र त्यो अत्रि सत्त्व, रज र तम यी तिनै गुणहरूको नाश गरेर निर्गुणी बन्यो भने त्यही अत्रि हो। सत्व, रज र तम यी तीन गुणहरूमा जीव मिलिगएको छ। यी तीन गुणहरूबाट जीवलाई अलग्ग हुनु छ।

हत्केलाका औंलाले जीवभाव जनाउँछ—अभिमान जनाउँछ। जीवमा अभिमान प्रधान छ। पाँचौं औंला सत्त्व गुण हो। बूढ़ी औंला ब्रह्मा हो, यसैले पुष्टि सम्प्रदायमा प्रभुलाई तिलक बूढ़ी औंलाले लगाउँछन्। वेदमा ब्रह्मालाई 'नेति' भनेर वर्णन गरिएको छ, यस जीव र ब्रह्माको सम्बन्ध संतत हुनुपर्छ।

यी तीनै गुणहरूमा जीव मिल्छ र यी तीन गुणहरूलाई छोड़ेर ब्रह्मसम्बन्ध गर्दछ। जो त्रिगुणातीत ब्रह्मस्वरूपमा प्राप्त भएका छन्, ती अत्रि हुन्।

शरीरमा जो तमोगुण छ त्यसलाई रजोगुणले मार हटाऊ। रजोगुणलाई सत्त्वगुणले मार। रजोगुण काम र क्रोधको जनक हो। सत्कर्मद्वारा सत्त्वगुण बढ्दछ। सत्त्वगुण पनि बन्धनकर्ता हो। यसमा पनि अलिकति अहंभाव रहन जान्छ। त्यसकारण अन्त्यमा सत्त्वगुणद्वारै सत्त्वगुणलाई मार्नु छ। सत्त्वगुणको पनि त्याग गर्नु छ र निर्गुणी हुनु छ। जीव अत्रि हुन्छ भने त्यसको बुद्धि अनुसूया हुन्छे। असूयाद्वारा रहित बुद्धिनै अनुसूया हो। बुद्धिमा सबभन्दा ठूलो दोष असूया-मत्सर हो। अरूहरूको असल भएको देखेर ईर्ष्या गर्नु, भुट्भुटिनु यही हो असूया या मत्सर।

अरूहरूको दोषको विचार श्रीकृष्णदर्शनमा विघ्नकर्ता हुन्छ, बुद्धिमा जबसम्म असूया या मत्सर हुन्छ, तबसम्म ईश्वरको चिन्तन गर्न सकिनै छैन। भगवान्को दर्शन सबैमा गर्नु छ यदि जीवले सबैमा ब्रह्मको दर्शन गर्‍यो भने त्यो कृतार्थ हुन्छ।

जसको बुद्धि असूयारहित हुन्छ त्यो मात्र अत्रि बन्दछ। त्यसपछि दत्तात्रेय आउनुहुन्छ। जीवले तीन गुणहरूको त्याग गरेर निर्गुणी बनोस् र बुद्धि असूयारहित होस् तब ईश्वर प्रकट हुनुहुन्छ।

प्रभुको स्मरणले बुद्धि जागृत हुन्छ। असूया ईश्वरको मार्गमा अगाड़ि जानलाई बाधा गर्नेवाली हुन्छे, असूया ज्ञान-शक्तिको मार्गमा बाधा हुन आउँछे। त्यसकारण कसैसँग असूया नगर। जब बुद्धि अनसूया हुन्छे तब त्यसले ईश्वरको चिन्तन गर्न सक्छे।

अनसूया महान् पतिव्रता हो। एकपटक देवर्षि नारद कैलाशमा आउनुभो—शङ्कर समाधिमा हुनुहुन्थ्यो। पार्वतीजी पूजा गरिरहनुभएको थियो। पार्वतीले नारदजीलाई प्रसाद दिनुभयो। नारदजी भन्नुहुन्छ—'लड्डू बहुतै सरस छ। आज तपाईंको हातबाट प्रसाद पाएको छु। तर त्यस अनुसूयाको लड्डू तपाईंको लड्डूभन्दा श्रेष्ठ छ।' पार्वती सोध्नुहुन्छ—'यो अनसूया को हो?' नारदजी भन्नुहुन्छ—'तपाईं पतिव्रता हुनुहुन्छ तर अनसूया महान् पतिव्रता छिन्।' पार्वतीको मनमा ईर्ष्या उत्पन्न भयो। अनसूया मभन्दा पनि बढी छ?। श्री शङ्कर जब समाधिबाट जाग्नुभयो तब पार्वतीले वन्दना गर्नुभयो।

घरका मानिसले जब ज्यादै वन्दना गर्न थाले भने संझ कसैलाई खाड़लमा हाल्ने तयारी भइरहेछ। शङ्करले सोध्नुभयो—'हैन, के कुरा छ?' पार्वतीले भनिन्—'कुनै प्रकारबाट पनि अनसूयाको पातिव्रत्य भङ्ग होस्, यस्तो काम गर्नुपर्‍यो।'

शिवजी भन्नुहुन्छ—'जो अर्काको कुभलो गर्न चाहन्छ त्यसको कहिल्यै असल हुँदैन। यसमा कल्याण छैन। देवी ! तर तिम्रो इच्छा छ भने म कोशिश गर्नेछु।'

यतातिर नारदजी बैकुण्ठ आएर लक्ष्मीसँग भेट गर्नुभयो। लक्ष्मीले नारदजीलाई सोध्नुभो—'आज यति आनन्दमा किन ?' नारदजी भन्नुहुन्छ—'बैकुण्ठको महिमा पहिले थियो तर अब अनसूयाको आश्रमको सिवाय कहीं पनि जाने इच्छा हुँदैन। म उनको आश्रमबाट आइरहेछु, त्यसकारण अति आनन्दमा छु।' लक्ष्मीजी सोध्नुहुन्छ—'यो अनसूया को हो ?' नारदजी भन्नुहुन्छ—'ती महान् पतिव्रता छिन्।' लक्ष्मीजीले श्री विष्णुजीलाई भन्नुभयो—'तपाईं यस्तो केही काम गर्नुहोस् जसबाट अनुसूयाको पातिव्रत्य नष्ट होस्।'

पार्वतीको अर्थ हो बुद्धि। बुद्धि-विद्यामा मत्सर छ। लक्ष्मीको अर्थ हो द्रव्य। द्रव्यमा ईर्ष्या अर्थात् असूयाको वास छ। ब्रह्माणी रजोगुण हो।

सावित्रीले पनि यस्तै प्रकार ब्रह्माजीसँग बिन्ती गरिन्।

शङ्कर, विष्णु, ब्रह्मा तीनै देवता चित्रकूटमा एकैसाथ भेट भए। तीनै देवता अनसूयाको आश्रममा आए। भिक्षा माग्दै उनीहरूले भने—'हामी भिक्षा माग्दछौं, तर तपाईंले नाङ्गी भएर भिक्षा दिनुहुन्छ भने हामी लिन्छौं।' अनसूया सोच्दछिन्—'यदि नाङ्गी भएर भिक्षा दिएँ भने मेरो पातिव्रत्य धर्म भङ्ग हुनेछ, भिक्षा नदिऊँ भने घर-आँगनमा आएका अतिथि फर्किएर गए भने यो महापाप हुने छ। मलाई पाप लाग्ला।'

प्रभु भन्नुहुन्छ मलाई नाङ्गी भएर भिक्षा देऊ। अर्थात् उहाँ भन्नुहुन्छ वैष्णव, मलाई वासनारहित भएर भिक्षा देऊ। ईश्वरलाई वासनारहित भएर, निष्काम भएर सबै कुरा अर्पण गर्नु छ।

अनुसूयाको मनमा कुनै वासना पनि यदि मनमा भयो भने यी तीनै देवता यिनका समीप आउँदैनथे, अनसूयाले ध्यान गरिन् र तीनै देवताहरूमाथि जल छर्किदिइन्, तीनै देव बालक बने। पतिव्रतामा यतिको शक्ति हुँदोरहेछ।

पार्वती सोचिरहिछिन्—'शिवजी बिहानै जानुभएको हो फेरि पनि अहिलसम्म आउनुभएन। लक्ष्मी र सावित्री पनि आफ्ना-आफ्ना पतिहरूका खोजीमा निस्केका छन्। तीनै देवीहरू चित्रकूटमा आए। यत्तिकैमा नारदजी पनि त्यहाँ आइपुग्नुभयो र अनुष्ठानमा बस्नुभयो। देवीहरूले उहाँसँग सोधे—'हाम्रा पतिहरूको केही समाचार थाहा पाउनुभएको छ।' नारदजी भन्नुहुन्छ—'पहिले यो भन्नुहोस् ठूली कुनचाहिँ हो, तपाईंहरू अथवा अनसूया ?' देवीहरू भन्दछन्—'अनसूया ठूली हुन्, तर हाम्रा पति कहाँ छन् ?' नारदजीले भन्नुभयो—'सुन्दछु तपाईंहरूका पति बालक बनिएछन्। उनीहरू अनसूयाको घरमा भेट हुनेछन्।'

अरूहरूका साथ असूया गर्नेहरूलाई शान्ति मिल्दैन। देवीहरू डराउँछन्। सोच्दछन् 'यदि हामी त्यहाँ गयौं र अनसूयाले श्राप दिइन् भने ?' नारदजी भन्नुहुन्छ 'तपाईंहरू भलै मत्सर गर्नु होस् तर अनसूया मत्सर गर्ने छैनन्। अनसूयाले तपाईंहरूलाई सद्भावले हेर्नेछिन् र सद्भाव राख्नेछिन्।'

देवीहरू आश्रममा आउँछन्। अनसूयाले देवताहरूलाई भनेको प्रतिज्ञाहरू गराएकी छिन्। 'आजदेखि प्रतिज्ञा गर पतिव्रतालाई कहिल्यै कष्ट दिने छैनौं। जगत्का कुनै स्त्रीलाई पनि सताउने छैनौं।' यत्तिकैमा अत्रि ऋषि आइपुगेर सोध्नुभो—'यी तीन बालक को हुन्?' अनसूया भन्दछिन्—'यी मेरा तीन बालक हुन् र यी तीन बालकहरूका स्त्रीहरू हुन्।' अत्रि ऋषि भन्नुहुन्छ, 'देवी, यस्तो नभन। यी तीन महान् देवता हुन्।' यसपछि जल छर्किइयो र तीनै देवताहरू प्रकट भए। तीनै देवताहरू भन्छन् 'तपाईंका आँगनमा हामी बालक भएर खेल्छौं। त्यो सुख सदा तपाईंलाई हामी दिनेछौं।' यी तीनै देवताहरूका तेज मिलेर दत्तात्रेयका रूपमा प्रकट भएका छन्।

जब यो जीव केही माग्दैन तब परमात्मा उसलाई आफ्नो स्वरूपको दान गर्नुहुन्छ।

मार्गदर्शन गुरुकृपाविना पाइँदैन। गुरु दत्तात्रेय मार्गदर्शन गराउनेवाला हुन्। यसकारण उनको जन्म मार्गशीर्ष महीनामा भएको छ।

पहिलो अध्यायमा कर्दम ऋषिका कन्याहरूका वंशको वर्णन गरिएको छ।

दक्षप्रजापति र प्रसूतिकहाँ सोह्र कन्याहरू भए। तिनमध्ये तेह्र उनले धर्मलाई, एक अग्निलाई, एक पितृगणलाई र सोह्रौं सती शङ्करजीलाई दिए।

धर्मका तेह्र पत्नीहरू छन्। तिनका नाम हुन्—श्रद्धा, दया, मैत्री, शान्ति, पुष्टि, क्रिया, उन्नति, वृद्धि, मेधा, स्मृति, तितीक्षा, धृति र मूर्ति। धर्मका तेह्र विवाह भए। यी गुणहरूलाई जीवनमा लागू गराउनाले धर्म जरूर फल्दछ। यी तेह्र गुणहरूसँग विवाह गऱ्यौ भने भगवान् भेटिनुहुनेछ।

धर्मकी पहिली पत्नी हुन् श्रद्धा, ईश्वरमा श्रद्धा राख। धर्मको प्रत्येक क्रिया श्रद्धाले गर। श्रद्धा दृढ़ हुनुपर्छ।

एक दिन नामदेवजीका पिताजीलाई कतै बाहिर काम-विशेषले जानु पऱ्यो। नामदेवजी त्यससमय सानै उमेरका थिए। घरमा देवपूजा चलिराखेको थियो। त्यस पूजाको काम नामदेवजीलाई सुम्पिइएको थियो। पिताजीले नामदेवजीलाई पूजाको विधि संझाइदिएका थिए। त्यसै प्रकार नामदेवजी भगवान्लाई दूधको प्रसादको भोग चढ़ाउँछन्। भगवान् दूध खाँदैनन्। नामदेवजी बड़ो बिन्ती गर्दछन् 'सधैं' पिताजीको हातबाट तपाईं भोग स्वीकार गर्नुहुन्थ्यो। आज मबाट केही भूल भयो? तपाईं दूध किन पिउनुहुन्न?

पिताजीले नामदेवजीलाई भनेका थिए भगवान् विट्ठलनाथ लाज मान्नुहुन्छ, उहाँलाई मनाउनुपर्छ। त्यसकारण नामदेव धेरै मनाउनुहुन्छ। विट्ठलनाथ, यदि तपाईंले दूध पिइदिनुभएन भने मलाई पिताजीले पिट्नुहुनेछ, बिट्ठल! दूध पिउनुहोस्। तर जब सबै बिन्ती व्यर्थ भयो तब नामदेवजीले मूर्तिका अगाड़ि टाउको फोर्न तयार भए। उनले भने विट्ठल। दूध पिउनु हुन्छ वा हुन्न? दूध पिउनुभएन भने म आफ्नो टाउको फोरिदिनेछु।

भगवान् नामदेवजीको दृढ़ श्रद्धा र भक्ति देखेर प्रसन्न हुनुभयो। जसै नामदेवजीले टाउको बजार्न तयार हुनुभयो, उहाँ भगवान् प्रकट हुनुभयो। भगवान्‌ले दूधको कचौरा लिनुभयो र दूध पिउन थाल्नुभयो। पाँच वर्षका नामदेवले भगवान्‌लाई दूध पियाउँदछन्। जब नामदेवजीलाई लाग्यो भगवान् विट्ठलनाथले सारा दूध पिई जान लाग्नु भयो तब प्रभुलाई उनले ठूलो स्वरले भने—'विट्ठल, तिमी सारा दूध पिइरहेछौ। के मलाई प्रसादी दिँदैनौ? पिताजीले मलाई सधैं प्रसादी दिनुहुन्छ।' नामदेवको प्रेम देखेर विट्ठलनाथजी ज्यादै प्रसन्न हुनुभयो। प्रभुले नामदेवलाई काखमा लिनुभयो र दूध पियाउनुभयो।

दृढ़ श्रद्धाभक्तिबाट, दृढ़ प्रेमबाट जड़ पनि चेतन बन्दछ।

जीवनमात्रका साथ मैत्री राख।

श्रीधर स्वामीले भनेको छ—सबैका साथ मैत्री राख्न सकिन्न होला, यसमा केही हर्जा छैन, तर कसैका साथ वैमनस्य नगर। कसैसँग वैमनस्य नगर्नु पनि मैत्री गरेको जस्तै हुन्छ।

धर्मकी तेह्रौं पत्नी हुन् मूर्ति र उनको घरमा नर-नारायण प्रकट भएका छन्। नारायणका माता-पिता मूर्ति र धर्म हुन्। मूर्तिमा प्रेम राख। जसले मूर्तिलाई माता र धर्मलाई पिता मान्लान् उनीकहाँ नारायणको जन्म होला। बद्रीनारायण भगवान् सालमा एकपटक मूर्तिदेवीसँग भेट गर्न आउनुहुन्छ। धर्म पिता हुन् र मूर्ति माता हुन्। धर्मको बराबर पालन गर्‍यौ भने तिम्रा घर नारायण प्रकट होलान्।

दक्ष प्रजापतिकी सानी छोरी सतीको विवाह शिवजीका साथ भएको छ। दक्ष प्रजापतिले शिवजीको अपमान गरे। त्यसकारण सतीले आफ्नो शरीर यज्ञमा भस्म गरिदिइन्। भगवान् शङ्कर महान् हुनुहुन्छ। सचराचर जगत्‌का गुरु हुनुहुन्छ। सन्त ज्ञानेश्वरले ज्ञानेश्वरीमा भनेको छ—'जगत्‌मा जति धर्म-सम्प्रदाय छन् तिनका आदि गुरु श्री शङ्कर हुन्। गुरु नबनाईकन नबस। सबै मन्त्रहरूका आचार्य शिवजी हुनुहुन्छ। त्यसैले उहाँलाई गुरु मानेर मन्त्रदीक्षा लिनुपर्छ।'

विदुरजी सोध्छन्—'देवहरूमा सबैभन्दा श्रेष्ठ शिवजीका साथ दक्ष प्रजापतिले वैर गरे, यो कुरालाई सुनेर बहुतै आश्चर्य लाग्छ। यो कथा मलाई विस्तारपूर्वक सुनाउनुहोस्।'

मैत्रेयजी भन्नुहुन्छ—'प्राचीनकालमा प्रयागराजमा बड़ो ब्रह्मसत्र भएको थियो। त्रिग्रहीको योग जब पर्दछ तब कुम्भ पर्छ। गरुड़ जब अमृत लिएर गइरहेका थिए, तब चन्द्र, सूर्य र गुरु यी तीनैले अमृत कुम्भको रक्षा गरेका थिए।'

ज्ञान र भक्ति जब मिल्दछन् तब मानव समाजमा सुख र शान्ति हुन्छ।

प्रयागराजमा बड़ो ब्रह्मसत्र भयो। सभामा शिवजी अध्यक्षको स्थानमा हुनुहुन्थ्यो। त्यस अवसरमा दक्ष प्रजापति पनि वहाँ आए। जहाँ पनि मानिस बसेको होस्, त्यहीं भक्ति गरोस्, त्यो उत्तम भक्त हो। शिवजी महाराज नारायणको ध्यान गरिरहनुभएको थियो, सभामा को आयो, को

गयो यसको उहाँलाई भान थिएन। दक्ष वहाँ आए। उरू देवताहरूले उठेर उनको सम्मान गरे तर शिवजी उभिनुभएन। त्यस समय क्रोधमा आएर दक्षले शिवजीको निन्दा गरे। श्रीधरस्वामीले तर निन्दाबाट पनि स्तुतिको अर्थ निकालेका छन्। अर्थात् ती निन्दाका शब्दहरू पनि शिवजीको स्तुतिरूप अर्थ निकालेका छन्। श्रीमद्‌भागवतमाथिको सबैभन्दा असल टीका श्रीधरस्वामीको मानिएको छ उहाँ नृसिंह भगवान्‌को भक्त हुनुहुन्थ्यो।

दशम् स्कन्धमा श्रीकृष्णको निन्दा शिशुपालले गरेको छ। त्यसको श्रीधरस्वामीले स्तुतिपरक अर्थ लाउनुभएको छ, किनभने निन्दा सुन्दा पनि पाप लाग्छ। निन्दा नरक समान हो। जो व्यक्ति उपस्थित छैन, त्यसका दोषको वर्णन गर्नुलाई निन्दा भन्दछन्। शिवजीको निन्दा भागवत्‌जस्तो ग्रन्थमा शोभालायक छैन।

दक्ष प्रजापतिले निन्दा गर्दै भने—'शिव श्मशानमा बस्नेवाला हुन्।' तर यो स्तुतिरूप छ। सारा जगत् श्मशान रूप हो। काशी महान् श्मशान हो। देह पनि श्मशान हो। घर पनि श्मशान हो। यस प्रकार श्मशानको अर्थ भयो सारा जगत् अर्थात् संसारका प्रत्येक वस्तुमा शिवजी विराजमान हुनुहुन्छ। सारा जगत् श्मशानरूप छ र शिवजी जगत्‌का प्रत्येक पदार्थमा व्याप्त हुनुहुन्छ, त्यसकारण उहाँ व्यापक ब्रह्मरूप हुनुहुन्छ। जगत्‌को प्रत्येक चीजमा शिवतत्त्व छ। ब्रह्मतत्त्व व्यापक छ।

भगवान् शङ्कर आशुतोष हुनुहुन्छ। शिवजीको दरबारमा हरेकले जान पाइन्छ। ऋषि, देव, दानव र भूतपिशाच पनि आउँछन्। शिवजीको दरबार सबैलाई खुला रहन्छ। शिवजीको दरबार यदि सबैलाई खुला नभएको भए यी बिचरा भूतपिशाच कहाँ जाने थिए ?

रामजीको दरबारको ढोकामा हनुमानजी गदा लिएर खड़ा भइरहनुहुन्छ। 'जसले मेरो रामजीले जस्तै भाइमा प्रेम राखेको छ, रामजीको जस्तै मर्यादाको पालन गरेको छ, परस्त्रीलाई मातासमान जसले मानेको छ त्यसलाई मात्र भित्र जाने अधिकार छ। रामजीको जस्तै प्रत्येक मर्यादाको पालन गर्‍यौ भने रामजीको दरबारमा भित्र जान पाइन्छ।' यस प्रकारको बर्ताव भएन भने हनुमानजीले गदा हानेर बाहिर निकालिदिनुहुन्छ। रामजी राजाधिराज हुनुहुन्छ। उहाँको दर्शन रातिको बारह बजेपछि हुँदैन। शिवजीको दर्शन जुन समय जहाँ चाहोस् हुनसक्छ। शिवजी भन्नुहुन्छ—'तिमीलाई जहिले फुर्सद मिल्छ, आऊ। म ध्यान गरेर बसेको छु।' कृष्णको दरबारको कुरा दशम स्कन्धमा आउँछ। कृष्ण भन्नुहुन्छ—'मेरो दरबारमा आउनु छ भने सारी लाउनुपर्ने छ, नाकमा बुलाकी लाउनुपर्ने छ। मेरो दरबारमा आउनु छ भने गोपी बन। गोपी बनेर आयौ भने मेरो दरबारमा प्रवेश पाइन्छ।'

जसको अपेक्षा कम हुन्छ त्यो उदार हुन सक्छ।

एक पटक कुबेरको भण्डारीले शिवजीसँग सोद्धछन्—'तपाईंको के सेवा गरूँ ?' शिवजी भन्नुहुन्छ—'जो अरूहरूबाट सेवा माग्दछ र लिन्छ त्यो वैष्णव होइन। अरू कसैको सेवा गर्दछ, त्यो वैष्णव हो। म जस्तै 'नारायण-नारायण' भन। पार्वतीले कुबेरसँग भन्नुभयो—'मेरा निमित्त

सुवर्ण महल बनाइदेऊ। कुबेरले स्वर्णमहल बनाइदिए। वास्तु पूजा नगरीकन महलमा प्रवेश गर्न सकिँदैन। वास्तु पूजा गर्न रावण बोलाइयो। रावणले वास्तु पूजा गरायो।'

शिवजीले रावणलाई भन्नुभयो—'जे माग्नु छ माग।' रावण भन्दछ—योही आफ्नो महल मलाई दिनुहोस्।

पार्वतीजी भन्नुहुन्छ—'मलाई थाहा थियो यिनीहरूले केही कुरा बाँकी राख्ने छैनन्।'

माग्नेलाई नदिनु मरणसमान। शिवजीले सुवर्ण-महल रावणलाई दिइहाल्नुभयो। रावणजस्तो मूर्ख कोही भएनन्। रावणले भन्यो—'महाराज, महल चाहिँ सुन्दर दिनुभयो अब यी पार्वतीलाई पनि मलाई दिनुहोस्।' शिवजीले भन्नुभयो—'तिमीलाई आवश्यक छ भने लैजाऊ।'

जगत्मा यस्ता दानवीर कोही भएनन्। रावण माताजीलाई काँधमा हालेर लगिरहेछ। पार्वतीले श्रीकृष्णाको स्मरण गर्नुभयो, श्रीकृष्ण गोठालो बनेर बाटामा आउनुभयो। उहाँले रावणलाई सोध्नुभयो—'तिमीले कसलाई लिएर गइरहेछौ?' रावणले भन्यो—'शङ्कर भगवान्ले मलाई पार्वती दिइसक्नुभएको छ।'

श्रीकृष्णले भन्नुभयो, 'तिमी कति सुधा छौ? शिवजीले के तिमीलाई पार्वती दिइहाल्नुभयो? असल पार्वतीलाई तर उहाँले पातालमा लुकाएर राख्नुभएको छ। यो तिमीलाई पार्वतीकी दासी पो दिएको हो। दासी दिएर तिमीलाई छकाइदिएको छ। असल पार्वतीको शरीरबाट कमलको झैं वासना आउँछ। यिनको शरीरबाट के त्यस्तो सुगन्ध आइरहेछ?'

रावण द्विविधामा पऱ्यो। पार्वतीजीलाई रावणका साथ जाने इच्छा थिएन। उनले पनि शरीरबाट दुर्गन्ध निकालिन् सोही ठाउँमा पार्वतीलाई छोड़िदियो र रावण गयो। पछिबाट प्रभुले सोही ठाउँमा माताजीको स्थापना गरिदिनुभयो। यिनै द्वैपायनी देवी हुन्।

दक्षले भने—'शिव स्वैरचारी तथा गुणहीन् हुन्।

प्रकृतिको कुनै पनि गुण शिवजीमा छैन, त्यसकारण उहाँ निर्गुण ब्रह्म विधिनिषेधातीत परमात्मा हो। शास्त्रको प्रवृत्ति, विधिनिषेधको प्रवृत्ति अज्ञानी जीवहरूका निमित्त हो, शिवजीका निमित्त होइन।'

दक्ष प्रजापतिले भने—आजदेखि कुनै पनि यज्ञमा अरू देवताका साथ शिवको आहुति दिइने छैन। श्रीधरस्वामीले अर्थ गर्नुभएको छ—'सबै देवताहरूका साथ होइन। शिवजी सबै देवहरूमा श्रेष्ठ हुनुहुन्छ। यसैले महादेव हुनुहुन्छ। अरू देवताहरू भन्दा पहिले शिवजीको आहुति दिनुपर्नेछ र यज्ञका पछि जो बच्ने छ, त्यो पनि समाप्तिमा शिवजीलाई दिइनेछ।'

शिवपुराणमा कथा यस्तो छ—शङ्कर र पार्वतीको विवाह भइरहेको थियो। विवाहको समयमा तीन पुस्ताको वर्णन गर्नुपर्दछ। आफ्नु पिताजीको नाउँ भन्नुपऱ्यो भनेर शिवजीलाई भने। शिवजी सोचमा परे। मेरा पिताजी को होलान्? 'महारुद्र शिवजीको जन्म पनि छैन।' नारदजीले भने—

'भन्नुस्, मेरा पिता ब्रह्मा हुन्।' शिवजीले भने—'मेरा पिता ब्रह्मा हुन्।' फेरि सोधे—तिम्रा बाजे को हुन्? शङ्करजीले भने—मेरा बाजे विष्णु हुन्। फेरि सोधे—तिम्रा बराजु को हुन्? यो सुनेर शिवजीले भन्नुभयो मै सबैको बराजु हुँ।

जगतः पितरौ वन्दे पार्वती परमेश्वरौ।

शिवजी महादेव हुनुहुन्छ। सूतजी वर्णन गर्नुहुन्छ—'राजन्, शिवको शिरमा ज्ञानरूपी गंगा थिइन्, निन्दा सुनेर पनि सहन गरिन्। शङ्करको मस्तकमा ज्ञानगङ्गा छ।'

श्रीकृष्णको चरणमा ज्ञानगङ्गा छ, त्यसकारण उहाँले शिशुपालको निन्दा सहन गर्नुहुन्छ।

प्रतिकारको शक्ति भएर पनि जो सहन गर्दछ त्यही महापुरुष हो। त्यो धन्य छ।

जसको शिरमा ज्ञानगङ्गा छ, त्यसले मात्र निन्दा सहन गर्न सक्दछ। निन्दा सहन बहुत कठिन छ। निन्दा सहन गर्न सक्यौ भने प्रगति गर्न सक्ने छौ।

जसले कलह बढ़ाउँछ, त्यो वैष्णव होइन, त्यसकारण शिवजीले सभामा एक शब्द पनि बोल्नुभएन।

सभामा नन्दिकेश्वर हुनुहुन्थ्यो। उहाँलाई यी सब कुरा सहन भएन। उहाँले दक्षलाई तीन श्राप दिनुभयो जुन मुखले तैंले निन्दा गरेको छस् सो शिर छिनिने छ। तेरो टाउकाको साटो बोकाको शिर ल्याएर जोड़िदिइने छ र तँलाई ब्रह्मविद्या कहिल्यै प्राप्त हुने छैन।

शिवजीको निन्दा गर्नेलाई कहिले पनि मुक्ति पाईंदैन। शिवतत्त्वलाई छोड्ने बुद्धिलाई संसारमा भौंतारिनु पर्छ। त्यसलाई दुःख हुन्छ र कहिले पनि शान्ति पाईंदैन। शिवनिन्दा गर्ने मानिसले कामको विनाश गर्न सक्दैन।

शिवजी भन्नुहुन्छ—'तिमी किन श्राप दिइरहेछौ?' शिवजीले विचार गर्नुभयो—म नबोलूँ भने नन्दिकेश्वरले अरू देवताहरूलाई पनि श्राप देलान् त्यसैले तुरुन्त उहाँ कैलाश पुग्नुभयो। शिवजीले मनमा केही लिनुभएन। सतीलाई पनि केही भन्नुभएन। भूतकालको जसले विचार गर्छ, त्यसलाई भूतले घेरिराखेको छ। यस्तै विचार गर्नुपर्छ।

यसपछि दक्षले कनखल क्षेत्रमा यज्ञ आरम्भ गरे। उनले त्यस यज्ञमा विष्णुको पूजा गर्ने तर शिवजीको पूजा नगर्ने दुराग्रह गरे। देवहरूले उनलाई तिम्रो यो यज्ञ सफल हुँदैन भने। तैपनि उनले दुराग्रह गरेर यज्ञ गरिछोड़े। जुन यज्ञमा शिवपूजा हुँदैन त्यहाँ विष्णुको पनि आगमन हुँदैन। ब्रह्मा, दधीचि पनि यज्ञमा गएनन्। केही देवताहरूले झगड़ा भएको हेर्न मजा आउँछ भन्ठानेर त्यसतर्फ जाने विचार गरे। विमानमा चढ़ेर देवताहरू गइरहेका थिए। सतीले यी विमानहरूलाई देखिन्। सती विचार गर्छिन्—यी देवकन्याहरू कति भाग्यशाली छन्। यिनीहरू कहाँ जान लागेका होलान्? एउटी देवकन्याले भनिन्—'तपाईंका पिताजीकहाँ यज्ञ छ, वहाँ हामी गइरहेछौं। के तपाईंलाई थाहा छैन? के तपाईंलाई निम्ता दिएको छैन? दक्षले द्वेष गरी शिवजीलाई निम्ता

दिएका थिएनन्। सतीलाई पति र पिताका बीच भनाभनी भएको कुरा थाहा थिएन। उनको मन बाबुकहाँ जानलाई एकदम अधीर भयो, शिवजी समाधिबाट जागा हुनु भयो। शिवजीले भन्नुभयो—देवी, आज बहुतै आनन्दमा छौ नि ?'

सतीले भनिन्—'तपाईंका ससूराज्यूकहाँ महायज्ञ भइरहेछ।'

शङ्करले भन्नुभो—'देवी ! यस संसारमा कसैको घर विवाह कसैको घर मरण। संसार दुःखले भरिएको छ। सुखरूप एक परमात्मा मात्र हुनुहुन्छ। तिम्रा र मेरा पिता नारायण हुनुहुन्छ।'

सतीले भनिन्—'महाराज हजूर कति निष्ठुर हुनुहुन्छ। तपाईंलाई कुनै पनि सम्बन्धीहरूसँग भेट्नेसम्म इच्छा हुँदैन।'

शङ्कर—देवी, म सबैसँग भेट्छु। कसैलाई शरीरद्वारा म भेट्दिनँ। प्रत्यक्ष शरीरद्वारा कसैसँग भेट्ने इच्छा हुँदैन।

सती—तपाईं तत्त्वनिष्ठ हुनुहुन्छ, ब्रह्मरूप हुनुहुन्छ। तर नाथ ! मेरो वहाँ जाने बहुतै इच्छा छ। हजूर पनि सवारी होस्, हजुरको सम्मान हुनेछ।

शिवजी—मलाई सम्मानको इच्छा छैन।

सती—नाथ, हजुर सर्वज्ञ होइबक्सिन्छ, तर व्यवहारको ज्ञान छैन। हामी कसैको घर गएनौं भने हाम्रा घर कोही आउँदैनन्।

शिवजी—'बेसै हुन्छ। कोही आएन भने बसी-बसी राम-नाम जपुँला।'

सती—नराम्रो नमाने म केही भनूँ ? छोरीलाई माइत जान पाएमा कति सुख हुन्छ, यस कुराको हजूरलाई ज्ञान छैन। कन्या भएर यदि हजूरको विवाह भएको भए छोरीलाई माइत जाँदा कति आनन्द हुन्छ सो कुरा तेसै थाहा हुने हो। हजुरले जानै पर्छ।

शिवजी—'देवी, संसारमा भौंतारिएर शान्ति पाइने होइन। एक ठाउँमा बसेर प्रभुलाई खुशी तुल्याऊ। मनमा जबसम्म जड़ पदार्थ रहन्छ या दोस्रो जीव रहन्छ तबसम्म परमात्मा त्यहाँ आउनुहुन्न। धेरै भौंतारिनेको मन र बुद्धि धेरै भौंतारिन्छ।'

सती—अर्थात् बुद्धि शङ्कर भगवान्लाई छोड़ेर जान्छिन् त्यसैले धेरै भौंतारिन परेको।

शिवजी भन्नुहुन्छ—'तिम्रा बाबुले मेरो धेरै अपमान गरेका छन्। त्यहाँ जानमा कुनै भलो छैन।'

सती—नाथ, तपाईंको केही भूल भयो होला। मेरा माता-पिता त्यस्तो मूर्ख हुनुहुन्न कि विनाकसूर तपाईंलाई अपशब्द भन्नुहोला।

शिवजी—मैले उनको कुनै अपराध गरेको छैन।

शिवजीले यज्ञको कुरा सुनाउनु भयो।

सती चरित्रमा पितृ स्नेह र पति निष्ठाको खिँचातानी छ।

सती—तपाईंले मेरा पितालाई किन मान गर्नु भएन ?

शिवजी—मैले तिम्रा पितालाई मनमनै मान गरेको थिएँ। म कहिल्यै कसैको अपमान गर्दिनँ।

सती—यो त वेदान्तको परिभाषा लाग्छ। मेरा पिताका अन्तरमा बस्नुभएका वासुदेवको तपाईंले वन्दना गर्नुभयो भनेर यो कुरा मेरा पितालाई कसरी थाहा हुने ? यो कुरा अब तपाईंले बिर्सनु पर्‍यो।

शिवजी—'देवी, मैले बिर्सिसकेको छु, तर तिम्रा पिताले अहिलेसम्म बिर्सनु भएको छैन।'

शिवजीले सतीलाई धेरै संझाउनु भयो। जहाँ मेरो मान हुँदैन त्यहाँ गएर तिम्रो अपमान होला। तिमी मानिनी छौ। अपमान सहन सक्तिनौ। त्यहाँ नजाऊ। अनर्थ हुने छ।

सतीले मानिनन्। 'यज्ञमा म गइनँ भने पति पिताका बीच फाटो बढ्ने छ भन्ने विचार सतीले गरिन्। सबैलाई यो फाटोको कुरा थाहा होला। म गएर पिताजीलाई भन्नेछु म विना निम्ता आएँ तर मेरा पति आउनुहुन्न, त्यसकारण भाइलाई उहाँलाई लिन पठाइदिनु पर्‍यो। पिता पतिका बीच वैमनस्य उत्पन्न भइसकेको छ, त्यसलाई म शान्त गर्नेछु। आज पतिको आज्ञा विरुद्ध माइत जानेछु। सतीले घर छोड़िन्।' जुन दिन घरमा झगड़ा हुन्छ त्यस दिन घर छोड्नु हुँदैन। जसले घर छोड्छ त्यो बाहिर सुखी हुन सक्तैन। शिवजीले सोच्नुभयो, सती जान लागेकी छन् तर अब फर्केर आउन्नन्। जान दिऊँ, तर उनलाई एकलै जान ठीक छैन। शिवजीले गणहरूलाई तिमीहरू पनि साथै जाओ भनी आज्ञा दिनु भयो।

शुकदेवजी वर्णन गर्नुहुन्छ—'राजन् ! शिवगणहरू आए। उनले भने 'आमा, तपाईंले हिँड़ेर जानु ठीक भएन।' सती नन्दिकेश्वरमाथि चढ्नुभयो। शिवजीले सतीका सारी आदि चीजको पोको पारिदिनुभयो, यो शिव र सतीको अन्तिम मिलन थियो। शिवजीले विचार गर्नु भयो, सतीको कुनै चीज यहाँ छुट्यो भने मेरो कृष्णभजनमा विक्षेप गर्ने छ।

मनमा कुनै विकार उत्पन्न हुने चित्र घरमा राख्नुहुन्न। त्यो चित्र मनमा आयो भने कृष्ण भजनमा विघ्न पार्दछ। सतीले भनिन्—'यी सबै चीजको के आवश्यकता पर्‍यो ?'

शिवजीले भन्नुभयो—'देवी, तिमीलाई आवश्यकता पर्ने छ, सबै सँगै लैजाऊ।'

सतीलाई धेरै छिटो जानु थियो। त्यसकारण व्यासजीले बाटाको वर्णन गर्नुभएन। सतीजी यज्ञमण्डपमा आउँछिन्। उनी शङ्करकी अर्धाङ्गिनी हुन्। सारा जगत् उनको सम्मान गर्छन्। ऋषिमुनि पनि उनको सम्मान गर्छन्, तर सतीलाई यसबाट सन्तोष भएन।

आदिशक्ति जगदम्बाले दक्षलाई प्रणाम गरिन्। 'यो गरबा किन यता आइ छ ? भनेर मुण्टो बटारे, दक्ष, दक्ष होइन अदक्ष हुन्। शिवमहिम्न स्तोत्रमा लेखेको छ।'

क्रियादक्षो दक्षः क्रतुपतिरधीशस्तनुभृता—
मृषीणामार्त्विज्यं शरणद सदस्याः सुरगणा।
क्रतुभ्रंसस्त्वत्तः क्रतुफल विधाने व्यसनिनो।
ध्रुवंकर्तुः श्रद्धाविधुरमभिचाराय हि मखाः।

श्रीधर स्वामीले भन्नुभएको छ—'क्रियादक्षः अपि अदक्षः मूर्खः। दक्षः क्रियादक्ष हैन अपितु क्रिया-अदक्ष थिए।'

सती विचार गर्दछिन्—'मेरा पिताजीले मलाई सोझै हेर्दा पनि हेर्नुहुन्न। म घर जान्छु। शिवजी उदार हुनुहुन्छ उहाँले मलाई स्वीकार गर्नुहुने छ। सती यज्ञमण्डपमा घुम्दछिन्। सबै देवताहरूको स्थापना गरेको थियो। केवल केवल शिवजीको स्थापना भएको थिएन। यज्ञमा सबै देवताहरूलाई यज्ञभाग दिइएको छ तर शिवजीलाई दिइएको छैन भन्ने कुरा उनी देख्छिन्। शिवजीका निमित्त आसन पनि राखिएको छैन भन्ने कुरा उनी देख्छिन्। आज ईशानदिशा खाली छ। दक्ष प्रजापतिले सतीको अपमान गरे, सतीले सो कुरा सहन गरिन् तर आफ्ना पतिको अपमान सहन गर्न सकिनन्। सतीलाई अति दुःख भयो। जगदम्बा क्रोधित भइन्। कपालमा लाएको फूलको वेणी पनि फुस्कियो। यो देखेर देवता माताजीलाई वन्दन गर्न थाले र भने 'माताजी, क्रोध नगर्नुहोस्।' सती भन्दछिन्—'तपाईंहरू नआत्तिनुहोस्। अब म क्रोध आफ्ना शरीरमाथि गर्छु। यस शरीरले मैले पाप गरेकी छु। पतिको आज्ञा मैले मानिनँ। यस शरीरलाई म अब पोलिदिन्छु।' सभामा जगदम्बाले तेह्र श्लोकमा भाषण दिइन् : 'अरे! तिमी जस्ता विषयीले शिवतत्त्व के चाल पाउँछौ? जसले शरीरलाई आत्मा मान्दछ त्यसले शिवतत्त्व के जानोस्? ठूला-ठूला देवता शिवको चरणको आश्रय लिन्छन्। शिव क्रियाका विना कृष्णाभक्ति सफल हुँदैन। प्रवृत्ति र निवृत्तिबाट टाढ़ा भएर स्वरूपमा मग्न रहने शिवजी परब्रह्म परमात्मा हुन्। शिव निन्दा गर्ने दक्षकी छोरी म भएँ भनेर मलाई दुःख भइरहेछ।'

सती उत्तर दिशातर्फ मुख फर्काएर बसेकी छन्। देह छोड्नका निमित्त योगमार्गमा स्थिर भएर बसेकी छन्। शिवजीको ध्यान गर्दागर्दै उनले शरीरमा अग्नितत्त्वको भावना गरेकी छन्। भित्रबाट क्रोधाग्नि बाहिर आयो। शरीर सल्किन थाल्यो। आदिशक्ति जगदम्बाको अपमान भयो। अब दक्षको कल्याण छैन।

नारदजी कैलासमा शिवजीका समीप जानु भएको छ। भगवान् शङ्कर सनकादि ऋषिहरूलाई ब्रह्मविद्याको उपदेश दिइरहनुभएको छ। नारदजी कथामा बस्नुभएको छ। शिवजी कस्ता भोला हुनुहुँदो रहेछ भनेर उहाँ सोचिरहनुभएको छ। सतीले शरीर जलाइदिइन् र पनि उहाँलाई दुःख लागेन। नारदजी रोईरहनुभएको छ। उहाँ शिवजीलाई भन्नुहुन्छ—तपाईं विधुर (राँड़ो) हुनुभयो। तपाईंको अपमान भएको देखेर सतीलाई खपी नसक्नुभयो। उहाँले आफ्नो शरीर डढ़ाइदिनुभयो।' आदिशक्तिको नाश हुँदैन। सती अदृस्यरूपबाट शिवमा मिल्नुभयो।

नारदजी भन्नुहुन्छ—'तपाईंले यिनीहरूलाई दण्ड दिनुहोस्।' शिवजी भन्नुहुन्छ—'मैले कसैलाई पनि सजाय दिनु छैन।' जसले गङ्गाजी माथमा राखेको छ उसलाई क्रोध कसरी आउला ? शिवजी परमात्मा हुनुहुन्छ, उहाँलाई रीस उठ्दैन। कामले कष्ट दिन सकेन।

बहुतै सोझो मानिसलाई जगत्मा मानिस कमजोर सझन्छन्। तपाईंका गणहरू मारिएका छन् भनेर नारदजीले भन्दा शिवजी केही रिसाउनुभयो। उहाँले जटाबाट वीरभद्रलाई प्रकट गर्नुभयो। शिवजीले उनलाई भन्नुभयो—दक्ष प्रजापतिको यज्ञ यजमानसहित तिमीले नाश गरिदेऊ। वीरभद्र उहाँ गए र संहार गरे। यज्ञभूमिलाई श्मशान तुल्याइदिए। यज्ञको विध्वंस भयो। दक्षलाई समातेर उसको शिर छुट्याइदिए। देवताहरू आत्तिए। तिनीहरू ब्रह्माजीको शरणमा गए। ब्रह्माजीले सबैलाई दोष दिनुभयो र भन्नुभयो—'जुन यज्ञमा शिवजीको पूजा हुँदैनथ्यो वहाँ तिमीहरू किन गयौ ? जाओ, गएर शिवजीसँग क्षमा माग।' देवता भन्दछन्—हामीहरूको एक्लै जाने साहस छैन। तपाईं पनि हाम्रा साथ हिँड्नुहोस्।

भगवान् शंकरको क्रिया विना सिद्धि पाइँदैन। कैलासको फेदीमा सिद्ध महात्माहरूको आश्रम छ।

सबै देवता कैलासमा आउँछन्। महादेवजी ब्रह्माजीलाई साष्टाङ्ग प्रणाम गर्नुहुन्छ। देवताहरू शिवलाई नमस्कार गर्छन्। ब्रह्माजी हाँस्दै भन्नुहुन्छ—यज्ञलाई उत्पन्न गर्ने तपाईं हो र विध्वंस गर्ने पनि तपाईं स्वयं हुनुहुन्छ। त्यसकारण अब यज्ञ परिपूर्ण होस्, यस्तो गरिदिनुपर्‍यो। तपाईं पनि वहाँ हिँड्नुहोस्। शिवजी सीधा हुनुहुन्छ। जानलाई तयार हुनुभयो। यज्ञमण्डपमा रगतको खोलो बगेको देखेर वीरभद्रलाई दोष दिनुभयो—'मैले तिमीलाई शान्तिसँग काम तामेल गर्नू भनेको थिएँ।' वीरभद्र क्षमा माग्दछन्। दक्षको जीउमा बोकाको शिर लगाइयो। बोको अति कामी हुन्छ। शिवजीको निन्दा गर्ने मानिस दोस्रो जन्ममा बोको हुन्छ।

अजको दोस्रो अर्थ हो परब्रह्म। दक्षको शरीरमा बोकाको टाउको जड़ियो अर्थात् दक्षलाई परब्रह्मदृष्टि प्राप्त भयो। अज मस्तकको अर्थ हो ब्रह्मदृष्टि।

दक्ष होशमा आए र शिवको स्तुति गर्न थाले। दक्ष प्रजापतिले शिवको पूजा गरे। उनले 'आफ्नी छोरी सतीको दर्शन गर्न चाहन्छु' भने।

शिवजीले सतीसँग सोध्नुभयो—'तिमी बाहिर आउन चाहन्छ्यौ ?' जगदम्बाले नामंजूर गरिन्। शिवपूजन गरियो कृष्ण भगवान् प्रकट हुनुभयो। कृष्णाका मतअनुसार शिव र ममा जो भेद राख्छ त्यो नरकगामी हुन्छ। यस सिद्धान्तको वर्णन भागवतमा अनेक ठाउँमा गरिएको छ।

हरि र हरमा दक्षले जो भेद गरेका थिए त्यो अब दूर भयो। एकनाथ महाराजले 'भावार्थ रामायण' मा हरिहरको अभेद देखाएको छ। सत्त्व गुणको रङ्ग सेतो हुन्छ। विष्णु भगवान् सत्त्वगुणका स्वामी हुनुहुन्छ। त्यसकारण उहाँको रङ्ग सेतो हुन्छ। यस्तो किन भयो ? विष्णु काला र शिवजी

गोरा। एकनाथजीको लेखाइ अनुसार शिवजी सारा दिन नारायणको ध्यान गर्नुहुन्छ र नारायण सदा शिवजीको ध्यान गर्नुहुन्छ। त्यसकारण शिवजीलाई सेतो पाइयो र नारायणजीलाई शिवजीको कालो रङ्ग भयो। यस प्रकार ध्यानमा यस्तो गुण हुन्छ जो जसको ध्यान गर्छ उसलाई उसको रङ्ग पाइन्छ। त्यसकारण दुवैमा अभेद छ। हरिहर एक हुन्। शिवकृपा विना सिद्धि पाईंदैन। ब्रह्मविद्या पनि शिवकृपा विना पाईंदैन। शिवतत्त्व एउटै हो, यो जीवमात्रलाई संझाउनका लागि भगवान्-द्वारा लक्षित गरिएको हो। जीवमात्रलाई शिवजीसँग भेट्ने इच्छा हुन्छ।

निवृत्तिधर्मको आचार्य हुनुहुन्छ शिवजी र प्रवृत्तिधर्मको आचार्य हुनुहुन्छ श्रीकृष्ण। सब किसिमको प्रवृत्ति भए पनि प्रवृत्तिको अलिकति पनि रङ्ग नलागोस् भन्ने आदर्श श्रीकृष्णले जगतलाई देखाइदिएको छ।

दक्षको यज्ञ हुँदा यो देखियो अनन्य भक्तिको अर्थ यो होइन एउटै देवको भक्ति गर, दोस्रोको होइन। अनेकमा एउटै देवको दर्शन गर, भक्तिको यही अर्थ हो। प्रभु सर्वव्यापक हुनुहुन्छ। जसले सबैमा प्रभुको दर्शन गर्दछ त्यही उत्तम वैष्णव हो।

आफ्नो एउटा इष्टदेवमा परिपूर्ण भाव राखेर अरू दोस्रा देवहरूलाई आफ्नो इष्टदेवको अंश मानी वन्दना गर्नु। पत्नीले अनन्य भाव पतिमा राख्दछे र अरू सम्बन्धीहरूमा सामान्य प्रेम राख्दछे। हामीले शिवजीको पूजा गऱ्यौं भने हामीलाई अन्याश्रयको दोष लाग्ने छ भनेर कति वैष्णवहरू भन्दछन् यो भूल हो।

पाँचदेव एउटै हुन्, उनमा भेदबुद्धि नगर। शिव र पार्वतीका विवाहका समयमा पनि श्रीगणेशको पूजा गरिएको थियो। गणपति पनि ब्रह्मरूप हुन्। उनी नित्य छन्, तर पार्वतीकहाँ उनको अवतार भएको थियो। भलै यी सबको भक्ति गर तर यदि बालकृष्णको सेवा गरेनौ भने सबै पूजा निष्फल हुने छ। बालकृष्ण प्रेमको दान गर्नु हुन्छ। यस प्रेमका विना ज्ञान शुष्क हुन्छ। प्रेमविना ज्ञानको शोभा छैन। दक्ष प्रजापतिले यज्ञ गरे तर उनले भेदबुद्धि राखेकाले शिवजीको पूजा गरेनन्, त्यसकारण उनको यज्ञमा विघ्न पऱ्यो।

यो शरीर पञ्चायतन हो। पञ्चतत्त्वहरूद्वारा यो शरीर रचिएको छ। एक-एक तत्त्वको एक-एक देव हुन्।

यस पञ्चायतनका पाँच प्रधान देव यस प्रकार छन्—पृथ्वीतत्त्व-गणेश। गणेशको उपासना गर्नाले विघ्नहरूको नाश हुन्छ। गणेश विघ्नकर्ता हुन्। गणेशपूजाले तिम्रो सत् कार्यमा विघ्न पर्दैन। जलतत्त्व शिव। शिवको उपासनाले ज्ञान पाइन्छ। तेजतत्त्व सूर्य। सूर्यको उपासनाले हामीलाई निरोगी बनाउँछ। ''आरोग्यं भास्करादिच्छेत्।'' पृथ्वीमा सूर्य साक्षात् देव हुन्। एउटा नास्तिकले मलाई भगवान्को दर्शन गराइदिनू भन्यो। मैले सूर्यपट्टि इसारा गरेर भनें—'यिनै साक्षात् परमात्मा हुन्। प्रतिदिन कमसे कम एघार सूर्य नमस्कार गर।'

**नमस्कारः प्रियो भानुः जलधाराप्रियो शिवः।**
**अलङ्कार प्रियो कृष्णः ब्राह्मणो मोदक प्रियः॥**

वायुतत्त्व-माता। माता पार्वतीको उपासनाले धन दिन्छ। आकाशतत्त्व—विष्णु। विष्णुको उपासनाले प्रेम दिन्छ र प्रेम बढ़ाउँदछ पनि।

सूर्यको पूजाले तिमी निरोगी हुनेछौ। शिवजीको पूजाले ज्ञान प्राप्त हुनेछ। पार्वतीको पूजाले सम्पत्ति भए पनि सम्पत्तिको वृद्धि हुने छ। बुद्धि, शरीर, सम्पत्ति भएर पनि श्रीकृष्णको सेवा गरेनौ भने काम पूरा हुँदैन। श्रीकृष्ण प्रेमदाता हुन्।

द्वारिकाधीशको सेवा स्मरणमा तन्मय भएर यदि प्रजापति दक्षले शिवजीको पूजा छोड़िदिएको भए केही हुने थिएन। तर उनको मनमा वैरभाव थियो। उनले कुभाव राखी यज्ञ गरे, त्यसकारण त्यो यज्ञ पापरूप भयो।

जीव दक्ष हो र सद्‌गुरु शिवजी हुनु हुन्छ। शरीरलाई सादामय बनाएर राख। शरीर एक मुट्ठीभर भस्म हो। त्यसकारण उसको अनावश्यक सिंगार र स्याहार गर्न छोड़िदेऊ। यही हो शिवजीको उपदेश। यसैले उहाँले आफ्ना शरीरमा भस्म दल्नुहुन्छ। शरीरको श्रृंगार छोड़िदेऊ। मनुष्य चोला तपश्चर्याका निमित्त हो। जसले तप गर्दैन त्यसको पतन भइहाल्छ।

मानव शरीरको लक्ष्य भोग होइन, भजन हो, ईश्वरभजन हो। समभाव र सद्‌भाव सिद्ध गर्नका निमित्त सत्सङ्गको आवश्यकता पर्छ। समभाव त्यसवेला सिद्ध हुन्छ जब प्रत्येक जड़-चेतनतर्फ ईश्वरको भावना जाग्दछ।

मानव अवतार परमात्माको आराधना र तप गर्नका निमित्त हो। पशु पनि भोगहरूको उपभोग गर्छन्। यदि मानिस केवल भोगका पछि मात्र लट्टू भयो भने फेरि त्यसमा र पशुमा के फरक भयो? प्रभुले मानिसलाई बुद्धि दिएको छ, ज्ञान दिएको छ। पशुलाई केही दिएको छैन। आउने भोलिको चिन्ता मानव गर्न सक्दछ, पशुले सक्दैन।

न देव तप गर्न सक्दछन् न पशु। देव पुण्यको उपभोग गर्न सक्दछन्। तपश्चर्याको अधिकार केवल मानिसलाई मात्र छ। मनुष्य विवेकपूर्वक भोगको पनि उपभोग गर्न सक्छ।

मनुष्य जीवन विविध प्रकारको तप गर्नलाई हो। तपका कैयौं प्रकार छन्।

कष्ट सहँदै सत्कर्म गर्नु तप हो। उपासना पनि तप हो। पूर्णिमा-औंसीको दिन पवित्र मानिएका छन्। ती दिनमा अनशन गर्नुपर्छ। परोपकारमा लीन गराउनु पनि तप हो।

गीतामा तपको व्याख्या गर्दै भनिएको छ—

**भावसंशुद्धिरित्येतत्तपो मानसमुच्यते।**

भावसंशुद्धि ठूलो तप हो। सबैमा ईश्वरको भाव राख्नु पनि तप हो। सबैमा ईश्वर विराजमान हुनुहुन्छ यस्तो अनुभव गर्नु महान् तप हो। अर्थात् अन्तःकरणको पवित्रताले हृदयमा सदा-सर्वदा

शान्ति र प्रसन्नता प्राप्त हुने छ। प्रिय र सत्य बोल्नु वाणीको तप हो। पवित्रता, सरलता, ब्रह्मचर्य, अहिंसा शरीरसम्बन्धी तप हुन्।

सबैका प्रति समभाव र सद्भाव राख्ने मानिसको मनमा कहिले पनि कामले प्रवेश गर्न पाउँदैन। विकार र वासनालाई नष्ट गर्ने यही श्रेष्ठ उपाय हो। जसले सबैका प्रति सद्भाव राख्छ र सबैमा ईश्वरको अंश अनुभव गर्छ तब त्यो सफल हुन्छ।

प्रजापति दक्षले यज्ञमा शुद्धभाव, समभाव नराखेका हुनाले उनलाई दुःख सहनुपर्‍यो। उनलाई यज्ञबाट कल्याण भएन किनभने उनले शिवजीका प्रति कुभाव राखेर यज्ञ गरेको थियो, दक्षले यज्ञ गर्दा पनि मनमा दुर्भावना राखेको थियो शिवजीको पूजा नगर्ने। यसै कारणले यज्ञको काममा बाधा हुन आयो। त्यसकारण कतैतिर पनि कुभाव नराख। तब धर्म सफल हुन्छ। सद्भावरहित भएको कारण दक्षको धर्मकार्य अधर्मकार्य भयो। प्रजापति दक्षको यज्ञका कथाको उद्देश्य हरिहरको अभेद देखाउनका लागि हो अर्थात् हरि र हर दुवै एक हुन्।

शिवचरित्रको यो कथा वक्ता र श्रोताका पापहरूलाई भस्मीभूत गर्ने हो।

अधर्मका वंशजहरूबाट सावधान होऊ। चौथो स्कन्धको आठौं अध्यायका प्रथम पाँच श्लोकहरूमा अधर्मका वंशजहरूको उल्लेख छ। यी श्लोक महत्त्वका छन्। पुण्य गर्न नसकेको भए केही छैन, तर पाप कहिल्यै नगर।

अधमकी पत्नीको नाउँ हो मृषा देवी। मिथ्याभाषण गर्ने खराब स्वभाव। त्यसैबाट दम्भको उत्पत्ति भयो। मानिस वैष्णव हुन चाहन्छन् तर साँचो वैष्णव हुने इच्छा कसैले राख्दैनन्।

दम्भको छोरो लोभ र लोभको छोरो क्रोध।

क्रोधकी छोरी दुरुक्ति अर्थात् कर्कश वाणी हो। महाभारत युद्धको र रामायणको करुणकथाको मूल यस कर्कशवाणीमै छ।

गोड़ा चिप्लँदा जब दुर्योधन लड़ेथे तब द्रौपदीले भनिन्—"अन्धस्य पुत्रः अन्धः।" दुर्योधनले यी शब्दहरूबाट लज्जा र अपमानको अनुभव गरे र परिणामतः महाभारतको दारुण युद्ध शुरु भयो।

सीताजीले वनमा कर्कशवाणीद्वारा लक्ष्मणलाई गाली गर्दा लक्ष्मणले इच्छा नहुँदै पनि मारीच राक्षसको छलपूर्ण शब्दहरूको पछि लाग्नुपर्‍यो, लक्ष्मणको अनुपस्थितिमा रावणले सीतालाई हरेर लग्यो र रामायणको आरम्भ भयो।

त्यसकारण कर्कशवाणीको व्यवहार कहिल्यै नगर्नू। केवल यस दुर्गुणबाट बाँच्न सक्यौ भने पनि धेरै कुरा हुन सक्छ। कर्कशवाणीद्वारा कलि उत्पन्न हुन्छ। कलि कलहकै रूप हो।

भागवतको उद्देश्य हो इन्द्रियहरूलाई हरिरसमा लगाइराख्नु।

नामदेवले सूचिकार, गोराले कुम्हाले, सेनाले नाऊको काम गर्थे। उनीहरूले आफ्ना-आफ्ना काम-धन्दाबाट ज्ञान पाए र व्यवहार शुद्धिका कारण उनको संसार-सागरको नाउ पार लाग्यो।

अब अर्थप्रकरण आरम्भ हुन्छ। शान्ति सम्पत्तिबाट हुँदैन तर संयम, सदाचार र राम्रा संस्कारहरूबाट प्राप्त हुन्छ। सम्पत्तिबाट विकार-वासना बढ्छ। त्यसकारण धर्मको प्रकरण पहिले आउँछ र अर्थ पछिबाट।

अब ध्रुवजीको कथा आइरहेछ। उत्तानपादको कथा जीवमात्रको कथा हो।

## ध्रुवाख्यान

मैत्रेयजीले मनु महाराजकी तीन कन्याहरूको वर्णन गरे। मनु महाराजका दुइ छोरा प्रियव्रत र उत्तानपादको कथा वर्णन गरिन्छ।

उत्तानपादका दुइ पत्नीहरू थिए सुरुचि र सुनीति। सुरुचिको छोराको नाउँ उत्तम र सुनीतिको छोराको नाउँ थियो ध्रुव।

जीवमात्र उत्तानपाद हो। आमाको गर्भमा बस्ने जति सबै जीव उत्तानपाद हुन्। जन्मँदाखेरि पहिले शिर र पछि गोड़ा बाहिर आउँछन्। जसको गोड़ा पहिले माथि हुन्छ र पछि तल हुन गएको छ भने त्यही उत्तानपाद हो। जसको गोड़ा तल र माथि भएको छ त्यही उत्तानपाद हो। जन्मका समयमा सबैको यस्तै दशा हुन्छ।

जीवमात्रका दुइ पत्नीहरू हुन्छन्—सुरुचि र सुनीति। मनुष्यलाई सुरुचि मन पर्छ। इन्द्रियहरूले जे मागे पनि ती विषयहरूको उपभोग गर्ने इच्छा हुनु सुरुचि हो। सुरुचिको अर्थ हो वासना। आजकल तर सबैलाई रुचि मन पर्छ। मनलाई, इन्द्रियहरूलाई जे राम्रो लाग्दछ सोही मनुष्य गर्न थाल्छ। त्यसले न शास्त्रलाई सोद्धछ, न धर्मलाई सोद्धछ, न सन्तहरूलाई। रुचिको अर्थ मनले रुचाएको इच्छा। मनले जे पनि मागोस्, तिनै भोगहरूमा लीन हुनका निमित्त जो आतुरिन्छ त्यो रुचिको दास हो। जसलाई रुचिसँग प्रेम हुन्छ त्यसलाई नीति कसरी प्यारो लाग्छ सक्छ? नीतिले भलै विरोध गरोस्, तैपनि इन्द्रियहरू स्वभावतया विषयहरूतर्फै दौड़िन्छन्। जिब्रोले जे पनि मागोस् ती सबै उसलाई नदेऊ। कति मानिस सुपारी नखाई बस्न सक्दैनन्। सुपारी त्यसो ठिकै हो, तर परिमाणभन्दा ज्यादा खाएमा त्यो मानिस संयमी हुन सक्दैन।

मनुष्यमात्रलाई सुनीति अर्थात् नीतिसँग ज्यादा प्रेम हुँदैन। ऊ प्यारी रानी होइन नि।

मनुष्यलाई सुनीतिसँग होइन, सुरुचिसङ्गनै प्रेम हुन्छ। जीवमात्रका निमित्त यही कुरा सत्य हो। त्यसलाई सदाचारयुक्त संयमसहित पूर्ण जीवन मन पर्दैन। जीव वासनाका अधीन भएर विलासी जीवन बिताउन चाहन्छ। जीवमात्र नीति अधीन बस्न चाहँदैन। सुरुचिका अधीन हुन पाए उत्तम फल पाइन्छ भनेर जीव सोच्दछ। सुरुचिको फल उत्तम हुन्छ। त्यसैले सुरुचिका छोराको नाउँ उत्तम भयो। उप् = ईश्वर, तम = अन्धकार। अन्धकार अज्ञान हो। ईश्वरको स्वरूपको अज्ञान उत्तमको स्वरूप हो। इन्द्रियहरूको दास भएपछि ईश्वर स्वरूपको ज्ञान हुन पाउँदैन। जो सुरुचिमा फँसेको छ र विलासी जीवन बिताइरहेछ त्यसलाई ईश्वरका स्वरूपको ज्ञान हुन सक्दैन। त्यसले

ईश्वरलाई चिन्न सक्दैन। ईश्वरको ज्ञान विलासीलाई हुन सक्दैन, विरक्तलाई मात्र हुन सक्छ।

गीताजीलाई सोध कस्ता व्यक्तिलाई ईश्वरको ज्ञान हुन सक्छ ? जसमा सात्त्विक गुणको बुद्धि हुन्छ, त्यसैलाई ज्ञान प्राप्त हुन्छ। सात्त्विक गुणको बुद्धि संयमपूर्ण सदाचारी जीवनयापन गर्नाले हुन्छ। केवल शब्दज्ञान ज्ञान होइन। उत्तम विषयले क्षणिक सुख दिन्छ र त्यो उत्तम सुख क्षणिक विषयानन्द हो।

इन्द्रियहरू र विषयहरूको संयोगबाट जो क्षणिक सुख पाइन्छ, त्यो सुख होइन सुखको केवल आभास मात्र हुन्छ। लुतोलाई कन्याउनाले सुख हुँदैन, सुखको आभास मात्र हुनजान्छ। मनुष्यको हरेक इन्द्रियलाई विषयोपभोगको आकाङ्क्षा हुन्छ। बुद्धि आउँछ तर स्थायी हुन पाउँदैन। इन्द्रियहरू र विषयहरूको संयोगबाट क्षणिक सुख पाइन्छ। भोजन सरस भएमा चाहिएभन्दा बढ़ी खाइएला, अजीर्ण पनि हुनजाला। उसमाथि अन्न पचाउनका निमित्त पाचक गोली पनि खानुपर्ला। यस्ता बखतमा रुचिले अरू थप भन्छे, तर नीतिले भने रोक्छ।

स्वामी शङ्कराचार्य त्यसैले भन्नुहुन्छ—

**स्वाद्वन्नं न तु याच्यतां विधिवशात्प्राप्तेन संतुष्यताम्।**

स्वादिष्ट अन्न माग्ने काम नगर, दैववशात् जे पनि पाउँछौ, त्यसैबाट सन्तुष्ट होऊ। स्वादिष्ट भोजन गर्नेले भजन गर्न सक्दैन, नीतिको फल आरम्भमा कष्टदायी भए पनि अन्त्यमा सुखदायी हुन्छ। उता विषयानन्दको आरम्भमा परिणाम सुखदायी भए पनि उसको परिणाम दुःख मात्र हुन्छ।

जसको जीवन शुद्ध छ, पवित्र छ उसैलाई भजनान्द पाइन्छ र त्यही आनन्द टिकाऊ हुन्छ।

नीतिको अधीन रहेर जो पवित्र जीवन बिताउँछ त्यसैलाई मात्र ईश्वरको ज्ञान हात लाग्छ।

सुनीतिसँग ध्रुव भेटिन्छ। सुनीतिको फल ध्रुव हो, सुनीतिको छोरो ध्रुव हो। ध्रुवको तात्पर्य हो—अविनाशी, अनन्त सुख हो, ब्रह्मानन्दको कहिले विनाश नहुने। जो नीतिका अधीन रहन्छ, त्यसलाई ध्रुव जस्तो ब्रह्मानन्द प्राप्त हुन्छ।

मनुष्य यदि सुनीतिको अधीन हुन्छ भने सदाचारी हुन जान्छ। यदि त्यो सुरुचिको अधीन भयो भने दुराचारी हुन्छ।

तिम्रा सामुन्ने यी दुइ आनन्द छन्। विषयानन्द र परमानन्द। तिमी कुनलाई रोज्छौ ? भजनानन्द मात्र रोजिने योग्य छ। पहिला आनन्दले क्षणिक सुख दिन्छ र त्यसको परिणाम दुःखद हुन्छ। दोस्रो आनन्द शुरूमा कष्टदायी हुन्छ तर अन्तमा सुखदायी हुन्छ।

दुइ मित्र यात्रा गर्न भनी हिँडे। एउटाको बानी यस्तो थियो पलङ्गमा तकियाविना उसलाई निद्रा लाग्दैनथ्यो। त्यसले गुन्टा कस्यो तर बोक्ने भरिया पाएन, त्यसकारण सम्पूर्ण सामान उसले आफैंले बोक्नुपर्‍यो। बाटामा एक भलाद्मी भेटिए। यिनले त्यो मानिसको दशा देखेर 'यो भारी

कति कष्टदायी छ होला ?' भनी सोधे 'यो भारीविना किन यात्रा गर्दैनौ ?' उसले जवाफ दियो— 'मलाई यो भारी आफैंले किन नबोक्नुपरोस् तर राती सुत्दा बड़ो आनन्द आउँछ।' रातीको आनन्दका निमित्त ऊ सारा भारी दिनभरि बोकिहिँड्यो। रात्रिमा कस्तो आनन्द आउँदो होला त ?

यो कथा अरू कसैको होइन, हाम्रो आफ्नै हो। जीवात्मा यात्रा गर्न भनी हिँड्यो। क्षणिक सुखका निमित्त मानिस सारादिन गधाको जस्तो मिहिनेत गर्दछ। सारा दिन दुःखको पर्वत शिरमा बोकेर हिँड्छ। क्षणिक सुखका निमित्त त्यसले कति चिन्ता र कष्ट उठाउँछ। विषयसुख क्षणिकमात्र होइन तुच्छ पनि हो।

ध्रुव अविनाशी ब्रह्मानन्दको भजनानन्द स्वरूप हो। जीव जब भजनानन्दतर्फ जान्छ तब सुरुचि विघ्न खड़ा गर्दिन्छे। जीव र ब्रह्मको मिलन सुरुचिले हुन दिन्न। जो मानिस सुरुचिको अधीन छ सम्झ त्यो कामाधीन पनि छ।

उत्तानपाद राजाका दुइ रानीहरू र दुइ पुत्रहरू थिए। राजालाई सुनीति होइन सुरुचि प्यारी थिइन्। हामी सबैको पनि यही कुरा हो। हामीलाई नीतिसँग प्रेम छैन, तर इन्द्रियहरू र वासनालाई भुल्याउने सुरुचिसँग प्रेम छ।

एक पटक उत्तानपाद सिंहासनमा बसेका थिए। सुरुचि पनि त्यहीं थिइन्। उत्तम राजाका काखमा खेलिरहेको थियो। यो देखेर ध्रुव पनि पिताजीको काखमा गएर बस्ने मनसाय गरेर पिताजी नजिक गए—'मलाई पनि काखमा लिनुहोस्' भने।

बालक बालकृष्णको स्वरूप हो। त्यसको कहिले पनि अपमान नगर। ठूलठूला महात्मा पनि बालकहरूका साथ खेल्थे। रामदास स्वामी जब बालकहरूका साथ खेल्थे तब शिष्यहरूले 'यो के गरेको ?' भनी सोध्थे। तब स्वामीजी भन्थे—

वये पीर ते थोर होउनी गेले,<br>
वये थोर ते चोर होउनी मेले।

यिनी बालकहरूका साथ खेल्न मलाई आनन्द लाग्छ। बालख आफ्ना मनमा जो आउँछ त्यस्तै बोल्दछन् र जस्तो बोल्दछन् त्यस्तै पनि गर्दछन्। मन, वाणी र क्रिया एकनास भएपछिमात्र तिमी भगवान्को भक्ति ठीक किसिमले गर्न सक्नेछौ। त्यस्तै भक्तिले पनि तिमीलाई आनन्दित तुल्याउने छ। बालक निर्दोष हुन्छ। त्यसलाई कपट नसिकाऊ। उनमा सानैदेखि राम्रो संस्कार घुसाऊ। उनीसँग अनुचित प्रेम पनि नगर।

उत्तानपादले आनन्दसाथ ध्रुवलाई आफ्नो काखमा लिन खोजे तर सुरुचिलाई यो कुरा मन परेन।

जीवका नजिक जस्तै भजनानन्द आउँछ, सुरुचिले बाधा उपस्थित गरिदिन्छे। पूजा गर्दाखेरि मन भान्सातर्फ गयो अथवा प्रभु भजन गर्दा मन विषयहरूमा बगेर गयो भने भन्ठान सुरुचिले बाधा गरी।

ध्रुवलाई राजाले काखमा बसाउन खोजे पनि सुरुचिलाई मन परेको थिएन। उसले विचार गरी राजा ( जीवात्मा )-लाई ध्रुव ( भजनानन्द ) भेटियो भने ऊ वासनाधीन हुँदैनन् र मेरो केही काम पनि नहोला। त्यसकारण सुरुचिले राजालाई ध्रुव काखमा नलिनू भनेर रोकी। राजा रानीका अधीनमा थिए। उनी कामान्ध थिए। उनले सोचे 'मैले ध्रुवलाई काखमा राखें भने सुरुचि रिसाउने छिन्। जेसुकै होस् मैले रानीलाई रीस उठाउनु भएन।' आवश्यकताभन्दा बढ़ी दुलहीको अधीनमा हुनु पाप हो। शास्त्रले यहाँसम्म भनेको छ यस्ता-स्त्रीअधीन पुरुषलाई हेर्नु पनि पाप लाग्छ। ऊ राजा थिए तर रानीको दास सरह थिए। धेरैजसो सबैको यस्तो दशा हुन्छ। साहेब बाहिरतिर अकड़िएर घुम्छ तर घरमा दुलहीका सामुन्ने भिजेको बिरालो बन्दछ।

राजाले ध्रुवको अवहेलना गरे र मुण्टो परक्क बटारे। ध्रुवजीलाई ठूलो आशा थियो। उनले हात पसारेर भने पनि—'मलाई काखमा बसाउनुहोस्।' सुरुचिले ध्रुवकुमारलाई भनी—'जा ! यहाँबाट भाग्। राजाको काखमा बस्ने योग्यता तँमा छैन। तँ राजाकी मन नपरेकी रानी सुनीतिको छोरो होस्, त्यसकारण तँ उनको काखमा बस्न सक्दैनस्।'

ध्रुवजीले सोधे—'आमा, के म आफ्ना बाबुको छोरो होइन ?'

शुकदेवजी वर्णन गर्नुहुन्छ—

सुरुचिले त्यस बखत छेड़ हानेर भनी—तेरी आमा रानी होइन। रानी म हुँ। तेरी आमा नोकर्नी हो। राजाको काखमा बस्ने इच्छा भए तैंले मेरो कोखबाट जन्म लिनुपर्थ्यो। तँ वनमा गएर तप गर्, ईश्वरको आराधना गर् र मेरो कोखमा जन्म पाऊँ भनेर बिन्ती गर्।

भगवान् जब प्रसन्न हुनुहुन्छ भने तेरा घरमा जन्म लिनलाई मात्र किन माग्ने ? तर सुरुचि मूर्ख थिई र यस्तो भनिराखेकी थिई।

ध्रुवजीलाई आशा थियो पिताजीले केही बेरसम्म काखमा लिनु होला, तर सुरुचिको अपमानले गर्दा रुँदै उनी आफ्नी आमा सुनीति छेउ फर्केर आए। सुनीतिले छोरालाई सोधिन्—'बाबु तँ किन रुन्छस् ? तँलाई के भयो ?'

बालक स्वभाव सुन्दर हुन्छ, त्यसकारण ऊ केही बोल्दैन। बारबार रोइरहेछ। सुनीति बुझ्दछिन्, मेरो लायक छोरा मेरो दशालाई राम्ररी बुझ्छ। जसकी आमा सुनीति हुन्छिन् त्यो पनि सुशील हुन्छ। वंशमा जब कैयन् मानिसहरूको पुण्य जम्मा हुन्छ अनि मात्र पुत्र उद्धार उत्पन्न हुन्छ।

ध्रुवले विचार गरे—'म सबै कुरा भनौं भने परम्पराअनुसार माता-पिताको निन्दा गरेको पाप लाग्ने छ।' यसै बीचमा आएर एउटी दासीले सबैकुरा भनिदिई।

सबैकुरा सुनेपछि सुनीतिले मनमा विचारिन् मैले सुरुचिको केही बिगारेकी थिइनँ। मेरा मुखबाट सौताका निमित्त वैरभावका संस्कार जम्न जान्छ र भविष्यमा अनर्थ होला। यसकारण सुनीतिलाई दुःख लाग्यो तापनि उनले आफ्नो छोरालाई राम्रो संस्कार दिन चाहन्थिन्। आफ्नो बालकले राज्य सम्पत्ति भलै नपाओस् तापनि संस्कार भने राम्रो पाउनैपर्छ भन्ने उनको इच्छा भयो।

सुनीति जस्ती आमा भएका खण्डमा बालकलाई हजारौं शिक्षकहरूको अपेक्षाभन्दा बढ़ी राम्रो शिक्षा दिन सक्दछिन्।

सुनीतिले दुःखको आवेशलाई दबाएर धैर्यपूर्वक भनिन्—'तिम्री सौतिनी आमाले त्यसो तर कुनै नराम्रो कुरा भनिनछिन्। उनले तिमीलाई जो उपदेश दिइन् त्यो राम्रो छ र म पनि तिमीलाई त्यही उपदेश दिन्छु। बाबु, भिखै माग्नु छ भने किन भगवान्सँग नमाग्ने ? मानिसले जति धेरै मागे पनि दिनुहुनेछ तर उसले पाएजति सबै लिन पनि सक्दैन। बाबु, भगवान्ले तिमीमाथि कृपा गर्नुहुनेछ। तिम्रो मात्र होइन, जीवमात्रका सच्चा पिता परमात्मा मात्र हुनुहुन्छ।'

मैले तिमीलाई नारायणको जिम्मा लगाएकी छु। जुन पिताले तिम्रो मुखसम्म हेर्न चाहेनन् भने उस्ताको घरमा बसिरहनु निरर्थक छ। यस घरमा बसिरह्यौ भने तिम्री सौतेनी आमाले बराबर कष्ट दिइनै रहने छन् नरोऊ, रोयौ भने मलाई पनि दुःख लाग्ने छ। तिम्री विमाताले तिमीलाई जङ्गलमा जान जो भनेकी छन्, त्यो ठीकै गरेकी छन्। यसमा तिम्रो कल्याण हुनेछ।

आराधया धोक्षज पादपद्मं
यदीच्छसेऽध्यासनमुत्तमो यथा।

(भा० ४-८-१९)

तिमी यदि उत्तमको जस्तै राजसिंहासनमा बस्ने इच्छा गर्छौ भने श्री भगवान्का चरणकमलहरूको आराधना गर।

अनन्यभावे निजधर्म भाविते।
ममस्यवस्थाप्य भजस्व पुरुषम्॥

(भा० ४-८-२२)

स्वधर्म पालनबाट पवित्र भएको आफ्नो चित्तमा पुरुषोत्तम भगवान्को स्थापना गर र अन्य सबैको चिन्तन छोड़ेर केवल प्रभुको मात्र भजन गर।

अब यस घरमा नबस। वनमा गएर भगवान् नारायणको भजन गर।

आमालाई ध्रुवले भने—'विमाताले हामी दुवैको अपमान गरेकी छन्। यस घरमा न तपाईंको सम्मान छ न मेरो। किन हामी दुवैजना वनमा गएर प्रभुको भजन नगरौं ?'

यो कुरा सुनेर सुनीति भन्दछिन्—'बाबु, म स्त्री हुँ। मेरा पिताले मलाई तिम्रो बाबुलाई दान दिनुभएको छ। मलाई उहाँकै आज्ञामा बस्नुपर्छ। पतिले मेरो जतिसुकै अपमान गरे पनि मैले पतिलाई त्याग्नुहुन्न। तिमी स्वतन्त्र छौ, म परतंत्र। मलाई मेरी सौता जो मेरा पतिकी प्रिय छिन् उनको पनि सेवा गर्दछु, म तिमीलाई एक्लै पठाइरहेकी छैन। तिम्रा साथ मेरो आशीर्वाद छ, परमात्माले तिमीलाई आफ्नो काखमा राख्नुहुनेछ। त्यसकारण तिमी वनमा जाऊ र परमात्माको त्यहाँ आराधना गर। मेरा नारायणले तिमीलाई आफ्नो अँगालोमा हाल्नुहुनेछ।'

तर अझ पनि ध्रुवलाई डर लागिरहेछ। सुनीति छोरालाई भन्छिन्—'तिमी एक्लै छैनौ। मेरा नारायण तिम्रा साथमा हुनुहुनेछ।'

भगवान् आफ्ना साथै हुनुहुन्छ भनेर जीव अनुभव गर्न सक्दैन तर जीवमात्रका सच्चा मित्र तर नारायण मात्र हुनुहुन्छ। यो व्यक्ति धनी छ या गरीब, शिक्षित छ या अशिक्षित, सानो छ या ठूलो भनेर भगवान् यस्तो हेर्नुहुन्न। यस जीवको हृदयमा मेरा निमित्त प्रेम छ या छैन भनेर मात्र भगवान् हेर्न खोज्नुहुन्छ। प्रभुलाई प्रेमसँग बोलायौ भने उहाँ दौड़ेर आउनुहुने छ।

आफ्नो दुःखको कथा प्रभुसँग तिमीले एकान्तमा मात्र गर्नू। प्रभुलाई मनाऊ। मेरो पाप गर्ने स्वभाव छुटाउन सकिनँ भनेर बिन्ती गर। कृपा होस्। उहाँले तिम्रो प्रार्थना अवश्य सुन्नुहुने छ। ध्रुवले सोधे—'आमा, मजस्तो अबोध बालकलाई भगवान् भेटिनुहुन्छ र ?' ध्रुवलाई सम्झाउँदै सुनीतिले भनिन्—'अँ बाबु, भगवान् तिमीलाई अवश्य भेटिनुहुन्छ। मन लगाएर भगवान्को भजन गर्नू। भगवान् भावनाको भोको हुनुहुन्छ। ईश्वरलाई जसले प्रेमसँग बोलाउँछ उसका समक्ष उहाँ अवश्य प्रकट हुनुहुन्छ।'

नआतुरिई भगवान् भेटिनुहुन्न। आर्त्त भएर आरती गर।

उपनिषद्मा ईश्वरले भनेको छ—यो जीव मेरो छोरा हो 'अमृतस्य पुत्राः।' म जीवलाई काखमा बसाउन तयार छु। तर ऊ मेरा नजिकै आउँदैन।

श्रीनाथजीले एउटा हात माथि उठाएका थिए त्यो देखेर एउटा वैष्णवले उनलाई सोधे—'तपाईंले यस्ता किसिमसँग एउटा हात किन माथि उठाइरहनुभएको ?'

श्रीनाथजीले उत्तर दिनुभयो—'मेरा सबै बालकले मलाई बिर्सिसकेका छन्। म एउटा हात उठाएर सधैं उनीहरूलाई बोलाउँछु, तर उनीहरू मेरा नजिक आउँदैनन्।'

बालकले मेरो चाहिँ वन्दना गरिरहेछ तर विमाताको पनि उसले सद्भावपूर्वक वन्दना गरेदेखि उसको कल्याण हुने थियो भन्ने विचार सुनीतिले गरिन्।

कसैका प्रति द्वेष राखेर ईश्वरको आराधना गरिँदैन र यस्तो आराधना सफल पनि हुन सक्दैन।

सुरुचिको मनमा यो अरुचि कुभाव रहन गयो भने यसले नारायणको ध्यान गर्न सक्दैन। उसले बारम्बार सुरुचिकै कुरा मात्र विचार गरिरहन्छ।

सुनीतिले ध्रुवलाई सम्झाइन्—'तिमी मेरा लायक छोरा हौ। आफ्नो पूर्वजन्मको फलकै कारणले तिमीलाई अपमान सहनु परिरहेछ। कुनै जन्ममा तिमीले आफ्नो विमाताको अपमान गरेका हौला र उनले यस जन्ममा बदला लिइन्।'

लाभ-हानि, सुख-दुःख, मान-अपमान आदि सबै कुरा पूर्वजन्मको फल हो। ज्ञानी त्यसलाई हाँसी-हाँसी सहन्छन् र अज्ञानीले चाहिँ रोईरोईकन। जस्तो बीउ रोपेको हुन्छ त्यस्तै फल पाइन्छ।

'बाबु ! तिमीले मनमा केही पनि कुभाव नराख्नू। तिम्री विमाता तिम्रा पिताकी प्यारी छन्। के तिमी उनलाई प्रणाम गर्दैनौ ? तिमीले जसरी मलाई प्रणाम गऱ्यौ त्यस्तै किसिमबाट आफ्नी ती विमातालाई पनि प्रणाम गर जो तिम्रा पिताकी अति प्यारी छिन्। तिमीले मलाई प्रणाम गरेनौ भने पनि म तिमीलाई आशीर्वाद दिन्छु तर तिम्री विमाता तिमीले प्रणाम गरेपछि मात्र आशीर्वाद दिनेछिन्। उनको वन्दना गरेर गयौ भने भगवान् छिट्टै प्रसन्न हुनुहुनेछ। सबैको आशीर्वाद लिएर वनमा गयौ भने परमेश्वरले छिटै कृपा गर्नुहुने छ।'

जुन सुरुचिले बालकको अपमान गरी ऊ नै सुरुचिलाई वन्दना गर्नका निमित्त आफ्नो छोरा सुनीतिले पठाइरहेछिन्। धन्य-धन्य छन् सुनीति। यस्ती सुनीति जसका घरमा होलिन् त्यहाँ कलि आउन सक्तैन।

पाँच वर्षको बालक ध्रुव विमाता सुरुचिको वन्दना गर्न भनी गए। ऊ आफ्नो आसनमा अकड़िएर बसेकी थिई, ध्रुवजीले उसलाई साष्टाङ्ग प्रणाम गरे। मलाई किन प्रणाम गरिरहेछस् भनेर सुरुचिले सोधी।

ध्रुवजीले भने—'माता, म वनमा जाँदै छु, त्यसकारण यहाँसङ्ग आशीर्वाद लिन आएको हुँ।'

एक पलाका निमित्त सुरुचिको हृदय पग्लियो, कस्तो लायक रहेछ यो। अपमानित भएर पनि यसले मलाई प्रणाम गरिरहेछ। तर ऊ स्वभाववश दुष्ट भएकीले चाँड़ो सुध्रिने होइन। उसले विचार गरी ध्रुव यदि यहीं बस्यो भने उत्तमको राज्यमध्येबाट अंश माग्ला। त्यसकारण उसले ध्रुवलाई भनी 'ठीक छ। वनमा गइरहेछस् भने जा। मेरो आशीर्वाद छ तँलाई।'

बालकको प्रणामले सुरुचिका हृदयमा केही पनि विशेष भाव जागेको देखिएन। स्वभावलाई सुधार्न बड़ो मुश्किल काम छ। यसैले भनेको छ।

कस्तूरीको क्यारी करी, केशरकी बनी खाद।
पानी दिया गुलाबका, तऊ प्याजकी प्याज॥

सत्कर्मको फूल जबसम्म ठीक-ठीक बढ्न पाउँदैन, तबसम्म स्वभाव सुध्रिँदैन।

शुकदेवजी वर्णन गर्नुहुन्छ—'पाँच वर्षको बालकले आमाबाट आशीर्वाद लिएर वनतर्फ गयो।'

भागवतकी माताले पुत्रलाई तपश्चर्या गर्न वनमा पठाउँछिन्, जसरी सुनीतिले ध्रुवलाई पठाइन्। आजकलका आमाहरू बालकहरूलाई सिनेमा हेर्न पठाउँछन् पैसा पनि दिएर जा तेरो कल्याण होस्। ए ! सिनेमा हेरेर के खाक कल्याण होला। यसले आँखा, शरीर र अन्तमा जीवनसम्म बिग्रिनेछ। पैसा खर्च गरेर अँध्यारामा बस्नु अज्ञान नभए अरू के हो ? यो हाँस्ने या ठट्टा गर्ने कुरा होइन, रुने कुरा हो, सिनेमा हेर्नलाई आफ्ना बालकलाई पठाउने स्त्री माता होइन, शत्रु हो।

धन्य हुन् सुनीति जस्ता आमाहरू जसले आफ्ना सन्तानलाई राम्रो संस्कार दिन्छन्।

बालक आमाका दोषका कारणले चरित्रहीन, पिताका दोषका कारणले मूर्ख, वंशका दोषका कारणले डरपोक र स्वयंका दोषका कारणले दरिद्र हुन्छ।

दुःशीलो मातृदोषेन पितृदोषेन मूर्खता।
कार्पण्यं वंशदोषेन आत्मदोषात् दरिद्रता॥

आफ्ना दुवै माताहरूबाट आशीर्वाद लिएर ध्रुव वनतर्फ गइरहेछन्। हेर्नुहोस्, केवल पाँच वर्षको बालक वनतर्फ गइरहेछ। वनमा हिंस्रक पशु होलान् भनेर ध्रुव सोच्दछन्। तिनीहरूले मलाई खाइ नहाल्लान् ? फेरि अर्को क्षणमा विचार गर्छन्—'खाँदैनन्, खाँदैनन्। म एक्लै छैन। मलाई आमाले भन्नु भएको थियो म जहाँ-जहाँ जानेछु, नारायण पनि मेरा साथमा हुनुहुनेछ।'

सबैलाई प्रणाम गरेर, सबैसँग आशीर्वाद लिएर जो मानिस वनमा जान्छ त्यसलाई बाटामा सन्त भेटिन्छन्। घरमा जो झगड़ा गरेर जान्छ, उसलाई सन्तको दर्शन हुँदैन। झगड़ा गरेर घर छोड़ी जानेले न राम भेट्छ न माया।

बाटामा ध्रुवजी सोचिरहेका छन्—घरमा आमाले मलाई छोरो भनेर बोलाउनु हुन्थ्यो तर यहाँ वनमा मलाई छोरो भनेर कसले भन्ला ? मलाई त्यहाँ काखमा कसले बसाउला ? मलाई कसले प्यारो गर्ला ?

उनी अगाड़ि बढ़ी गइरहेका थिए। बाटामा अगाड़ि नारदजीसँग भेट भयो, ध्रुवजीले विचार गरे यिनी कोही सन्त होलान्। राम्रो संस्कारका कारणले ध्रुवले उनलाई साष्टाङ्ग प्रणाम गरे।

प्रणाम साष्टाङ्ग गर्नुपर्छ। प्रकृति अष्टधा हुन्। अष्टधा-प्रकृतिस्वरूप परमात्मामा मिसिन जाने इच्छा व्यक्त गर्नका निमित्त साष्टाङ्ग प्रणाम गर्नु हो। प्रणाम गर्नाले आत्मनिवेदन हुन्छ।

अधिकारी शिष्यलाई बाटैमा गुरुसँग भेट हुन्छ। सद्गुरु र ईश्वरत्व एउटै हो। परमात्मा र सद्गुरु दुवै व्यापक छन्। सर्वव्यापकलाई खोज्नुपर्ने होइन, चिन्नुपर्ने आवश्यकता छ।

बालकको विनम्रताले गर्दा नारदजी प्रसन्न हुनुभयो। उहाँको सन्तहृदय पग्लियो। त्यो बालकलाई उहाँले काखमा राख्नुभयो। शिरमा सुमसुम्याउनुभयो। महापुरुषको हात जब शिरमा पर्छ तब मनका सारा विकार शान्त हुन्छन्। ध्रुवलाई यस्तो भयो जो आमाको आशीर्वादले यहाँ बाटामा अर्को एउटी आमा अरू भेटिइन्।

जन्मदाता आमाले बालकलाई स्तनपान गराएर पुष्ट गर्छिन् र गुरुरूपी आमाले सदाका निमित्त स्तनपान छुटाइदिन्छिन्, अर्थात् जन्ममृत्युको चक्रबाट मुक्त गराइदिन्छिन्। मोक्ष दिलाउने र फेरि जन्म लिएर स्तनपान गर्नै नपर्ने। स्तनपान गराउने आमा श्रेष्ठ हुन् या स्तनपान छुटाउने आमा ? स्तनपान छुटाउने माता-गुरु श्रेष्ठ हुन्। गुरु भन्नुहुन्छ—बाबु ! तिमीलाई म यस्तो उपदेश दिनेछु फेरि कहिल्यै स्तनपान गर्नुपर्ने छैन।

नारदजीले सोध्नुभयो—'बाबु, तिमी कहाँ जाँदैछौ ?'

ध्रुवजी भन्छन्—'भगवान्‌को दर्शनका निमित्त म वनमा गइरहेछु। मलाई आमाले भन्नुभएको छ मेरा सच्चा पिता भगवान् नारायण हुनुहुन्छ। म उहाँकै काखमा बस्न भनी जाँदैछु।'

ध्रुवका कुरा सुनेर नारदजीले उनको परीक्षा लिनु खोज्नुभो। सद्‌गुरुले परीक्षा लिएर मात्र शिष्यलाई उपदेश दिन्छन्। नारदजीले भन्नुभयो—'बाबु तिमी अहिले ससाना बालक छौ। यो तिम्रो खेल्ने, कुद्ने वेला छ, प्रभुको जप गर्ने होइन।'

यत्प्रसादं स वै पुंसां दुराराध्यो मतो मम।

मेरा विचारमा साधारण पुरुषका निमित्त ईश्वरलाई प्रसन्न गर्न बड़ो कठिन काम छ। तिमी जसको कृपाको इच्छा गरिरहेछौ उनी दुराराध्य छन्। ठूलठूला ऋषि कैयौं जन्मसम्म ईश्वरको आराधना गर्छन् तर पनि उनले भेट्टाएका छैनन्। उनीहरू भगवान् पाउने बाटो खोज्दैछन्, तर थाहा पाउन सकेका छैनन्।

तिमीले ठूलो भएर सबै किसिमका सुखहरूको उपभोग पहिले गर र वृद्धावस्थामा निवृत्त भएर वनमा जानू। अनि शान्तिपूर्वक भजन गर्नू, रामनाम जप्नू र भगवान्‌को दर्शन गरिलिनू।

तिमी चाहन्छौ भगवान्‌ले काखमा राखून् भनेर, तर ठूलठूला ऋषि-मुनिले पनि हजारौं वर्ष तपस्या गरे तापनि उनले पाउन सकेका छैनन् भने तिमी जस्ता साना बालकलाई उहाँ कसरी भेटिनुहुनेछ ? त्यसकारण यही भलो हुन्छ तिमी आफ्नो घर फर्केर जाऊ।

ध्रुवकुमारले भने—'हजूर, नाईं, जुन घरमा मेरो अपमान हुन्छ त्यहाँ म बस्न सक्दिनँ। मैले आफ्नो पिताजीको राजसिंहासनमा नबस्ने निश्चय गरिसकेको छु। यसै जन्ममा प्रभुको दर्शन गर्ने पनि निश्चय गरिसकेको छु। गुरुजी ! तपाईंले बाटो देखाइदिनुहोस्।'

ध्रुवको अटल विश्वास देखेर नारदजी भन्नुहुन्छ—

धर्मार्थ काममोक्षाख्यं य इच्छेच्छ्रेय आत्मनः।<br>
एकमेव हरेस्तत्र कारणं पादसेवनम्॥

(भा० ४-८-४१)

जो मानिस आफ्नो कल्याण चाहन्छ र धर्म, अर्थ, काम र मोक्ष प्राप्त गर्न चाहन्छ तब उसका निमित्त एकमात्र साधन हो श्री हरिको चरणको सेवा।

तिमी मधुवनमा जाऊ।

वृन्दावनमा यो मधुवन छ जहाँ ध्रुवजीलाई नारायणको दर्शन भएको थियो।

यमुना कृपालु छिन्। यमुना महारानी कृपादेवीकी अवतार हुन्।

भागवतमा केही यस्ता स्थानहरूको उल्लेख छ, जहाँ परमात्मा अखण्डरूपले विराजमान हुनुहुन्छ। मधुवनमा, श्रीरंगम आदिमा। श्रीरंगममा 'अनन्त शयनम् पद्मनाभम्' हुनुहुन्छ। द्वारिकामा पनि भगवान् राज भएको छ। उहाँले द्वारिका त्याग्नुभएको छैन। बोडाणाको भक्ति अनन्य थियो र उनको एक स्वरूप डाकोर आएको थियो। गण्डक नदीको किनारमा पुलक ऋषिको आश्रममा पनि उनको अखण्ड वास छ। यो कुरा भागवतको पाँचौं स्कन्धमा उल्लेख भएको छ।

वृन्दावनमा भगवान्‌को अखण्ड वास छ। यमुनाजीले तिम्रो ब्रह्म सम्बन्ध सिद्ध गरिदिनेछिन्। यमुनाजीले तिम्रो सिफारिस गर्ने छिन्। अपात्र भएर पनि आमाले तिमीलाई स्वीकार गर्ने छिन्। त्यसकारण उनले कृपा गर्लिन्।

नारदजीले ध्रुवलाई आज्ञा दिनुभयो—

तत्तात त्वं गच्छ भद्रं ते यमुनायास्तटम् शुचि।
पुण्यं मधुवनं यत्र सान्निध्यं नित्यदा हरेः॥

(भा० ४-८-४२)

वत्स तिम्रो कल्याण होस्! यमुना नदीको तटमा स्थित पवित्र मधुवनमा तिमी जाऊ। त्यहाँ श्रीहरिको नित्य निवास छ।

वृन्दावन प्रेमभूमि हो। त्यहाँ बसेर भजन गर्नाले मन छिटै शुद्ध हुन्छ।

वृन्दावन दिव्य भूमि हो। त्यहाँ जीव र ईश्वरको मिलन छिटै हुन्छ। ध्रुवजीले सोधे—'वृन्दावन गएर त्यहाँ परमात्माको आराधना कुन प्रकारले गर्ने।'

नारदजीले भन्नुभयो—ध्यान गर्नुभन्दा अघि मानसी सेवा गर्नू। चतुर्भुज नारायणको मानसी सेवा गर्नू। त्यस समयमा मनको धारा कहीं नटुटोस्, यस कुराको ख्याल राख्नू। ईश्वरमा मन सतत संलग्न रहनुपर्छ। मानसी सेवा श्रेष्ठ मानिएको छ। भगवान् शङ्कराचार्य पनि कृष्णको मानसी सेवा गर्थे।

जसले आफ्ना साथमा केही राख्दैनन् त्यस्ता विरक्त संन्यासीले मानसी सेवा गरून्। त्यो उत्तम हो, तर गृहस्थले मानसी सेवा मात्र गर्नाले केही बन्न सक्दैन। गृहस्थले मानसी र प्रत्यक्ष दुवै सेवा गर्नुपर्छ।

मानसी सेवाका निमित्त उत्तम समय हो प्रातःकालको चारदेखि साढ़े पाँच बजे। कुनै पनि मानिसको मुख नहेरीकन सेवा गर्नुपर्छ। प्रातःकालमा उठेर ध्यान गर म गङ्गा किनारमा बसेको छु।

मनले मात्र गङ्गाजीमा स्नान गर। अभिषेकका निमित्त चाँदीको कलशमा गङ्गाजल ल्याऊ, भगवान् जागा भएपछि आचमन गराऊ। मङ्गलपछि नौनी र मिश्रीको आवश्यकता पर्ने छ। भोलेनाथ शङ्करलाई केही चाहिँदैन, तर कन्हैयाले सबैकुरा माग्छन्। फेरि कृष्णलाई स्नान गराऊ। शङ्कर शीतल जलले स्नान गर्छन् तर बालकृष्णलाई तातै पानीले स्नान गराऊ। फेरि कृष्णभगवान्को शृंगार गर। शृंगार नगरे पनि कृष्ण राम्रै देखिनुहुन्छ, तर शृंगार गर्नाले तिम्रो मन पनि राम्रो हुने छ। आफ्नो विकृत मनलाई सुधार्नलाई मात्र शृंगार गर्नु हो। शृंगारद्वारै समाधि जस्तो आनन्द पाइन्छ। शृंगारपछि भगवान्लाई राम्रो नैवेद्य चढ़ाएर टीका लगाऊ। आरती गर। त्यस बखत तिम्रो हृदय पग्लिएको हुनुपर्छ। पद्मपुराणमा आरतीको क्रम उल्लेख भएको छ। चरण, कम्मर, वक्षस्थल, मुख र त्यसपछि सर्वाङ्गको आरती गर्नुपर्छ। आरती गर्दाखेरि प्रभुदर्शनका निमित्त आर्त बन्नुपर्छ।

भगवान्को दर्शन गर्दै ध्यान गर्नुपर्छ। श्रीहरिको धीर मनले ध्यान गर। जप ध्यानसहित हुनुपर्छ। केही मानिसहरू यस्ता पनि हुन्छन् जो जप गर्दाखेरि पनि संसारको नै चिन्तन गरिरहन्छन्। यस्तो गर्नाले जप निष्फल मानिँदैन तर जस्तो फल पाउनु पर्ने हो त्यस्तो फल पाईंदैन।

स्नान गर्नाले शरीरको शुद्धि हुन्छ।

दान गर्नाले धनको शुद्धि हुन्छ।

ध्यान गर्नाले मनको शुद्धि हुन्छ।

जप र ध्यान एकसाथ हुनुपर्छ। जप गर्दाखेरि जुन देवताको ध्यान गरिरहेछौ, उसको मूर्ति तिम्रो मनबाट हट्नुहुन्न। जिब्रोबाट भगवान्को नाउँ लिने र मनबाट भगवान्को स्मरण हुनुपर्छ। आँखाहरूद्वारा उनको दर्शन गर्ने र कानहरूबाट उनको श्रवण गर्नुपर्छ।

म तिमीलाई एक मन्त्र पनि दिइरहेछु।

''ॐ नमो भगवते वासुदेवाय।'' यस महामन्त्रको तिमी सदा जप गर्दै रहू। भगवान् अवश्य प्रसन्न हुनुहुनेछ। मेरो आशीर्वाद छ। तिमीलाई छ महीनामा भगवान् भेटिनुहुनेछ।

सञ्चित प्रारब्ध कर्मलाई फलाउनका निमित्त तीन जन्म लिनुपर्छ।

गीतामा भगवान्ले भन्नुभएको छ—'कैयौं जन्मपछि जीवले मलाई भेट्टाउँछ'। 'बहूनां जन्मनामेन्ते।' विद्वान्हरूले यहाँ यस्तो अर्थ गरेका छन् बहूनां अर्थात् तीन जन्म। आफ्नो कर्मको क्षयका निमित्त योगीहरू र ज्ञानीहरूले तीन जन्म लिनैपर्दछ, तर भागवतमा वर्णित ध्रुव चरित्रमा भनेको छ जप गरेबाट छ महीनामा भगवान् भेटिनु हुन्छ—

मासैरहं षड्भिरमुष्य पादयोच्छायामुपेत्यापगतः .....।

ध्रुवजीले भने—भगवत चरणहरूको छाया मैले ६ महीनामै प्राप्त गरेको थिएँ। यो ठीक कुरा हो। तिमीले अनुभव गरेर हेर। जुन प्रकार ध्रुवले तपश्चर्या गरेका थिए सोही प्रकारबाट

तपश्चर्या गर। साधना गर्नाले सिद्धि प्राप्त हुन्छ। ध्रुवजीले कैयौं जन्मसम्म तपश्चर्या गरेका थिए। पूर्वजन्ममा छ महीनामा नै उनलाई परमात्माको दर्शन हुने भएको थियो। त्यो योगका निमित्त अझै छ महीना बाँकी थियो। पूर्वजन्ममा उनी ध्यान गरिनै रहेका थिए त्यहाँ राजारानी आइपुगे। ध्रुवजी विचार गर्न लागे यी राजारानीले जो सुखोपभोग गरेको छ त्यस्तो मैले तर कहिल्यै पनि गरिनँ। त्यसै कारण उनले राजाको घर जन्म पाए।

नारदजी अब उत्तानपाद राजाकहाँ गए। वियोगमा सबैलाई छोड़ेर गएका मानिसका गुणहरू संझना आउँछन्। उत्तानपाद पश्चात्ताप गर्दै बसेका छन् र ध्रुवका गुणहरूको संझना गरिरहेछन्।

नारदजीले विचार गर्नुभयो—जेसुकै भए पनि यी मेरा शिष्यका पिता हुन्। मैले यिनको पनि उद्धार गर्नै पर्छ। यी सुरुचिका अधीन भइगएका छन्। यस जिब्रोलाई वशमा गरेका खण्डमा उनको साधना सफल होला। जिब्रोलाई काबूमा गरेका खण्डमा सुरुचिको मोह कम भइजाला।

उत्तानपादलाई नारदजीले भने—तिमीले ६ महीना दूधमात्र खाएर अनुष्ठान गर्नू।

ध्रुवजी मधुवनमा आए। पहिला दिन उनले अनशन गरे र फेरि तीन दिन एक आसनमा बसेर ध्यान गरे। केवल फलाहार खाए।

अन्नाहारले रजोगुणको र फलाहारले सत्त्वगुणको बुद्धि हुन्छ।

दोस्रो महीनामा अरू संयम गरे। एक साथ छ दिनसम्म ध्यानमा बस्न थाले। तेस्रो महीनामा एक साथ नौ दिनसम्म ध्यान गर्न थाले। फलाहार छाड़िदिए। केवल वृक्षको पात मात्र खाइरहे। बिस्तार-बिस्तार संयम बढ़ाउनाले भक्ति पनि बढ्दै जान्छ। जुन विषयलाई एकपटक त्याग गरिदिएको छ त्यसमा मन-इन्द्रियहरूलाई फेरि कहिल्यै लाग्न नदेऊ।

चौथो मासमा केवल यमुनाजल पिएर बाह्र दिन एकै आसनमा बसेर जप गरे। पाँचौं महीनामा पानी पनि छोड़िदिएर हावामात्र खाएर पन्द्र दिनसम्म एकै आसनले जप गर्दै रहे।

अब छेटौं मासमा उनले निश्चय गरे जबसम्म परमात्मा भेटिनुहुन्न तबसम्म म एउटै आसनमा बसिरहन्छु अनि उनी ध्यान जपमा मग्न भए।

निश्चय अटल भएमा भगवान् अवश्य भेटिनु हुनेछ।

वृत्ति ब्रह्माकार हुन्छ तर त्यसलाई उस्तै बनाएर राख्न बड़ो कठिन काम छ।

ध्रुवजीले ६ महीनासम्म परमात्माको ध्यान गरे। आफ्नो हृदयमा भगवान् नारायणको स्वरूपको दर्शन गरे। जिब्रोद्वारा होइन मनले जप गर्न थाले।

ध्रुवजीको तपश्चर्याबाट प्रभावित भएर देवगणले नारायणसङ्ग प्रार्थना गरे तपाईंले ध्रुवकुमारलाई शीघ्र दर्शन दिनुहोस्।

तब भगवान्ले देवहरूलाई भन्नुभयो—म ध्रुवलाई दर्शन दिन होइन, उनको दर्शन गर्न गइरहेछु।

स्वयं भगवान्लाई ध्रुवको दर्शन गर्ने इच्छा भयो। लेखेको पनि छ—

मधोर्वनं भृत्यदिदृक्षया गतः।

एक पटक पंढरपुरका श्री विट्ठलनाथ र रुक्मिणीबीच एक वार्तालाप भएको थियो।

रुक्मिणी भन्दछिन्—दिन-दिनै यति सारा भक्तजन तपाईंको दर्शन गर्न आउँछन्, तैपनि तपाईं आफ्नो दृष्टि निहुराएरै राख्नुहुन्छ, कसैसङ्ग भेट्नुहुन्न। आखिर यस्तो किन?

यो सुनेर भगवान्ले आज्ञाभयो—जो केवल मसँग मात्र भेट्न आउँछन् म कृपादृष्टि दिन्छु। मानिस मन्दिरमा कुन-कुन भाव लिएर आउँछन् त्यो सबै म जान्दछु। मन्दिरमा सबैजना आफ्नो निमित्त केही न केही माग्दछन्। मसङ्ग भेट गर्न शायदै कहिले कोही आउँछ। जो मसङ्ग मात्र भेट गर्न आउँछ त्यससङ्ग म नजर मिलाउँछु।

भगवान्को दर्शनका निमित्त पुंढरपुरको मन्दिरमा बड़ो भीड़ हुन्छ। बिहान त्यहाँ पुगेका मानिसले बेलुका मात्रै दर्शन गर्न पाउँछन्।

एक पटक लक्ष्मीजीले भगवान्सँग सोध्नुभयो—यति सारा भक्त तपाईंको दर्शनार्थ जमजमाइरहेछन् र पनि तपाईं उदास जस्तो किन देखिनुहुन्छ?

भगवान्ले भन्नुभयो—'यी जो आएका छन् सबै स्वार्थी हुन् तर जसको दर्शन गर्न मलाई इच्छा छ, त्यो तुकाराम अहिलेसम्म आएकै छैन।'

अब यतातिर तुकाराम बिरामी थिए। उनी ओछ्यानमा सुत्दै सोचिरहेका थिए विट्ठलनाथजीको दर्शन गर्न जान पाउने भइनँ। किन उहाँ स्वयं मेरो घरमा दर्शन दिन नआउनु होला। प्रेम अन्योन्य र परस्परावलम्बी हुन्छ।

भगवान्ले लक्ष्मीजीलाई भन्नुभयो—'तुकाराम बिरामी भएर यस तर्फ आउन सक्दैन, त्यस कारण हिँड़, हामी आफैं उसको घर जाऔं।'

लाखौं वैष्णव पंढरपुरको मन्दिरमा विट्ठलनाथजीको दर्शन निमित्त ओइरिरहेछन्, तर विट्ठलनाथजी भने पुगेका छन् तुकारामजीको घरमा।

जस्ता प्रकारले सच्चा वैष्णव ठाकुरजीको दर्शनार्थ हतारिएका छन् सोही प्रकार सच्चा भक्तको दर्शन निमित्त भगवान् पनि हतारिनुहुन्छ।

ध्रुवजीका समक्ष भगवान् नारायण प्रकट हुनुभयो, तर ध्रुवजीले आँखा खोलेनन्। भगवान्ले विचार गर्नुभयो म यसरी कतिबेरसम्म उभिरहनु? ध्रुवजीको हृदयमा जो तेजोमय प्रकट स्वरूप थियो त्यसलाई प्रभुले अन्तर्ध्यान गराइदिनुभयो। अब ध्रुवजी व्यथित भइहाले। विचार गर्न थाले

त्यो दिव्यस्वरूप कहाँ अदृश्य भयो। ध्रुवजीले आँखा खोले तब आफ्ना सामुन्ने चतुर्भुज नारायणलाई देखे, अब ध्रुवजीले भगवान्‌को दर्शन गरिरहेका छैनन् बरु उनको रूपज्योतिलाई पिइरहेका जस्ता भए। धेरै भन्नु छ तापनि तर कसरी बोल्ने किनभने अज्ञानी ठहरिए।

आफ्नो शंखद्वारा भगवान्‌ले बालकको गाला मुसारिदिनुभयो र उनका मनमा सरस्वती जागृत गरिदिनुभयो। ध्रुवले स्तुति गरे—

योऽन्तः प्रविश्य मम वाचमिमां प्रसुप्तां,
संजीवयत्यखिलशक्तिधरः स्वधाम्ना।
अन्यांश्च हस्तचरणश्रवणत्वगादीन्,
प्राणान्नमो भगवते पुरुषाय तुभ्यम्॥

(भा० ४-९-६)

'प्रभु ! हजूर सर्वशक्तिसम्पन्न होइबक्सिन्छ। हजूरले मेरो अन्तःकरणमा प्रवेश गरेर आफ्नो तेजद्वारा मेरो सुषुप्त वाणीलाई चेतनायुक्त गरिदिबक्सिन्छ र मेरा हात, गोड़ा, कान, छाला आदि अन्य सबै इन्द्रियहरूलाई र प्राणलाई चैतन्य दिइबक्सिन्छ। यस्ता हजूर अन्तर्यामी भगवान्‌को-म वन्दना गर्छु।'

मेरो बुद्धिमा प्रविष्ट गरेर त्यसलाई सत्कर्मको प्रेरणा दिने प्रभुलाई म बारम्बार वन्दना गर्छु।

तपाईंको कृतज्ञले तपाईंलाई कसरी बिर्सन सक्छ। जसले तपाईंको स्तुति गर्दैन त्यो साँच्चै कृतघ्न हो। तपाईंले मानिसलाई जन्म-मरणको चक्रबाट मुक्त गरिदिनुहुन्छ। तपाईंलाई कामादि विषयहरूका इच्छाले भज्ने मानिस मूर्ख हो। तपाईं कल्पवृक्ष हुनुहुन्छ। तैपनि ती मूर्खहरू देहोपभोगका निमित्त यस्ता सुखहरूको इच्छा गर्छन् जुन सुखकै कारणले प्राणीलाई नरक लोकमा जानुपर्छ।

तपाईंले कृपा गर्नुभयो भने यस जीवले तपाईंलाई चिन्नसक्छ। तपाईंको कृपापात्र भएमा यस जीवले तपाईंको दर्शन गर्नसक्छ, तपाईंलाई प्राप्त गर्न सक्छ।

साधना मात्रले ईश्वरदर्शन हुँदैन। कृष्ण कृपासाध्य हुनुहुन्छ, साधना साध्य होइन। तर यसको यो अर्थ होइन तिमीले साधनै नगर। साधना अवश्य गर तर त्यस साधनाको विश्वास नगर, अभिमान नगर। साधना गर्नैपर्ने हो। साधना गर्दा-गर्दा थाकेको जीव मायालाग्दो भएर रोइदिन्छ। अनिमात्र भगवान् कृपा गर्नुहुन्छ।

उपनिषद्‌मा पनि भनेको छ—

नायमात्मा प्रवचनेन लभ्यो मेधया न बहुना श्रुतेन।
यमैवैष वृणुते तेन लभ्यस्तस्यैव आत्मा वृणुते तनू स्वाम॥

त्यो आत्मा न वेदाभ्यासले पाइन्छ, न बुद्धिचातुर्यले पाइन्छ, न कैयौं शास्त्रहरूका श्रवणले, तर जसलाई उसले वरण गर्छ उसैलाई यस आत्माको प्राप्ति हुन्छ। आत्माले उसैलाई स्वरूप दर्शन गराइदिन्छ।

साध्यलाई प्राप्त गरेपछि कति मानिस साधनको उपेक्षा गर्छन्। साधनको उपेक्षा गर्नाले फेरि माया प्रविष्ट भइहाल्छ। अद्वैत भावको सिद्धिपश्चात् पनि वैष्णव तर भगवान्‌को भक्ति गरिनै रहन्छ। ईश्वरप्राप्ति भएपछि साधनाको त्याग नगर्नु। साधनाको यस्तो बानी हुन्छ जो छुट्नै सक्तैन।

तुकारामले भनेका छन्—

आधिंकेला सत्संग तुकाझाला पांडुरंग।
त्याजे भजन राहिना मूल स्वभाव जाईना॥

सत्सङ्गले तुकाराम पाण्डुरङ्ग जस्ता भइसकेका छन्। अब उनलाई भजन गर्ने आवश्यकता छैन, तर तुकारामलाई भजन गर्ने बानी यस्तो पऱ्यो भजन छोड्दै नछोड्ने भयो।

तुकारामले प्रारम्भमा सत्सङ्ग गर्दा उनलाई जप गर्ने आज्ञा भयो। जप गर्दा भगवान्‌ले दर्शन दिएर कृपा गर्नुभयो। अब तुकाराम र पाण्डुरङ्गमा द्वैतभाव छैन। तैपनि भजन गर्न छोड्न नसक्ने भए, किनभने उनलाई बानीले अँठ्यायो। यस्तो उन्नत स्थितिमा पुगेर पनि ज्ञानी भक्त भक्तिलाई त्याग गर्दैन।

ज्ञानीभक्तका निमित्त भक्ति एउटा व्यसनजस्तो हुन्छ। भक्ति व्यसनजस्तो हुन गएका खण्डमा नाउ पार लागिहाल्छ।

प्रभो ! तपाईंको दर्शन प्राप्त गरेपछि पनि सच्चा ज्ञानी भक्तजन तपाईंको भक्ति छोड्न सक्तैनन्। तपाईंको दर्शन पाएपछि जसले तपाईंको स्मरण गर्दैन त्यो कृतघ्न हो। शुकदेवजीलाई राधाकृष्णाको ध्यान एकक्षणका निमित्त पनि छोड्न कसैले भन्यो भने उहाँले यस्तो गर्न सक्नुहुन्न। अपरोक्ष साक्षात्कार गरेपछि पनि भजन छोड्न सकिँदैन।

ध्रुवकुमारले सुन्दर स्तुति गरे—'नाथ ! जब तपाईंका प्यारा भक्तले तपाईंको दर्शन गर्दै तपाईंको कथा भन्दै गए भने त्यो सुन्ने सुयोग मलाई दिने कृपा गर्नुहोस्। त्यो आनन्द योगीहरूको ब्रह्मानन्दभन्दा पनि श्रेष्ठ हुन्छ।'

ध्रुवकुमारले विद्वान्‌हरूको कथा सुन्ने इच्छा प्रकट गरेनन्। उनको इच्छा कृष्ण प्रेमको रसमा लीन भएको हृदयबाट निस्केको कथा सुन्नलाई छ। ज्ञानीको कथा र भक्त-हृदयको कथामा अन्तर छ। तपाईंका कथाको आनन्द ब्रह्मानन्दभन्दा पनि श्रेष्ठ छ।

श्रीधरस्वामीलाई यस श्लोकको अर्थ गर्नमा केही कठिन जस्तो भएको छ। उपनिषद्को सिद्धान्तको यहाँ केही विरोधजस्तो भएको छ। उपनिषद्मा भनेको छ ब्रह्मानन्द मात्र सर्वश्रेष्ठ हो। कुनै पनि आनन्द ब्रह्मानन्दभन्दा श्रेष्ठ हुन सक्दैन। तैत्तरीय उपनिषद्मा आनन्दको वर्णन गरिएको छ। मानिसको आनन्दको अपेक्षा गन्धर्वहरूको आनन्द श्रेष्ठ हो। यसको अपेक्षा स्वर्गका देवहरूको आनन्द श्रेष्ठ हो। देवहरूको आनन्दभन्दा बढ़ी छ इन्द्रको आनन्द। इन्द्रको आनन्दको अपेक्षा वृहस्पतिको आनन्द सय गुना श्रेष्ठ छ, तर ब्रह्मानन्द सर्वश्रेष्ठ आनन्द हो।

जो निष्काम छ, निर्विकार छ र जसको मन निरोध भइसकेको छ, उसलाई जो आनन्द प्राप्त हुन्छ, यही ब्रह्मानन्द हो। यो सर्वश्रेष्ठ आनन्द हो। ब्रह्माकार वृत्तिवाला योगीहरूलाई जो ब्रह्मानन्द प्राप्त हुन्छ, त्यो श्रेष्ठ आनन्द हो। जहाँ द्वैत, प्रपञ्च, 'म' र 'तँ' को अस्तित्व छ तबसम्म श्रेष्ठ आनन्द पाइन सकिँदैन। ब्रह्मानन्दको प्राप्ति भएपछि सांसारिकताको, जगत्‌को अस्तित्व रहन पाउँदैन।

भागवतमा ध्रुवजी भन्नुहुन्छ—'भगवान्‌को कथा-श्रवणको आनन्द ब्रह्मानन्दभन्दा पनि श्रेष्ठ छ।'

यो विरोधाभास किन छ? यसमा कुनचाहिँ कुरा साँचो हो? महापुरुषहरूले आफ्ना-आफ्ना दृष्टिबाट समाधान गरेका छन् ब्रह्मानन्द सर्वश्रेष्ठ छ, तर यसमा एउटा दोष छ। यो आनन्द एकभोग्य हो, सर्वभोग्य होइन जसको वृत्ति ब्रह्माकार भएको छ, त्यसलाई मात्र त्यो आनन्द प्राप्त हुन सक्छ। त्यसकारण यो आनन्द गौण छ। कथा-कीर्तनको आनन्द अनेकभोग्य छ। भजनानन्द सर्वभोग्य हुनाको कारणले सबैलाई एकैपटक आनन्दित गर्छ। यसैकारणले कथानन्दलाई ब्रह्मानन्दको अपेक्षा श्रेष्ठ भनेको छ। त्यसो तर तात्त्विक दृष्टिबाट ब्रह्मानन्द मात्र सर्वश्रेष्ठ कहिन्छ।

ब्रह्मानन्दले एउटै मानिसलाई मात्र आनन्दित पार्न सक्छ। जो आनन्द समाधिमा लीन योगीले प्राप्त गर्न सक्तछ, त्यो आनन्द योगीको सेवकले पाउन सक्तैन। समाधिलीन योगी एक्लै संसार पार तर्दछ, जबकि सत्सङ्गी स्वयं पनि पार हुन्छ, अरूलाई पनि पारि लैजान्छ।

कथाश्रवणले एक साथ सबैलाई आनन्द दिन्छ। यो अनेकभोग्य छ। त्यसकारण कथाश्रवणको आनन्द श्रेष्ठ भनिएको छ।

केही टीकाकारले भनेका छन् ब्रह्मानन्दको अपेक्षा अन्य कुनै पनि आनन्द श्रेष्ठ छैन तर सत्सङ्गको महिमा वृद्धिगत गर्नका निमित्त यस्तो भागवतमा भनेको छ।

प्रभुले ध्रुवजीलाई भन्नुभयो—'म तिम्रो भक्तिबाट प्रसन्न छु। तिमीले मसँग जे चाहन्छौ माग्न सक्छौ।

ध्रुवजीले भने—'के मागूँ र के नमागूँ। मेरो बुद्धिले काम गरेन। तपाईंलाई जे मन पर्छ त्यही मलाई दिनुहोस्।'

भगवान् शङ्कर जब प्रसन्न हुनुभएको थियो तब उहाँले नरसिंह मेहतालाई वर माग भन्नुभएको थियो। नरसिंह मेहताले पनि ध्रुवको जस्तै उत्तर दिएका थिए। तब शिवजीले भन्नुभएको थियो मलाई रासलीला मन पर्छ, अतः म तिमीलाई उसैको दर्शन गराउनेछु र शिवजीले मेहतालाई रासलीलाको दर्शन गराइदिनुभएको थियो।

ध्रुवजीलाई भगवान्‌ले भन्नुभयो—तिमीले केही कल्पसम्म आफ्नो राज्यको शासन गर। त्यसपछि म तिमीलाई आफ्नो धाममा लैजाने छु।

ध्रुवजीले आशङ्का प्रकट गर्दै भने—'मलाई पूर्व जन्मको संझना भैरहेछ। राजा-रानीको दर्शनबाट मेरो मन विचलित भएको थियो र मलाई यो जन्म लिनुपर्‍यो। अब फेरि राजा भएँ भने फेरि रानीहरूको मायामा फँस्ने छु र असावधान हुन जानेछु। म राजा हुन चाहन्नँ।'

प्रभुले भन्नुभयो—तिमी चिन्ता नगर। यस्तो कहिल्यै हुने छैन। तिम्रो राजा हुने इच्छा नभए पनि म तिमीलाई राजा भएको हेर्न चाहन्छु। यो मायाले तिमीलाई प्रभावित गर्न सक्ने छैन। मेरो नियममा यो छ जो मेरो पछि लाग्छ म पनि त्यसको पछि लाग्छु। म तिम्रो रक्षा गर्नेछु।

साना बालकहरूलाई आनन्द नलागे पनि आमालाई तर उसको शृङ्गार गर्नमा आनन्द लाग्छ। म जगत्‌लाई यो देखाउन चाहन्छु जो मानिस मेरो भइहाल्छ त्यसलाई लौकिक र अलौकिक दुवै किसिमको आनन्द म दिन्छु। म आफ्नो भक्तलाई उसको अलौकिक सुखका साथसाथै लौकिक सुखद्वारा पनि लाभान्वित गराउँदछु।

शबरी र मीराजस्तो अटल भक्तिभाव भएपछि म रक्षा गरिनै रहने छु भगवान् भन्नुहुन्छ।

जीवको रक्षा जबसम्म भगवान्‌ले स्वयं गर्नुहुन्न तबसम्म उसले कामको नाश गर्न पाउँदैन।

**जे राखे रघुबीर, ते उबरे तिहिं काल महुँ।**

श्रीरामले जसको रक्षा गर्नुभएको छ ती कहिले पनि कामान्ध भएका छैनन्।

फूल टिप्न भनी आएको एउटा राजाको मानिसले ध्रुवलाई देख्यो तब उसले राजालाई ध्रुवको आगमनको समाचार दियो। अनुष्ठानमा बसेका उत्तानपाद राजा ध्रुवलाई भेट्न भनी दौड़िहाले।

अब हेर्नुहोस्। ६ महिनाअघि जुन उत्तानपाद राजाले ध्रुवलाई आफ्नो काखमा एक क्षणमात्र पनि बस्न दिएका थिएनन्, उही राजा अब भगवान्‌को दर्शन गरी आएका ध्रुवलाई स्वागत गर्न दगुर्दै गइरहेछन्।

जसले ईश्वरसँग सम्बन्ध जोर्छ, जगत् त्यसैका पछि दगुर्न थाल्दछ। परमात्माले जसलाई आफ्नो बनाउनुहुन्छ, त्यसलाई शत्रु पनि वन्दना गर्छन्। तिमी भगवान्‌को पछि लाग्यौ भने जगत् पनि तिम्रो पछि लाग्नेछ।

ती उत्तानपादले जसले कुनै बखत ध्रुवको अपमान गरेका थिए, आज उनको स्वागतका निमित्त दुगुरेका छन्। उनी सोच्दछन् 'मेरो पाँच वर्षको बालकले भगवान्‌को दर्शन पाइसक्यो, म आधा उमेर बिताइसकेको छु र पनि सुरुचिको मायामा फँसेको छु। धिक्कार छ मलाई।' राजाका

आँखाबाट आनन्दाश्रू बगिरहेछन्। 'कहाँ छ मेरो ध्रुव? कहाँ छ मेरो छोरा?' सेवकले भन्छ—'हेर्नुहोस् महाराज, राजकुमार तपाईंको वन्दना गरिरहेका छन् तब राजाले बालकलाई अङ्कमाल गरेर—म वन्दनाका निमित्त अपात्र छु।' शुकदेवजी वर्णन गर्नुहुन्छ त्यस समयमा परमानन्दको वर्षा भइरहेछ।

अब ध्रुव आमाहरूको दर्शन गर्न भनी गइरहेछन्। उनी सोच्छन् 'मेरी आमाले भन्नुभएको थियो मैले उहाँलाई वन्दना नगरे पनि कुनै त्यस्तो ठूलो कुरा होइन तर विमाता सुरुचिलाई मैले वन्दना गर्नै पर्छ। त्यसकारण जब ध्रुवजीले सुरुचिलाई प्रणाम गरे तब उनको हृदय पग्लियो र भनिन् यो कति लायक रहेछ।'

उता सुनीतिको हृदय हर्षले गर्दा यति भरियो केही बोल्न पनि सकिनन्। उनलाई यस्तो लाग्यो आज मात्र पुत्र भयो, किनभने उनको पुत्रले आज भगवान्लाई प्राप्त गरेर आएको छन।

रामचरितमानसमा पनि भनेको छ—

पुत्रवती जुबती जग सोई।
रघुवर भगत जासु सुत होइ॥

जसैले सबैको आशीर्वाद लिन सकेको छ त्यो नै सर्वेश्वरको प्यारो हुन्छ।

मानिसहरूले भने, 'ध्रुवजीले नारायणको दर्शन गर्नु भएको छ, त्यसकारण हामी उहाँको दर्शन गरेर कृतार्थ हुने थियौं।' तब ध्रुवजीको नगरपरिक्रमाको बन्दोबस्त मिलाइयो।

ध्रुवजीलाई हात्तीमा चढ्न भनी आग्रह गरे तर उनले भने 'म एक्लै चढ्न सक्तिनँ, मेरा भाइ उत्तमलाई पनि नजिकै बसाऊ। उत्तमलाई पहिले हात्तीमा चढ़ाएर ध्रुव पनि चढ्नुभयो।'

जसले आफ्ना भाइबैनीहरूमा, नातागोतामा परमात्माको दर्शन गर्न सक्तैन त्यसलाई मूर्ति आदिमा पनि भगवान्को दर्शन हुन सक्तैन।

शब्दात्मक उपदेशको प्रभाव छिटो पर्दैन।

क्रियात्मक उपदेशको प्रभाव छिटो पर्छ।

सुरुचि अब पश्चात्ताप गर्न थालेकी छन्। सुनीतिको चरणमा शिर निहुराएर रोइरहिछन्। उनको आँसुका साथ-साथ मनको मैलो पनि धोइयो।

ध्रुवकुमारको राज्याभिषेक गरियो र भ्रमीका साथ विवाह पनि भयो।

एक पटक उत्तम शिकार खेल्न भनी वनमा गए। त्यहाँ यक्षका साथ युद्ध भएपछि उनको मृत्यु भयो। यस्तो दुःखद समाचार सुनेर ध्रुव वहाँ गए र भीषण युद्ध गरी यक्षहरूको संहार गर्न थाले।

त्यस समय ध्रुवका पितामह महाराज मनु त्यहाँ आउनुभयो। उहाँले ध्रुवलाइ भन्नुभयो—'बाबु, वैष्णवले वैर गर्नु हुन्न। विष्णु भगवान् प्रेमको स्वरूप हुनुहुन्छ। आफ्ना छातीमा लात्तीले हान्ने भृगुऋषिलाई पनि विष्णुभगवान्ले प्रेम गर्नुभो।'

शिवजी वैराग्यको स्वरूप हुनुहुन्छ।

अति प्रेम र अति वैराग्य दुवैको निर्वाह कठिन छ। ज्ञानीलाई चाहिन्छ उसले अतिशय वैराग्यसँग बसोस् र वैष्णवलाई चाहिन्छ उसले अतिशय प्रेम गरोस्।

महाराज मनु भन्नुहुन्छ—

> तितीक्षया करुणया मैत्र्या चाखिलजन्तुषु।
> समत्वेन सर्वात्मा भगवान् संप्रसीदति॥
> सम्प्रसन्ने भगवति पुरुषः प्राकृतैर्गुणैः।
> विमुक्तो जीवनिर्मुक्तो ब्रह्म निर्वाणमृच्छति॥

आफूभन्दा बड़ाका प्रति सहनशीलता, सानाका प्रति दया, दौंतरीप्रति मित्रता र समस्त जीवहरूका साथ समान बर्ताव गर्नाले श्रीहरि प्रसन्न हुनुहुन्छ।

तितीक्षा-सहनशीलता, सबै जनाका प्रति करुणा र जगत्का प्रत्येक जीवसँग मैत्री—यी तीन गुणहरूद्वारा सम्पन्न व्यक्ति सुखी हुन्छ र उसमाथि भगवान् पनि प्रसन्न हुनुहुन्छ। प्रत्येक प्राणीका प्रति सुभाव राख्नाले प्रभु प्रसन्न हुनुहुन्छ र भगवान् प्रसन्न हुनुभएपछि, प्राकृतिक गुणहरू तथा लिङ्ग-शरीरबाट मुक्त भएर पुरुष सुखस्वरूप ब्रह्मलाई प्राप्त गर्छ।

मनु महाराजको उपदेश सुनेर ध्रुवले युद्ध गर्न रोके।

ध्रुवजी विशाल क्षेत्रमा आए। यिनी जब बालक थिए उस बखत यमुनाजीको किनारमा गएका थिए। अब वृद्धावस्थामा गङ्गाजीका तटमा आए। गङ्गाजीले मृत्यु सुधारिदिन्छिन्। भागवत्को कथा प्रेमपूर्वक सुन्नाले सबै यात्राको फल पाइन्छ।

गङ्गाका किनारामा बसेर ध्रुवजी भजन-कीर्तन गर्न थाले। गङ्गाजीका प्रवाहको स्वरले ध्रुवजीको ध्यानमा बाधा पर्न थाल्यो। उनले गङ्गाजीको किनार छोड़िदिन तयार भए। तब त्यहाँ गङ्गाजी प्रकट भइन्। ध्रुवले भने—'आमा, तपाईंको यो कलकल स्वरले मेरो भजन-ध्यानमा विक्षेप गर्दछ।'

तब गङ्गाजीले ध्रुवलाई भन्नुभयो—'तिमी शान्तसाथ ध्यान गर्छौ भने म पनि शान्तिसाथ ध्यान गर्छु। अब कहिले पनि सशब्द बग्ने छैन। तिमी यहाँबाट नजाऊ।'

गङ्गाजी शान्त हुनुभयो। ऋषिकेशका नजिक ध्रुवाश्रमका पास गङ्गाजी आजसम्म शान्त हुनुहुन्छ। ध्रुवाश्रमका नजिकमा मात्र गङ्गाजी शान्त हुनुहुन्छ अरू ठाउँमा होइन।

एक पटक भगवान्‌को आज्ञा पाएर ध्रुवकुमारलाई आफ्ना साथ लैजान भनी विमान लिएर पार्षद आए। गङ्गातटलाई छोड़ेर बैकुण्ठ जान ध्रुवको इच्छा भइरहेको छैन। उनी विचार गर्न थाले गङ्गातटमा बसेर सत्सङ्ग, भजन, ध्यान आदिमा जो आनन्द मलाई भइरहेछ त्यो बैकुण्ठमा कसरी प्राप्त होला? गङ्गाजीलाई साष्टाङ्ग प्रणाम गरेर अन्तिम स्नान गर्न थाले। गंगाजीलाई छोड्नुपर्दा उनलाई वेदना भइरहेछ। उनी मनभरी भइरहेछन्।

त्यस बखत गङ्गाजी प्रकट हुनुभयो। ध्रुवले भने—'भगवान्‌को आज्ञाको कारणले म तपाईंलाई छोड़ेर बैकुण्ठ गइरहेछु। तपाईंको तटमा जस्तो आनन्द पाइएको छ त्यस्तो उहाँ कसरी पाइएला?' यो सुनेर गङ्गाजीले प्रेमपूर्वक भन्नुभयो—'यो मेरो भौतिक स्वरूप हो। बैकुण्ठमा म आधिभौतिक स्वरूपबाट बग्दछु।' ध्रुवजीले गङ्गाजीलाई प्रणाम गरे।

सबैलाई वन्दना गरेर ध्रुवजी बैकुण्ठ गए। ध्रुव विनयका मूर्ति हुन्।

ध्रुवका नजीक आएर मृत्युदेवले शिर निहुराए, तब ध्रुवले उनको टाउकामा एउटा गोड़ा राखेर दोस्रो गोड़ा विमानमा राखे। विमानमा बसेर भगवान्‌को धाम गए। ध्रुवको बैकुण्ठ गमनले गर्दा सबैलाई आनन्द भयो।

नारदजी केही अप्रसन्न जस्तो हुनुहुन्छ। उहाँ विचार गर्नुहुन्छ 'मृत्युदेवको शिरमा गोड़ा राखेर मेरा शिष्य बैकुण्ठ पुगे। मेरा शिष्य मभन्दा अगि गए। उनलाई लिन बैकुण्ठबाट विमान आयो र मलाई अझ पनि संसारमा रुमल्लिइरहनु परिरहेछ।'

यो कुरा सिद्ध हुन्छ धेरै कथा गर्नाले पनि परमात्माको प्राप्ति हुँदैन। ध्यानका विना, प्रभुदर्शनका विना शान्ति पाईंदैन। एकान्तमा बसेर ध्यान गर्नुपर्ने जरूरी छ।

प्रभुका मन परेका भक्त मृत्यु अथवा कालको शिरमा गोड़ा राखेर बैकुण्ठमा जान्छन्। भागवतको चौथो स्कन्ध बाह्रौं अध्यायको तीसौं श्लोकमा स्पष्ट भनेको छ मृत्युको शिरमा पाउ राखेर ध्रुवजी विमानमा बसेथे।

**मृत्योर्मूर्ध्नि पदं दत्त्वा आरुरोहाद्‌भुतं गृहम्।**

भगवान्‌का भक्त मृत्युदेखि डराउँदैनन्। मानिस निर्भय हुन पाउँदैन किनभने ऊ ईश्वरको हुँदैन। जो ईश्वरको शरणमा गएको छ त्यो निश्चिन्त हुन्छ, निर्भय बन्दछ।

सुतीक्ष्ण ऋषि मानसमा भन्नुहुन्छ—मेरो अभिमान प्रतिदिन वृद्धि हुँदै जाओस्। कुनचाहिँ अभिमान? म भगवान्‌को हुँ र मेरा भगवान् हुन् भन्ने अभिमान।

**अस अभिमान जाइ जनि मोरे।**
**मैं सेवक रघुपति पति मोरे॥**

जो भगवान्‌को आश्रय ग्रहण गर्दछ, त्यो निर्भय हुन्छ। उसलाई कालको भयले सताउन सक्दैन। काल त परमात्माको दूत हो। कालका काल परमात्माको शरणमा गएपछि कालले पनि के बिगार्न सक्दछ?

ध्रुवजी अर्थार्थी भक्त हुन्। ध्रुवले भगवान्‌को शरणागति स्वीकार गरेका हुनाले भगवान्‌ले उनलाई दर्शन दिए, राज्य दिए र अन्त्यमा बैकुण्ठवास पनि दिए। यो हो भगवान्‌को अनन्य शरणागतिको फल।

ध्रुवको दृष्टान्तले यो भन्न खोजेको छ अटल निश्चयबाट कठिनतम् कार्य पनि सिद्ध हुन्छ। तर यो निश्चय कस्तो हुनुपर्छ? 'देहं वा पातयामि कार्यं वा साधयामि।' कार्यसिद्ध गर्ने छु होइन भने देह त्याग गर्नेछु।

यसले यो पनि भन्न खोजेको छ बाल्यावस्थादेखि जसले भगवान्‌को भक्ति गर्छ उसैलाई उहाँ भेटिनु हुन्छ। वृद्धावस्थामा भजन-ध्यान गर्नेको आगामी जन्म सुध्रिन्छ तर यसै जन्ममा भगवान्‌लाई प्राप्त गर्नु छ भने बाल्यावस्थादेखि भक्ति गर्नुपर्छ। बाल्यावस्थाको राम्रो संस्कार नष्ट हुँदैन। सुनीतिको जस्तै तिमीले पनि आफ्ना बालकहरूमा सानैदेखि धार्मिक संस्कारको सेचन गर।

ध्रुव चरित्रको समाप्ति गर्दै मैत्रेयजीले भन्नुभो 'नारायण सरोवरको किनारमा नारदजी तप गरिरहनु भएको छ। त्यहाँ प्रचेताहरूको मिलन भयो।'

विदुरजीले सोधे—'यी प्रचेता को थिए? कसका पुत्र भए? विस्तारपूर्वक सबै कुरा भन्नुहोस्।'

मैत्रेयजी विदुरजीलाई र शुकदेवजी परीक्षित राजालाई कथा सुनाइरहनुभएको छ। ध्रुवजीका वंश थिए प्रचेता।

ध्रवजीको वंशमा अङ्ग राजा भएका थिए। अङ्गकहाँ बेन भन्ने भए। अङ्ग सदाचारी थिए, बेन दुराचारी। बेनको शासनकालमा प्रजा बहुतै दुःखी भए।

बेन राजाको शासनकालमा अधर्म बढ़ेर गएकाले ब्राह्मणहरूले श्राप दिएर त्यसको नाश गरिदिए। राजाविना प्रजा दुःखी हुन थाले। बेन राजाको शरीरको मन्थन गरियो। पहिले एउटा कालो पुरुष प्रकट भयो। तल्लो भागमा पाप हुनाको कारण त्यसलाई मन्थन गरेर पहिले पापलाई निकालियो। नाभिभन्दा तल्लो भाग उत्तम भएन। त्यसको माास्तिरको भाग उत्तम ठहरियो।

नाभिभन्दा तल्लो भागबाट सुख होला जस्तो भएन। मानिसको ऊपरिभाग पवित्र हुन्छ।

फेरि माथिको पवित्र भागको पाखुराहरूको मन्थन वेदमन्त्रहरूद्वारा गरियो र त्यसबाट पृथु महाराजको प्राकट्य भयो।

श्रीधर स्वामीले भन्नुभएको छ 'यिनीहरूले बाहुहरूको मन्थन गरे। त्यसै कारण अर्चन-भक्तिरूप पृथु महाराज प्रकट भए। बरु हृदयको मन्थन गरेको भए साक्षात् नारायण प्रकट हुनुहुन्थ्यो होला।'

पृथु महाराज अर्चन भक्तिको स्वरूप हुन्। त्यसकारण उनकी रानीको नाउँ अर्चि थियो। अर्चन भक्तिमा पृथु श्रेष्ठ हुन्। उनी नित्य महा-अभिषेक गर्थे। उनका शासनकालमा प्रजा सुखी भए। उनले अश्वमेध यज्ञ पनि गरे। यस यज्ञमा घोड़ालाई बन्धनरहित गरेर उसको इच्छानुसार घुमाइन्छ। यदि अश्व कहीं बाँधिएन भने यज्ञमा उसको बलि चढ़ाइन्छ।

अश्व वासनाको स्वरूप हो। यदि त्यो कुनै विषयको बन्धनमा फँस्यो भने विवेकसँग युद्ध गरेर शुद्ध गर्नुपर्छ।

पृथुको यस अश्वमेध यज्ञमा इन्द्रले बाधा खड़ा गरे। उनले त्यस घोड़ालाई लिएर गए। त्यस यज्ञमा अत्रि महाराज बस्नुभएका थिए। पृथुका छोराले घोड़ा फर्काएर ल्याए। त्यस समयमा भगवान् प्रकट हुनुभयो।

पृथुले भगवानसँग प्रार्थना गरे—'म मोक्षको इच्छा राख्दिनँ किनभने वहाँ तपाईंको कीर्तिको कथा सुन्ने सुख पाईंदैन। मेरो एउटै प्रार्थना छ तपाईंको कथा सुन्नका निमित्त दशहजार कान पाऊँ जसबाट म यहाँको लीलाकथा सुनिरहन सकूँ। तपाईंको एउटा पाउको सेवा चाहे लक्ष्मीजीले गर्नुहोस् तर दोस्रो चरणको सेवा म गर्न चाहन्छु।'

पृथु राजाले धर्मानुसार प्रजाको पालन गरे र पृथ्वीमा समाहित कैयौं प्रकारका रसहरूको युक्तिपूर्वक दोहन गरे। उनी आफ्ना प्रजाहरूलाई बराबर धार्मिक शिक्षा दिन्थे। मेरा प्रजाले धर्मका मर्यादाहरूको पालन गरून् भन्ने उनको इच्छा थियो।

पृथु महाराज गाई तथा ब्राह्मणहरूको पालन गर्थे।

गाईले घाँस खाएर दूध दिन्छिन्। ब्राह्मणले साधारण भिक्षाबाट जीवन-निर्वाह गरेर सबैलाई ज्ञानदान गर्दछन्। गाई र ब्राह्मण सन्तुष्ट भएपछि प्रजामा शक्ति र ज्ञान बढ्दछ र प्रजा सुखी हुन सक्छन्।

जब सम्पत्तिको अपेक्षा राम्रो संस्कार र धर्मको आवश्यकता ज्यादा होस् भन्ने हुन्छ र बढ्दै पनि जान्छ तब देश सुखी हुन्छ।

पृथु महाराज एक पटक रानी आर्चीका साथ बसिरहेका थिए। त्यसै बखत सनत्कुमार पनि आइपुगे। उनको सत्सङ्गले गर्दा राजालाई वैराग्य उत्पन्न भयो। उनी आर्चीका साथ वनमा गए। पृथु महाराज स्वर्गमा गए।

सनत्कुमारहरूका उपदेशबाट उनी वनवास गए।

प्राचीनकालमा राजा पनि राजत्याग गरेर वनमा बसेर प्रभुभजन गर्थे, तर यस अर्थ र भोग प्रधानकालमा वनवास गर्ने इच्छा कसैलाई पनि हुँदैन। त्यसकारण सुखशान्ति मिलोस् तब कसरी मिल्ने ?

पृथुपछि उनका पुत्र विजिताश्व राजा भए। तिनीहरू तीन भाइ थिए—हर्यक्ष, धूमकेश र वृक। यसपछि अन्तर्धान कहाँ हविर्धानि, हविर्धानिकहाँ प्राचीनबर्हि राजा भए। प्राचीनबर्हि राजा-कहाँ प्रचेता भए।

प्रचेता नारायणसरोवर किनारमा आए। नारदजीले उनलाई रुद्रगीताको उपदेश दिए। त्यसबाट भगवान शङ्कर प्रसन्न हुनुभयो र उहाँले राजाहरूलाई भन्नुभयो—'तिपी तप गर। तप नगरिकन सिद्धि पाइँदैन। तप गर्ने मानिसको पतन हुन्छ।' शङ्करभगवान्ले यस्तो भनेर अदृश्य हुनुभयो। शङ्करले भने अनुसारको स्तोत्रहरूको जप गर्दै प्रचेता तपश्चर्या गर्नथाले।

नारदजीलाई यो समयमा बर्हिराजसँग प्रश्न गर्नुभयो—'तिमीले यज्ञ अनेक गरेका छौ। के तिमीले शान्ति पायौ ?'

राजाले जवाफ दिए—'अहँ।'

नारदजी—'तब तिमी यो यज्ञ किन गरिरहेछौ ?'

मलाई प्रभुले धेरै थोक दिनुभएको छ र म यज्ञ गरिरहेछु। यज्ञहरूद्वारा म ब्राह्मणहरूको सेवा गरिरहेछु। यज्ञद्वारा म सम्पत्तिको समाजसेवामा सदुपयोग गरिरहेछु। यज्ञबाट पनि त्यस्तो शान्ति भने पाइँदैन।

नारदजी प्राचीन बर्हिराजालाई संझाइरहनुभएको छ—'जन्म मृत्युको चक्करबाट जीव मुक्त हुन पायो भने मात्र पूर्ण शान्ति प्राप्त गर्न सकिन्छ। यज्ञबाट तिम्रो कल्याण हुँदैन। कल्याणलाई चित्तशुद्धि आवश्यक छ। चित्तशुद्धि भएपछि एकान्तमा बसेर ध्यान गर्नुपर्ने आवश्यकता छ। केवल यज्ञ गरेर मात्र ईश्वरको साक्षात्कार हुन सक्तैन। तिमी स्वर्गमा जानेछौ तर पुण्यको क्षय हुनेछ। तिमीलाई स्वर्गबाट निकालिदेलान्। त्यसकारण शान्तिसँग बसेर तिमी आत्मस्वरूपको चिन्तन गर। तिमीलाई आफ्नै आत्मस्वरूपको ज्ञान छैन। अब यज्ञ गर्ने आवश्यकता छैन। शान्तिपूर्वक ईश्वरको तिमी आराधना गर।'

राजाले भने—'तपाईंले बड़ो राम्रो उपदेश दिइरहनुभएको छ।'

नारदजी भन्नुहुन्छ—'तिमीलाई आफ्नै स्वरूपको ज्ञान छैन। जसले आफ्नै स्वरूपलाई चिन्न सक्दैन, त्यसले ईश्वरलाई कसरी चिन्न सक्ला ? म एउटा कथा सुनाउँछु ध्यान दिएर सुन।'

प्राचीनकालमा एउटा पुरञ्जन नाउँ गरेको राजा थियो। उसको अविज्ञात नाउँ गरेको एउटा मित्र थियो। पुरञ्जनलाई सुखी गराउनका निमित्त अविज्ञात सदा प्रयत्नशील रहन्थ्यो, तर आफ्नो प्रयत्नको भनक उसको कानमा नपुगोस् भन्ने ज्ञान पनि अविज्ञातलाई थियो।

ईश्वर अविज्ञात हुनुहुन्छ। ईश्वरले अज्ञात रूपबाट जीवको सहायता गर्छन्। जीवात्मा पुरञ्जनलाई सुखी गराउनका निमित्त ईश्वर-अविज्ञात दृष्टि राख्दछन्, अन्न उत्पन्न गरिदिन्छन्। तैपनि ऊ पुरञ्जनलाई खबरसम्म पुग्न दिँदैन। पुरञ्जन पनि यो सोच्दैन ऊ कसैको कारणले सुखी छ।

परमात्माको लीला अविज्ञात छ। त्यहाँ बुद्धिले केही काम दिन सक्तैन। भगवान् भन्नुहुन्छ—अनशन गर्ने काम तिम्रो हो र पाचन गराउने काम मेरो हो। ''पचाम्यन्नम् चतुर्विधम्''। जीव भोजन गर्दछ परमात्मा पाचन गर्नुहुन्छ। पेटमा ठाकुरजी अग्निका रूपमा बस्नुभएको छ। भोजन गरिसकेपछि भगवान् भन्नुहुन्छ—'अब तेरो काम हो सुत्ने र मेरो काम हो जाग्ने।'

मानिलेऊ हामी गाड़ी हौं। जीवात्मा यात्री र परमात्मा चालक। भगवान् सुतिदिनुभयो भने ''अच्युतं केशवम्'' भइहाल्छ। रेल्वेको इञ्जनचालक सुत्यो भने गाड़ी रोकिन्छ। यात्री सुत्न सक्छ, चालक-सूत्रधार-ईश्वर भने सक्तैनन्। तै पनि जीव कहिले सोच्ता पनि सोच्दैन उसलाई सुख-सुविधा दिने को हो ?

सत्कर्मको सङ्कल्प गर्नेलाई भगवान् पनि बल लगाइदिनुहुन्छ। प्रभुको भजन प्रातःकालमा गरिन्छ। सूर्योदयपछि अरूहरूको रजोगुण, तमोगुणको रजकणले तिमीलाई प्रभावित गर्ने छ। त्यसै कारणले तिमी राम्ररी भजन गर्न पाउने छैनौ।

जीव चाहे सुतोस् तर भगवान् कहिल्यै पनि सुत्नुहुन्न।

पुरञ्जन जीवात्मा हो। त्यो सोच्दछ म कसको कारणले सुखी छु। सदासर्वदा उपकार गर्ने ईश्वरलाई बिर्सिएर घुम्दै-फिर्दै त्यो नौ ढोका भएको एउटा नगरीमा प्रविष्ट भयो। यो नगरी हो मानव-शरीर।

त्यहाँ पुगेपछि एउटी सुन्दरीसँग मिलन भयो। पुरञ्जनले उनको परिचय सोध्यो। स्त्रीले भनिन्— 'म जान्दिनँ म को हुँ, तर म तिमीलाई सुखी अवश्य पार्नेछु।'

पशु जाति भेद मान्दछ। भैंसीलाई देखेर साँढ़े विकारी हुँदैन।

माानिस गीता पढ्छन् तर त्यसलाई व्यावहारिक रूप दिँदैनन्। भगवान् भन्नुहुन्छ 'यी जातिहरू, वर्णाश्रम मैले बनाएको हुँ।' तर आजकालका सुध्रिएका मानिस भन्छन् हामी वर्णाश्रमको व्यवस्थालाई मान्दैनौं। जसको जीवनमा संयम छैन, धर्म निष्ठा छैन, प्रभु प्रेम छैन त्यस्तालाई सुध्रिएको मान्ने हो वा बिग्रेको। उनको जीवन सुध्रिएको छैन, बिग्रिएकै छ। सुध्रिएका मानिस भन्छन् 'यी स्त्री ज्यादै राम्री छन्। राम्री हुनुपर्छ, जाति चाहिँ जेसुकै भए पनि हुने।'

कुलगोत्रको विचार नगरीकन पुरञ्जनले ती स्त्रीसँग बिहा गऱ्यो। ती सुन्दरीमा ऊ यति आसक्त भयो उसका घरमा एघार पुत्रहरूको जन्म भयो। ती स्त्रीको नाउँ थियो पुरञ्जनी। ती पुत्रहरू आपस्तमा झगड़ा गर्थे।

बुद्धि भनेकै पुरञ्जनी हो। एघार इन्द्रियहरूका सुखोपभोगको इच्छाले एघार सौ सन्तानहरू भए। एक-एकका सौ-सौ पुत्र। यी पुत्रहरूका पारस्परिक युद्धको अर्थ हो सङ्कल्प-विकल्पहरूको सङ्घर्ष, एउटा विचार उत्पन्न भयो भने दोस्रो त्यसलाई दबाउन आउँछ। एघार इन्द्रियहरूमा यो जीव फँसेको छ। पञ्च प्राण शरीरको रक्षा गर्छन्। इन्द्रिय सुखोपभोगको सङ्कल्प-विकल्प भनेको एघार सौ सन्तान हुन्। सङ्कल्प-विकल्पले जीव बन्धनमा पर्छ। बुद्धिगत सङ्कल्प-विकल्पले जीवात्मालाई रुवाउँछ।

कैयन् वर्षसम्म पुरञ्जनले यस प्रकार सुखोपभोग गऱ्यो।

कालदेव मृत्युकी छोरी जराका साथ बिहा गर्ने इच्छा कसैले गर्दैन। पुरञ्जनको इच्छा नहुँदा-नहुँदै पनि जराले ऊसँग बिहा गरिहाली।

जसले भोगोपभोगको सुख लुट्छ, त्यसलाई जरासँग अर्थात् वृद्धावस्थासँग विहा गर्नैपर्छ। सधैं सम्झना राख कहिले न कहिले वृद्धावस्था आउने हो? ''जवानी तो जवानी''। अर्थात् यौवन जाने हो। योगीले कहिल्यै वृद्धावस्था भेट्टाउँदैन।

फेरि एक दिन मृत्युको सेवक प्रज्वर आयो। प्रज्वर हो अन्तकालको ज्वरो। स्त्रीमा अतिशय आसक्त रहने पुरञ्जनले अन्तःकालमा पनि स्त्रीलाई चिन्तन गर्दै देहत्याग गऱ्यो, परिणामतः विदर्भनगरीमा उसलाई कन्यारूपमा जन्म लिनुपऱ्यो।

स्त्रीको चिन्तन गर्नाले पुरञ्जनलाई स्त्री बन्नुपऱ्यो। यस कुराले पुरुषहरूलाई चेतावनी दिन्छ उसले कुनै स्त्रीको ज्यादा चिन्तन गर्नु हुँदैन। अन्यथा आगामी जन्ममा फरिया लाउनुपर्नेछ, कसैकी दुलही बन्नुपर्नेछ, सन्तान हुने छन्। कष्ट भोग्नु पर्ने छ, जुन विचार मात्र गर्नाले कम्प गराउने हुन्छ।

पुरञ्जन पुरुष थियो तर बारम्बार स्त्रीहरूको चिन्तन गर्नाले उसलाई आगामी जन्ममा स्त्री बन्नुपऱ्यो। कोही पनि सदाका निमित्त पुरुष या स्त्री हुनै सक्तैन। वासनाका अनुसार शरीर बद्लिरहन्छ।

पुरञ्जनले तरुणावस्थामै पाप गरेको थियो। बाल्यावस्था र वृद्धावस्थामा उसले सत्कर्म गरेको थियो। यिनै पुण्यको कारणले उनको जन्म एक ब्राह्मणको घरमा कन्यारूपमा भयो। विदर्भ देशवासी त्यस कर्मकाण्डी ब्राह्मणका घरमा दर्भको विशेष उपयोग हुन्थ्यो। मर्यादा धर्मको पालन गर्नाले उनको विवाह द्रविड़ देशको पाण्ड्यराजाका साथ भयो। कर्म गर्नाले चित्त शुद्धि भएपछि विवाह भयो। द्रविड़ देश हो महारानी भक्तिको माइतीघर। पाण्ड्यराजा अर्थात् भक्ति-पत्निका साथ विवाह भयो।

कर्म गर्नाले चित्त शुद्ध भएमा भक्ति गर्न सकिन्छ। मानिस भन्ठान्छन् भक्तिमार्ग सजिलो छ, तर यो अतिशय कठिन मार्ग छ। मर्यादा धर्मको पालन नगरिकन भक्तिको उदय हुँदैन। चित्तको शुद्धिविना भक्तिको उदय हुँदैन। अन्तमा परमात्माको अनुभव गर्नका निम्ति ज्ञान आवश्यक छ। भक्तपतिका साथ विवाह भएपछि कन्या र सात पुत्रहरूको जन्म भयो। कन्या भइन् कथा श्रवणमा सत्सङ्गमा रुचि। यसप्रकार भक्तिको जन्म भयो। भक्तिका पुत्र सात प्रकारका छन्—श्रवण, कीर्तन, स्मरण, पादसेवन, अर्चन, वन्दन, दास्य अर्थात् सात प्रकारको भक्ति सिद्ध भयो।

भगवान्को नाम, रूप, गुण, प्रभाव, लीलाहरूको कानले श्रवण, मुखले कीर्तन र मनले स्मरण गरेपछि क्रमशः श्रवण, कीर्तन, स्मरण भक्ति सिद्ध हुन्छ। प्रभुको सेवन गर्नाले पादसेवन भक्ति र पूजा गर्नाले अर्चन भक्ति सिद्ध हुन्छ। प्रभुको मूर्तिको बन्दन गर्नाले बन्दन भक्ति सिद्ध हुन्छ र प्रभुको शरण पर्नाले दास्य भक्ति हुन्छ। यी सातप्रकारका भक्तिलाई मानिसले आफ्नो प्रयत्नबाट प्राप्त र सिद्ध गर्न सक्छ तर आठौं सख्यभक्ति र नवौं आत्मनिवेदन भक्ति प्रभु कृपाबाट मात्र प्राप्त र सिद्ध हुन सक्छ।

श्रवणादि सात प्रकारको भक्ति सिद्ध गरेपछि, एकपटक पतिको मृत्यको समाचारले दुःखी भएकी ती कन्यालाई परमात्माले सद्गुरुको रूपमा आएर ज्ञान दिनुभयो। भक्तिको सात प्रकार सिद्ध भएपछि परमात्मा सख्यको दान गर्नु हुन्छ, आत्मनिवेदनको दान गर्नुहुन्छ।

अर्थात् जुन मित्रलाई, जुन अविज्ञतलाई यस जीवले मायाका कारणले बिर्सिएको थियो, तिनै सद्गुरुका रूपमा आए। यसको अर्थ यो भयो अविजातको रूपबाट परमात्मा त्यहाँ आएर ब्रह्मविद्याको उपदेश दिएर भने—'तैंले मलाई छोड़ेर मबाट टाढ़ा भइस् र नौद्वार भएको नगरीमा बस्न गइस्, तबदेखि तँ दुःखी भइस्। तैंले आफ्नो स्वरूपलाई चिन।'

लौकिक सुखमा मानिस यति फँसिरहन्छ, उसले आफ्नो आत्मस्वरूपलाई विचारै गर्दैन। 'तत् त्वमसि।' तिमी मेरा मित्र हौ, मेरा अंश हौ, मेरा स्वरूप हौ। तिमी स्त्री-पुरुष होइनौ। तिमी मतिर हेर।

पुरञ्जन प्रभुका सम्मुख आयो। जीव र ब्रह्मको मिलन भयो। जीव कृतार्थ भयो। तिमी पुरञ्जन राजा हौ। तिमी कतिपटक स्त्री बन्यौ र कति पटक पुरुष। तैपनि तिमीलाई तृप्ति भएको छैन, अब पनि जगत्मा कहिलेसम्म र कति रूमलिन्छौ। परमात्माको आश्रय लिएर उनको चिन्तन गर्दै उनको स्वरूपमा लीन भयौ भने तिमी कृतार्थ हुनेछौ।

भक्तमालामा अमरदासजीको एउटा कथा छ। एक पटक अमरदासजीले आफ्नी आमालाई सोधे—'आमा, म तपाईंको विवाहको समयमा कहाँ थिएँ?' तब आमाले भनिन्—छोरा, मेरो विवाहपछि तेरो जन्म भएको हो। तब छोराले भने 'आमा, तपाईंले गल्ती भन्नुहुन्छ। त्यस समयमा पनि म कहीं थिएँ होला निश्चयै। मेरो त्यो मूल निवास कहाँ छ?'

हाम्रो यस बुद्धिले जान्दछ हाम्रो मूल निवास-स्थान कहाँ छ। त्यसकारण जीव जगतमा अलमलिएर घुमिरहन्छ।

नारदजीले प्राचीन बर्हिराजालाई पुरञ्जनको कथा सुनाए।

विषयहरूमा जीव यसरी फँसेको छ त्यसले सोच्दासम्म सोच्दैन ऊ को हो। फेरि यसले परमात्मालाई चिन्न पनि कसरी सक्ने?

यस तरहले जीवात्माको कथा सुनेर प्राचीन बर्हिराजालाई आनन्द भयो र भने 'अब म कृतार्थ भएँ। अब म यज्ञमात्र गरिरहने छैन।' उनी अब भगवत् चिन्तन गर्दै भगवान्मा लीन भए। यस कथाले मानिसलाई उसका दोषहरूलाई चिनाएर मुक्त पनि गराइदिन्छ।

पूर्व जन्मको प्रारब्धलाई सहू र यस्तो प्रयत्न गर यहाँ प्रारब्ध उत्पन्न पनि नहोस्। यस्तो पवित्र र सादा जीवन बिताऊ जन्म-मृत्युको चक्करबाट मुक्ति पाइहालियोस्।

आत्मा परमात्माको अंश हो। जीवात्मा देहबाट भिन्न छ। जीवात्मा न ब्राह्मण हो र न वैश्य, न पुरुष हो न स्त्री। आत्मस्वरूपको ज्ञान भइहालोस् र देहको विस्मरण भइहालोस् अनिमात्र मानिसलाई जिउँदै मुक्ति प्राप्त हुन्छ।

जगत् छैन, यस्तो बोध (अनुभव) मानिसलाई हुन्छ तर आफ्नो स्वयंको अस्तित्वको बोध उसलाई हुन पाउँदैन। अहम्को अविस्मरण हुँदैन।

दसहजार वर्षसम्म प्रचेताहरूले नारायण सरोवरको किनारमा जप गरे, अनि मात्र उनका समक्ष नारायण प्रकट हुनुभएको थियो।

जपद्वारा मनको शुद्धि हुन्छ, जपविना जीवन सुधिँदैन। रामदास स्वामीले अनुभवबाट 'दास बोध' मा लेख्नुभएको छ 'तेह्र करोड़ जप गर्नाले ईश्वरको साक्षात् दर्शन हुन्छ।'

जपले पूर्वजन्मको पापलाई पनि डढ़ाइदिन्छ। जपको फल तत्काल पाइएन भने सम्झ पूर्वजन्मको पाप अहिलेसम्म बाँकी छ र जुन अहिले नाश हुनुपर्छ। यस विषयमा स्वामी विद्यारण्यको दृष्टान्त हेर्नलायक छ।

स्वामी विद्यारण्य बड़ा गरीब व्यक्ति थिए। अर्थप्राप्तिका निमित्त उनले गायत्री मंत्रको चौबीस पुरश्चरण गरे तर अर्थ प्राप्ति हुन सकेन। त्यसकारण थाकी हार मानी संन्यास लिए। त्यस समयमा उनलाई माता गायत्रीको दर्शन पाइयो। माताजीले भनिन्—'म तिमीसँग प्रसन्न छु। जे चाहिन्छ सो माग।'

स्वामी विद्यारण्यले भने—'माताजी, जब खाँचो थियो त्यस बखत तपाईं आउनुभएन। अब तपाईंको आवश्यकतै के छ र? अँ यति भनिदिनुहोस् त्यस समयमा तपाईं किन प्रसन्न हुनुभएन?'

स्वामीजीले पछिल्तिर हेर्दछन् त्यहाँ चौबीस पर्वत सल्किरहेका थिए। उनले माताजीलाई सोधे—'यो कस्तो अचम्म भएको?'

गायत्री माताले भनिन्—'यी तिम्रा पूर्वजन्महरूका पाप हुन्, जो तिम्रो तपश्चर्याले सल्किरहेछन् चौबीस पर्वतहरूका जस्ता महान् तिम्रा पापहरूको क्षय भएपछि म छिटै आइहालें। जबसम्म पापहरूको क्षय हुँदैन र जीवको शुद्धि हुँदैन तबसम्म मेरो दर्शन हुन सक्तैन।'

विद्यारण्यले भने—'माता, म अब शुद्ध भएँ। अब मलाई केही पनि माग्नु छैन।'

यसपछि उनले 'पंचदशी' नाउँको वेदान्तको उत्तम ग्रन्थ लेखे।

भगवान् नारायणले प्रचेताहरूलाई दर्शन दिए र तिमीहरू विवाह गर भन्ने आज्ञा दिनुभयो।

विवाह गर्नु पाप होइन। गृहस्थाश्रम भक्तिमा बाधक छैन, साधक छ। एक-दुइ सन्तान भएपछि संयमको पालन गर।

यस जीवात्माले कति जन्मदेखि कामवासना भोगिरहेछ। विवाह गर्नाले कामसुखको सूक्ष्म वासना हट्दछ। ईश्वरको मायाले जीवलाई दुइ किसिमबाट मार्दछ। विवाहित पनि पछुताउँछ र अविवाहित पनि।

गृहस्थाश्रमको वातावरण यस्तो हुन्छ विषमता गर्नैपर्छ। भगवान्ले भन्नुभएको छ—'रोज तीन घण्टा, नियमपूर्वक मेरो सेवा, स्मरण गर्‍यौ भने म तिमीलाई पाप गर्नबाट रोक्ने छु र रक्षा पनि गर्नेछु।'

एकसाथ तीन घण्टासम्म भगवत् स्मरण गर्नेलाई पाप कर्मबाट रोक्नुहुन्छ। पाप गर्दाखेरि मनलाई अलिकति पनि नमिठो लाग्यो भने बुझ साधारण कृपा भएको छ। पाप गर्ने बानी हट्यो भने सम्झ प्रभुको पूर्ण कृपा भएको छ। पाप नगर्ने बानी पनि महान् पुण्य हो। पापकी माता हुन् ममता, पिता लोभ। तिनको अवश्य त्याग गर।

प्रभुसेवा जगत् सेवा हो। प्रभुसेवाका विना देशसेवा सफल हुँदैन। त्यसकारण रघुनाथको कृपा प्राप्त गर्न सदा प्रयत्न गर।

जितने तारे गगन में, उतने शत्रु होय।
जापै कृपा रघुनाथकी, बाल न बाँका होय॥

कुनै कार्य पनि बुद्धि र शक्तिविना हुन सक्दैन र बुद्धि र शक्ति ईश्वरको आराधना नगरिकन प्राप्त हुन सक्दैन।

केवल परोपकारले ईश्वर प्राप्ति हुँदैन। परोपकार कति पटक ईश्वरको प्राप्तिमा बाधक हुन्छ—भरतमुनिलाई यस कुराको बड़ो राम्रो अनुभव भएको थियो।

कामको अर्थ हो घण्टा। प्रहरको अर्थ हो तीन घण्टा। मानिस कमसेकम तीन घण्टा प्रतिदिन जप स्मरण गरोस्। भगवान्‌ले तिमीसँग सम्पत्ति माग्दैनन्, समय माग्छन्। उनलाई समय दिनुपर्छ।

दुःखको कारण मानिसको आफ्नै स्वभाव हो। स्वभावलाई सुधार्नु बड़ो कठिन काम छ। तीर्थस्थानले या विष्णुयाग गर्नाले स्वभाव सुध्रिँदैन। परमात्माको ध्यानबाट जपगर्नाले स्वभाव सुध्रिन्छ। अनेक जन्मदेखि यस जीवले पाप गर्दै आएको छ। पाप गर्ने स्वभाव भगवान्‌को जपले, भगवान्‌को कृपाले मात्र छुट्‌दछ।

गृहस्थलाई प्रचेताहरूका कथामार्फत ज्ञान दिइएको छ।

भगवान् भन्नुहुन्छ—'तिमीले मलाई तीन घण्टा खर्च गरेका खण्डमा म एक्काईस घण्टा तिम्रो याद-विचार गर्दिनेछु। हे जीव, म तिमीलाई पापबाट रोक्नेछु।'

गृहेष्वाविशतां चापि पुसां कुशल कर्मणाम्।
मद्वार्तायातयामानां न बन्धाय गृहा मताः॥

जो मानिस भगवद्दर्पण बुद्धिले कर्म गर्दछ र जसको समय मेरो कथावार्तामा बित्दछ उसका निमित्त गृहस्थाश्रमी भए पनि घर, बन्धनको कारण हुँदैन। यो यस संसारमा फँस्दैन र यस संसारले उसलाई फँसाउन पाएन।

अन्यथा गृहस्थाश्रममा काम शक्ति र अर्थ शक्ति बढ्छ।

सबैलाई पूर्वको प्रारब्ध कर्मानुसार सन्तान र सम्पत्ति पाइन्छ। त्यसकारण त्यसको हर्ष-शोक मनाउनु पर्दैन। त्यसको चिन्ता छोड़ेर भगवान्‌को भजनमा लागिहाल।

मन शुद्ध भएपछि बुझ भगवान्‌को कृपा भएको छ। अन्यथा मानिसको वृत्ति आरन ( त्यो फलामको टुक्रा जसमाथि राखेर कामी फलामलाई घनले चुट्‌दछ )-को चोरी र सियोको दान हुन्छ। यस्तो वृत्ति छोड्नुपर्छ र 'सम लोष्टाश्मकांचन' अर्थात् माटो, ढुङ्गा र सुनलाई एकसमान भन्ठान्ने दृष्टि प्राप्त गर्नुपर्छ। राँका बाँकाको जस्तो वैराग्य हुनुपर्छ।

राँका र बाँका नाम गरेका पति—पत्नी कहीं गइरहेका थिए। राँका अगाड़ि थियो बाँका पछाड़ि। बाटामा राँकाले एउटा सुनको माला देख्यो। त्यसले देख्यो हारलाई देखेर बाँकाको दृष्टि-मति भ्रष्ट होला। त्यसकारण उसले त्यस हारलाई धूलोले ढाकिदिन थाल्यो। उसले यस्तो गरेको देखेर बाँकाले सोधी—'तिमीले यो धूलो किन जम्मा गरेको?' राँकाले जवाफ दियो 'त्यस्तो कुनै कुरा होइन' तर बाँकाले जब साँचो कुरा थाहा पाई तब उसले भनी 'धूलोले धूलोलाई किन ढाकिरहेको? के अहिलेसम्म तिम्रो दृष्टिमा सुवर्ण र धूलो दुइ भिन्न-भिन्न वस्तुहरू हुन्? यस्तो भावना तिम्रो मनमा कसरी आयो?'

तब राँकाले भन्यो—'तँ मभन्दा पनि अगाड़ि भइछेस्। तेरो वैराग्य बाँका हो।' र पत्नीको नाम बाँका भयो।

सन्तको मनमा धूलो र सुन एक समान हुन्छ। यस्तै अनासक्तिभाव हुनुपर्छ।

गरिसकेका सत्कर्महरूलाई र पुण्यहरूलाई बिर्सिदेऊ। पुण्यको अहङ्कार राम्रो कुरा होइन। यस अहङ्कारको समाप्ति नभइकन चित्त शुद्ध हुन सक्दैन। पुण्यलाई बिर्सिदेऊ। गरेका पापहरूलाई सदा संझिराख।

महाभारतमा वर्णित राजा ययातिको उदाहरण हेर्न लायक छ।

आफूले गरेका पुण्यहरूका बलले ययाति सशरीर स्वर्ग गए। उनले इन्द्रासनमा बस्न खोजे। इन्द्र डराएर बृहस्पतिकहाँ गए र सारा कुरा गरी मार्गदर्शन पाऊँ भने। बृहस्पतिले इन्द्रलाई भने—'तिमीले ययाति राजालाई सोध उनले कुन-कुन पुण्य गरेका छन्—जसले गर्दा उनी इन्द्रासनमा बस्न खोज्छन्? आफ्नो पुण्यको वर्णन गर्नाले ती पुण्यहरूको क्षय हुनेछ।'

इन्द्रले बृहस्पतिको सल्लाहअनुसार ययातिलाई सोधे। ययातिले आफ्ना पुण्यहरूको स्वयं वर्णन गरे। त्यसकारण ती पुण्यहरूको क्षय भयो र फलतः उनको स्वर्गबाट पतन भयो।

सँधै संझिराख आफूद्वारा भएका सत्कर्महरूको, पुण्यको स्वयं वर्णन कहिल्यै नगर्नु।

यो श्लोक सदा संझिराख—

**षडंगादिवेदो मुखे शास्त्रविद्या कवित्वादिगद्यं सुपद्यं करोति।**
**हरेरंघ्रिपद्मे मनश्चेन्नलग्नं ततः किम्, ततः किम्, ततः किम्, ततः किम्॥**

षडंगादि देवहरूको ज्ञान होस्, शास्त्र-वर्णित सर्वविद्या कण्ठस्थ होस्, कवित्वमयी वाणीमा सुन्दर गद्य-पद्य रच्ने शक्ति होस् तर चित्त हरिचरणमा लागेको छैन भने ती सबैको के अर्थ भयो? केही पनि भएन।

भगवान्‌ले प्रचेताहरूलाई विवाह गर्ने आज्ञा दिए। उनीहरू आफ्ना घर गए। सबैको विवाह भयो र सबैका एक-एक पुत्र पनि भए।

सबै प्रचेता फेरि नारायण सरोवरका किनारमा आए। उनीहरूले नारदजीलाई भने—गृहस्थाश्रमको विलासी वातावरणमा आफ्नो सारा ज्ञानलाई, आफ्नो लक्ष्यलाई हामीहरूले

बिर्सिसकेका छौं। गृहस्थाश्रममा विषमता राख्नुपर्छ, जसले गर्दा ज्ञान विस्मृत भइहाल्छ। शिवजी र भगवान् नारायणले हामीलाई उपदेश दिनुभएको थियो, त्यो पनि हामीले बिर्सिसकेका छौं, तपाईंले हामीलाई फेरि उपदेश दिनुहोस्।

सारा जगत्लाई कसैले कहिल्यै खुशी पार्न सक्दैन। जगत्लाई प्रसन्न गर्न बड़ो कठिन छ।

एक पटक कोही पिता-पुत्र एउटा घोड़ा लिएर जाँदै थिए। छोराले बाबुलाई भन्यो—'तिमी घोड़ा चढ़। म हिँड़िरहन्छु। पिता घोड़ामा चढ़े। बाटामा केही मानिसले भने—'यो बाबु कति निर्दयी रहेछ? आफू घोड़ा चढ़ेको छ र सानो छोरालाई घासमा हिँडाइरहेछ।' यो सुनेर बाबु हिँड्न थाल्यो र छोरालाई घोड़ामा चढ़ाइदियो। अगाड़ि बाटामा फेरि केही मानिस भेटिए। उनीहरूले भने—'यो पुत्र कस्तो निर्लज्ज जो तरुण भएर पनि घोड़ा चढ़िरहेछ र बूढ़ा बाबुलाई पैदल हिँड़ाइरहेछ।' यो कुरा सुनेर पिता-पुत्र दुवै जना घोड़ामा सवार भए। बाटामा फेरि केही मानिस भेटिए र उनले भने—'कति निर्दयी यिनीहरू। दुवै भैंसी जस्ता छन् र सानो घोड़ामा चढ़ेका छन्—यिनको भारले घोड़ा थिचिएर जानेछ।' यिनको कुरा सुनेर पिता-पुत्र दुवै पैदल हिँड्न थाले। बाटामा फेरि अलिकति अगाड़ि केही मानिस भन्न थाले—'कति मूर्ख छन् यिनीहरू ! साथमा घोड़ा छ र पनि पैदल हिँडिरहेछन्।' एक जना चढ़ेको थियो र पनि टिप्पणी गरे दुइ जना बसेका थिए र पनि निन्दा गरे र दुवै हिँड़ेर गइरहेका थिए र पनि नचाहिने कुरा सुन्नुपऱ्यो।

जगत्मा कस्तो व्यवहार राख्ने हो, कस्तो वृत्ति कायम गर्नुपर्ने हो केही बुझिएन। तर परमात्मालाई प्रसन्न राख्नु यति कठिन छैन। जसले परमात्मालाई प्रसन्न राख्न सक्छ त्यसले जगत्लाई पनि प्रसन्न राख्न सक्छ। किनभने भगवान् जगत्का उपादान-कारण हुन्।

रामचन्द्रजी कुटिलका साथ पनि सरल व्यवहार गर्नुहुन्थ्यो, तर कृष्ण सरलका साथ सरल र कुटिलका साथ कुटिल व्यवहार गर्नुहुन्थ्यो।

**कृते प्रतिकृतम् कुर्यात् एष धर्मः सनातनः।**

यो हो यी दुवैका अवतारहरूको भिन्नता।

जगत्लाई रामचन्द्रजीले पनि प्रसन्न राख्न सक्नुभएको थिएन भने सामान्य मानिसले गर्न पो के सक्छ? समाजलाई राजाले होइन सन्तले मात्र सुधार्न सक्छ। रामदास स्वामी मनलाई बोध (उपदेश) दिनुहुन्छ—''बहु हिंडता सख्य होणार नाहिं।'' त्यसकारण जगत्लाई खुशी पार्ने वृत्ति र इच्छा छोड़ेर ईश्वरलाई मात्र प्रसन्न राख्ने प्रयत्न गर।

प्रभुलाई प्रसन्न गर्नका निमित्त तीन मार्ग नारदजीले चौथो स्कन्धमा भन्नुभएको छ—

**दयया स्वर्वभूतेषु संतुष्ट्या येन केन वा।**
**सर्वेन्द्रियोपशान्त्या च तुष्यत्याशु जनार्दनः॥**

(भा० ४-३१-१९)

जीवमात्रका प्रति दया, जे-जति पाइन्छ त्यसमा सन्तुष्टि, सबै इन्द्रियहरूको संयम—यिनै तीन उपायहरूद्वारा परमात्मा चाँड़ै प्रसन्न हुनुहुन्छ। यी कुरालाई कार्यान्वित गर्नेमाथि भगवान् कृपा गर्नुहुन्छ।

सबै इन्द्रियहरूलाई संयमित गर र विषयहरूमा तिनलाई रम्न नदेऊ। संयमविना जीवले सरल हुन सक्दैन।

विष खानाले मानिस मर्छ, त्यसको चिन्ताले होइन तर उपयोग नगर्दा गर्दै पनि विषयहरूको चिन्तन मात्रले पनि मनुष्य मर्दछ अर्थात् विषय विषभन्दा पनि खराब हो। त्यसलाई विषवत् त्याग गर।

विदुरजीले भने—'मैले सुनें त्यसको चिन्तन मैले गर्नुपर्छ। म मात्र ईश्वरबाट विभिन्न भएको छु। मै पुरञ्जन हुँ यस्तो विचार गरेर कथाको बारम्बार चिन्तन गर।'

मैत्रेयजीले विदुरजीलाई यो कथा सुनाउनुभयो र विदुरजीलाई मुक्ति मिल्यो।

प्रचेताहरूका कथाले वक्ता र श्रोता दुवैका पापहरूलाई डढ़ाइदिन्छ।

हरे राम हरे राम, राम राम हरे हरे।
हरे कृष्ण हरे कृष्ण, कृष्ण कृष्ण हरे हरे॥

# ❀ पञ्चम स्कन्ध ❀

श्री शुकदेवजीले भन्नुभयो—'श्रीमद्‌भागवत्‌को कथाले सात दिनमै मुक्ति दिन्छ।'

वक्ता अधिकारी होओस् र श्रोताले सावधान भएर कथा सुन्यो भने सांसारिक विषयहरूप्रति विस्तार-विस्तार अरुचि र परमात्माप्रति रुचि जाग्दछ। प्रभुप्रति प्रेमभाव जाग्यो भने सातै दिनमा यस कथाले मुक्ति दिलाउँछ।

भागवतको कथा सुनेर पनि मुक्ति पाइएन भने भन्ठान पूर्वचित्त अप्सरा मनमा अझसम्म बसिरहेकी छे।

अब पूर्वचित्त अप्सराको कथा सुन्नुहोस्।

पूर्वजन्ममा जुनको उपभोग गरिएको थियो, ती विषयहरूको वासना अहिले पनि चित्तमा बसिरहेको हुन्छ, त्यही यस पूर्वचित्त अप्सराको स्वरूप हो। जीव र ईश्वरको मिलनमा वासना बाधारूप हो। मानिसलाई चाहिन्छ त्यसले सुख-दुःख भोगेर प्रारब्धको नाश गरोस्, तर नयाँ प्रारब्ध उत्पन्न नगराओस्। मानिसले यसै जन्ममा आगामीको जन्मको पनि तयारी गर्दछ। त्यसकारण ज्ञानीजन संसर्ग दोषबाट टाढ़ै हुन्छन्।

परमहंस ऋषभदेवजी ज्ञानी हुनुहुन्छ। परमहंस भरतजी भगवद्‌जन हुनुहुन्छ।

सांसारिक प्रवृत्तिहरू ज्ञाननिष्ठा र भक्तिमा बाधक छन् भनेर ज्ञानी पुरुषहरू भन्ठान्दछन्।

सांसारिक प्रवृत्तिहरूलाई सहसा नछोड़ तर विवेकद्वारा कम गर्दै जाऊ।

परमहंसको यो निष्ठा हो, जगत्‌मा जे-जति देखिन्छ त्यो सबै मिथ्या हो। जगत्‌लाई मिथ्या मान्नाले वैराग्य उत्पन्न हुन्छ। संसारलाई सत्य मान्नाले मोह उत्पन्न हुन्छ। जगत्‌मा जे देखिन्छ, ती सब मिथ्या हो, तर यी सबलाई देख्ने आत्मा सुखरूप हो।

दृश्य विनाशी र फलरूप हुनाको कारणले ज्ञानी आफ्नो दृष्टि दृश्यमा राख्दैनन्। ज्ञानीजन आफ्नो मनलाई दृश्यवस्तुमा रमाउन दिँदैनन् तर यी सबैका साक्षी परमात्मामा दृष्टिलाई स्थिर गर्दछन्।

मनलाई आत्म-स्वरूपमध्येबाट सत्ता भेटिन्छ। मनको स्वतन्त्र सत्ता छैन। आत्माको अवज्ञा पाएपछि मात्र मनले पाप गर्दछ। आत्मा मनको साक्षी र द्रष्टा हो। मनलाई पाप गर्ने अनुमति कहिल्यै नदेऊ।

ऋषभदेव मनलाई दृश्यमा कहिल्यै जान दिँदैनथे र मनलाई ईश्वरमा स्थिर राख्दथे, जसले गर्दा मन प्रभुमा मिल्न जान्थ्यो र सुख-दुःखको स्पर्श हुँदैनथ्यो।

निद्रामा मन निर्विषयी बन्दछ। निद्रावस्थामा मन जस्तो प्रकारको हुन्छ, त्यस्तै जागृत अवस्थामा पनि रह्यो भने संझ मुक्ति हो। सबै विषयहरूबाट मनलाई हटाउनु पर्ला। दृश्यमध्येबाट हटेर मन द्रष्टामा मिल्छ। मनको ईश्वरमा लय भएपछि मुक्ति पाइन्छ।

ज्ञानी पुरुषहरूका निमित्त संसार बाधक छैन। ज्ञानी पुरुष स्वेच्छाले होइन बरु अनिच्छाले प्रारब्धका कारणले बाँचिरहन्छन्।

भगवान्‌का भक्त परमहंस ज्ञानी प्रारब्धका कारणले मात्र बाँच्छन्। यी दुइ निष्ठा त्यसो तर एउटै नै हुन् तर पनि भिन्न-भिन्न छन्। मार्ग भिन्न छन्। ज्ञानी जगत्‌लाई असत्य मान्छन् तर भगवद्‌जन जगत्‌लाई सत्य मान्दछन्।

ज्ञानी र भगवद्‌भक्त परमहंसको लक्ष्य एकै हो, तर साधन भिन्न-भिन्न छन्। ज्ञानी परमहंस जगत्‌लाई मिथ्या रूप अनुभव गर्दछन्। भागवत परमहंस जगत्‌लाई वासुदेवस्वरूप संझन्छन्।

भागवत परमहंस मान्दछन्—

**वासुदेवः सर्वमिति।**

(भा० ५-७-११)

भागवत परमहंस भन्दछन् जगत् मिथ्या छैन तर सत्य छ र वासुदेवमय छ।

शंकरस्वामीले जगत्‌लाई मिथ्या मानेको छ।

यी दुवै निष्ठाहरूमा शाब्दिक भेद छ, तत्त्वतः छैन।

जगत् असत्य र सबैका द्रष्टा ईश्वर सत्य हो, यस्तो ज्ञानी मान्दछन्। वैष्णवभागवत मान्दछन् जगत् ब्रह्मकै स्वरूप हो।

वेदान्तीको विवर्तवाद हो र वैष्णवहरूको परिणामवाद। ज्ञानीहरूको विवर्तवाद हो। दूधबाट दही बन्दछ तर दही दूध होइन।

भागवत् भन्दछन्। ईश्वरमध्येबाट जगत्‌को जो परिणाम (जन्म) भएको छ त्यो दहीको जस्तो होइन तर सुवर्णबाट बनेका आभूषणहरूको भाँति भएको छ। सुवर्णको टुक्रा सुवर्ण मात्र थियो र आभूषण बनेपछि पनि सुवर्ण मात्रै रह्यो। सुवर्णको टुक्राको सुवर्णमा र आभूषणको सुवर्णमा कुनै भेद रहेन। जगत् ब्रह्मकै परिणाम हो, अतः सत्य हो।

सूतजी सावधान होऊ भन्नुहुन्छ।

'शङ्कराचार्य भन्नुहुन्छ' नाम रूप मिथ्या हो र अन्य सबै कुरा सत्य हो। माटो सत्य हो तर माटोको गाग्रो सत्य होइन। यस्तै प्रकारले जगत् सत्य होइन।

वैष्णव भन्दछन् 'ब्रह्मरूप जगत् सत्य हो। यिनीहरू जगत्लाई ब्रह्म रूप मानेर जगत्का प्रत्येक पदार्थलाई ब्रह्मरूप देख्दछन् र जगत्का सबै पदार्थहरूलाई प्रेम गर्छन्।'

ज्ञानी पुरुष जगत्लाई मिथ्या मानेर जगत्का पदार्थसँग प्रेम गर्दैनन्। उनीहरू केवल ईश्वरसँग प्रेम गर्छन् र विकार-वासनालाई नष्ट गर्छन्। उनीहरू भन्छन्—शरीर विष्ठा-मूत्रले भरिएको छ र यस आधारबाट तिनीहरूले देहको मोहलाई छोड़ेर परमात्मामा लीन हुन्छन्।

तर वैष्णवहरूका निमित्त सारा जगत् ब्रह्मरूप हुन्छ।

**सियाराम मय सब जग जानी।**
**करउँ प्रनाम जोरि जुग पानी॥**

ज्ञानीको दृष्टि नारीतर्फ गयो भने ऊ संझिन्छ यो हाडमासुको पुतली हो, मलमूत्रले भरिएको छ। यसबाट के लिनुदिनु छ र यस्तै प्रकारले सोच्दै त्यो ज्ञानीले त्यो स्त्रीका तर्फबाट दृष्टि फर्काइलिन्छ।

यदि वैष्णवले कुनै नारीलाई देख्यो भने तब ऊ त्यसलाई साक्षात् लक्ष्मी मान्ने छ।

ज्ञानी परमहंसको निमित्त मार्ग साधारण गृहस्थलाई केही कठिन छ, वैष्णवहरूको मार्ग हामी जस्तालाई सरल छ। जगत्लाई ब्रह्मरूप सम्झनु सजिलो छ। जो दृष्टिगोचर भइरहेछ त्यसलाई मिथ्या मान्नु कठिन काम हो। मानौं स्त्री सुन्दर छे तर ज्ञानी भन्ला त्यो तर विष्ठामूत्रले भरिएकी पुतली मात्र हो। अतः त्यसबाट मन हटाइलेऊ। सौन्दर्य कल्पनामा छ। ज्ञानी स्त्रीको उपेक्षा गर्ला। कहिले नारी देखा परी भने ज्ञानीले उपेक्षाको दृष्टिले हेर्ला। तिरस्कार गरेर हेर्ला।

तर कुनै वैष्णवले कुनै नारीलाई देख्यो भने उसलाई त्यसले लक्ष्मी देवी सम्झला र यस्तो मानेर निर्विकार भै उसलाई त्यसले वन्दना गर्ला। वैष्णवले नारीलाई सम्मान र सद्भावका दृष्टिले हेर्नेछ।

कुनै पनि वस्तुलाई तिरस्कारको दृष्टिले हेर्नुको अपेक्षा, प्रत्येकलाई भगवद्भावले निर्विकार भएर वन्दना गर्नु धेरै राम्रो हो।

महाप्रभुजी भन्नुहुन्छ : 'प्रत्येक पदार्थ श्रीकृष्णको अंश हो त्यसकारण यो जगत् सत्य हो।'

तर खण्डन-मण्डनको यस्तो संघर्षबाट टाढ़ा बस्नै जाती। अन्यथा रागद्वेष बढ्ने आशङ्का हुन्छ।

ज्ञानी परमहंस ज्ञानद्वारा उपदेश दिन्छन् तर भागवत परमहंस क्रियाद्वारा उपदेश दिन्छन्। जड़भरतको जस्तै उसको प्रत्येक क्रिया उपदेशरूप हुन्छ।

ऋषभदेव आदर्श ज्ञानी परमहंस हुन् तर भरतजी आदर्श भागवत परमहंस। सबै कुरा त्यागेर ऋषभदेव पागल जस्तो भएर जगत्मा भ्रमण गर्छन्। सबैमा ईश्वरको भाव राखेर भरतजी सबैको सेवा गर्दछन् : ''मैं सेवक सचराचर, रूप स्वामि भगवंत।''

ऋषभदेवलाई देहाध्यासमात्र होइन उनी आदर्श ज्ञानी परमहंस हुन्। पहिले यिनकै कथा आउने छ। ऋषभावतार ज्ञानको आदर्श स्थापित गर्नका निमित्त हुन्।

पंचम स्कन्ध भागवतको ब्राह्मण अर्थात् भाष्यरूप या व्याख्यारूप हो।

द्वितीय स्कन्धमा गुरुले साधन दिए र त्यसपछि ज्ञान दिए। ज्ञानलाई जीवनमा कसरी घटाउने, यो तृतीय तथा चतुर्थ स्कन्धको सर्ग-विसर्ग लीलामा वर्णन गरिएको छ।

अब प्रश्न यो छ ज्ञानलाई कुन रीतिबाट स्थायी गर्ने? ज्ञानलाई स्थिर गर्ने, स्थायी गर्ने रीति पञ्चम स्कन्धको स्थिति लीलामा बताइएको छ। स्थिति अर्थात् प्रभुको विजय। सबै सचराचर जगत् प्रभुको मर्यादामा छ।

परीक्षित् राजा आरम्भमा प्रश्न गर्नुहुन्छ—'मनुका पुत्र राजा प्रियव्रतलाई विवाह गर्ने इच्छा थिएन र पनि उनले विवाह किन गरे? गृहस्थाश्रम चलाउँदा-चलाउँदै पनि उनले सिद्धि कसरी प्राप्त गरे? कस्ता प्रकारले कृष्णमा उनको भक्ति दृढ़ भयो?'

शुकदेवजी वर्णन गर्नुहुन्छ—

'घर भक्तिमा बाधकरूप छ। घरमा गृहस्थलाई विषमता ( पक्षपात ) गर्नै पर्छ। गृहस्थले सबैप्रति समभाव राख्न सक्दैन। त्यसले शत्रु, मित्र, चोर, सेठ आदि सबैमा समभाव राख्न सक्दैन।'

श्रीकृष्णको गृहस्थाश्रम यस्तो थियो उहाँको सबैप्रति समभाव थियो। एकपटक दुर्योधन उहाँसँग सहायता माग्न आयो। त्यसो उसले केही समयअघि श्रीकृष्णको अपमान गरेको थियो र पनि निर्लज्ज भएर ऊ सहायता माग्न भनी आयो। सामान्य गृहस्थले आफ्नो अपमान बिर्सन सक्दैन तर श्रीकृष्ण दुर्योधनलाई सहायता दिन तयार हुनुभयो। अर्जुन पनि सहायता माग्न आएका थिए। दुर्योधनले भन्यो, 'म अर्जुनभन्दा पहिले आएको हुँ, त्यसकारण माग्ने अधिकार पहिलो मेरो हो।'

श्रीकृष्णले भन्नुभयो—'म त तिमी दुवैलाई सहायता गर्नेछु। एक पक्षमा मेरो नारायणी सेना हुनेछ र अन्य पक्षमा निःशस्त्र म।'

दुर्योधनले सोच्यो कृष्ण कुरै मात्र गरिरहलान् तर मलाई युद्ध गर्नेहरूको आवश्यकता छ, कुरा मात्र गर्ने चाहिने होइन। उसले नारायणी सेना माग्यो। अर्जुनले श्रीकृष्ण मागे।

यस प्रकार श्रीकृष्णले अर्जुन र दुर्योधन दुवैका प्रति समभाव राख्नुभयो। श्रीकृष्ण गृहस्थाश्रमी होइन, आदर्श संन्यासी हुनुहुन्छ।

गृहस्थाश्रमी भएर पनि भक्तिकार्यमा केही न केही बाधा उपस्थित भइरहन्छ, त्यसकारण राजा प्रियव्रतले सोचे यस व्यवहारलाई मैले त्याग गर्नैपर्ला।

परमार्थमा अभेद बुद्धि र व्यवहारमा भेदबुद्धिको निर्वाह गर्नुपर्छ। व्यवहारले भेदभाव जगाउँछ। भेदभाव भएपछि काम, क्रोध आदि विकार उत्पन्न हुन्छ। ज्ञानी पुरुष सबैलाई अभेदभावले हेर्दछन्। व्यवहार र परमार्थलाई एउटै गर्न बड़ो कठिन छ। भेदभावका कारणले व्यवहारमा वैर र असमानता हुन्यै भयो। त्यसकारण ज्ञानीजन सबै प्रवृत्तिहरूलाई त्याग गरेर एकान्तमा भक्ति गर्छन्।

घरमा भक्ति हुन सक्दैन, किनभने कैयौं विक्षेप आइरहन्छन्। तिमीले घर छोड़ेर गङ्गाकिनारामा जान सक्दैनौ। त्यसकारण भन्नुपर्‍यो घरमै बसेर भजन गर। जीव जब प्रभुका साथ एक हुन्छ तब साक्षात्कार गर्न सक्छ। एकान्तमा ईश्वरको आराधना गर्नाले यो काम सकिने हुन्छ।

राजा प्रियव्रतलाई इच्छा भयो म एकान्तमा ईश्वरको आराधना गरूँ। त्यहाँ ब्रह्माजीले आएर राजालाई भन्नुभयो—'प्रारब्ध भोग्नै पर्छ। मलाई पनि परमात्माको आज्ञाले भोग्नै परेको छ। मलाई पनि प्रवृत्ति गर्ने इच्छा छैन। तिमीलाई अहिले वनगमनको आवश्यकता छैन। सावधानीपूर्वक व्यवहार गर। जितेन्द्रियले घर बसीबसी ईश्वरको आराधना गर्न सक्छ र जो जितेन्द्रिय छैन त्यसलाई वनमा पनि प्रमादले दुःख दिनेछ।'

स्त्री-पुत्रलाई त्याग गरेर वनमा गएर पनि भरतले संसार बसाएका थिए। भरतजी वनमा अल्मलिए। प्रह्लादले दैत्यहरूका साथमा बसेर, कति किसिमको कष्ट सहेर घरमै भक्ति गरेका थिए।

भागवत सबैका निमित्त हो—गृहस्थका निमित्त पनि गृहत्यागीका निमित्त पनि।

भागवतको कथा मार्गदर्शक हो। यस्तो होइन गृहत्यागीलाई मात्र भगवान् भेटिनुहुन्छ।

पवित्र र सदाचारपूर्ण जीवन-यापन गर्नेलाई घरमा बस्दा-बस्दै पनि भगवान् भेटिनुहुन्छ। घरको वातावरण प्रतिकूल हुँदा-हुँदै पनि प्रह्लादजीले घरमा बसेर भक्ति गरेर भगवान्‌को दर्शन गरे।

आफ्नो जीवनको लक्ष्य निश्चित गर्नु बड़ो आवश्यक छ। लक्ष्यलाई ध्यानमा राखेर नै जीवन व्यवहार गरियोस्। मानव जीवनको लक्ष्य हो प्रभुको प्राप्ति।

प्रह्लादले प्रतिकूल परिस्थिति भएर पनि भक्ति गरे। उता घरलाई भक्तिको बाधक रूप मानेर गृहत्याग गरेर पनि भरतजीले वनवासमा भक्ति गर्न सकेनन्। मानिस कहीं पनि जाओस् पञ्चविषय साथै आउने भयो। घरमा बसेरै भक्ति गर्नुछ भने प्रह्लादको आदर्श दृष्टिसमक्ष राख र वनवासी भएर भक्ति गर्नु छ भने भरतजीको जीवन लक्ष्यमा राख।

जीवनका पछि ६ वटा चोर लागेका छन्। ती ६ चोर हुन्—काम, क्रोध, लोभ, मोह, मद र मत्सर। यी विकारहरूका वशमा जो हुँदैनन् उसका निमित्त घर बाधारूप हुँदैन।

गृहस्थाश्रम एउटा किल्ला हो। पहिले त्यसभित्रै बसेर लड्नु उत्तम हो। यी ६ शत्रु वनमा पनि सँगसँगै आएर सताउँछन्। त्यसकारण ती ६ शत्रुरूपी विकारहरूलाई हराउनु छ। काम, क्रोध, लोभ, मोह, मद र मत्सरलाई जित्नु छ। यी ६ शत्रुहरूको विजेता गृहस्थ हुँदा-हुँदै पनि वनवासी जस्तै हुन्छ। गृहस्थाश्रमी भएर यी ६ विकारहरूलाई कुल्चन सजिलो छ।

सुखी हुनु छ भने आफ्नो चालीसौं वर्षबाट संसारका व्यवहारहरूलाई विस्तार-विस्तार त्याग गर्न लाग र एकानब्बे वर्षमा वनतर्फ जाऊ।

ब्रह्माजी राजा प्रियव्रतसँग भन्नुहुन्छ—'तिमी विवाह गर। विवाह नगरी विकार -वासना नष्ट हुन सक्तैन। केही समयका निमित्त संसारका सुखहरूको उपभोग गरेपछि परमात्माको आराधना गर।'

व्यवहार गर तर यस्तो गर जो पुनर्जन्मको बीजारोपण हुन नजाओस्। राग-द्वेषरहित गरिएको व्यवहारले मानिसलाई मुक्ति दिलाउँछ।

जीवनमुक्त पुरुष शारीरिक अभिमानबाट मुक्त हुन्छ। त्यसले वासना राख्दैन, त्यसकारण उसलाई दोस्रो देह पाइँदैन।

आज्ञा पाएपछि प्रियव्रतले विवाह गरे। उनका घरमा कैयौं बालक उत्पन्न भए। प्रियव्रतपछि आग्निध्रले शासन सम्हाले।

उनी तपश्चर्या गर्न वनमा गएर बसे। उनका तपमा पूर्वको वासना—पूर्वचित्ति बाधाहरू उपस्थित हुन थाले।

चित्तमा बस्ने पूर्वजन्मको वासना पूर्वचित्ति हो। योग गरेको विषयसुखको स्मरण र त्यसका कारण मनमा बसिराखेको सूक्ष्म वासना पूर्वचित्ति हो। पूर्वको वासना छिट्टै छुट्न सक्तैन। इन्द्रियहरूले पाएको सुख तिनीहरू बारंबार मागिरहनेछन्। यस्तो वासना जागेर आयो भने मनलाई सम्झाउनुपर्छ तैंले आजसम्म कति सुखोपभोग गरिस् तर पनि तृप्ति भएन क्या? जबसम्म विषयहरूको आकर्षण छ तबसम्म विषयेच्छा नष्ट हुन पाउँदैन। विषयहरूका प्रति आकर्षण नभएपछि विषयेच्छा नष्ट हुन्छ। सांसारिक विषयहरूमा जबसम्म रुचि रहन्छ, तबसम्म यो जीव ज्ञान-भक्तिको मार्गमा अगाड़ि बढ्न सक्दैन। पूर्वचित्तिले सबैलाई सताउँछ। पूर्वचित्तिको अर्थ हो पूर्वको संस्कार। निवृत्ति भएर पनि पूर्वको वासनाको संस्मरण भइरहनु पूर्वचित्ति हो।

आग्निध्र राजा पूर्वचित्तिमा फँसेका छन्। आग्निध्रको घरमा नाभि भए। नाभिको घर पुत्ररूपमा ऋषभदेव भए। ऋषभदेवजी ज्ञानका अवतार थिए। ज्ञानी परमहंसहरूको व्यवहार कस्तो किसिमको हुनुपर्छ, सो बताउनलाई भगवान्ले ऋषभदेवजीको रूपमा जन्म धारण गर्नुभयो। जगत्लाई ज्ञानी उहाँ परमहंसको आदर्श देखाउन चाहनु हुन्थ्यो। ऋषभको अर्थ हो सर्वश्रेष्ठ।

ऋषभदेव बारम्बार उपदेश दिनुहुन्छ मानवजीवन भोगका निमित्त होइन, तपश्चर्याका निमित्त हो। तप गर र सबैमा ईश्वर देख। विषय-सुखहरूमा मात्र मानवशरीरको दुर्व्यय नगर।

जगत्मा ज्ञानी परमहंसलाई कसरी बस्नुपर्छ, यो बताउनाका लागि ऋषभदेवजीले सबै सङ्गहरूको र सर्वस्वको त्याग गरे। अनेक सिद्धिहरू उनका साथमा आएर पनि उनी तिनमा फँसेनन्।

गृहस्थका निमित्त धनत्याग र काम-सुखको त्याग गर्नु जति कठिन छ, त्यसभन्दा पनि ज्यादा कठिन छ महात्माहरूलाई सिद्धिहरूको त्याग गर्न।

ऋषभदेवजी नग्नावस्थामा घुम्नु फिर्नु हुन्छ, उठी-उठी खानुहुन्छ, साँढ़ जस्तो सागपातको आहारा गर्नुहुन्छ। कसैले पिट्यो भने उहाँ मानिलिनुहुन्छ—शरीर मात्र पिटिएको हो। म शरीरबाट भिन्न छु, ब्रह्मनिष्ठ छु, सबै जान्दछन् शरीरबाट आत्मा भिन्न हो, तर यसको अनुभव बहुत कम व्यक्तिले गर्न सक्छ।

श्री फल—नरिवलमा भित्रको सेतो गोला र त्यसको कड़ा आवरण एउटै नभए पनि जबसम्म भित्र पानी हुन्छ तबसम्म ती पदार्थहरूले एक-अर्कालाई छोड्दैनन्। यस्तै प्रकारले जबसम्म मनुष्यको विषयमा रस हुन्छ, विषयमा आसक्ति छ, तबसम्म शरीर र आत्माको भिन्नताको अनुभव हुन सक्दैन। शरीर आवरण हो, आत्मा गोला हो, विषयरस पानी हो। संसारको कुनै पनि वस्तुमा जबसम्म रस हुन्छ, तबसम्म शरीर र आत्माको भिन्नताको अनुभव हुन पाउँदैन।

शारीरिक उपभोगहरूमा आनन्द छैन। आत्मा मात्र आनन्दरूप हो।

नामरूपको मोह जबसम्म छुट्दैन, तबसम्म आत्मा र देहको भिन्नता बुझिँदैन, यसका विपरीत देहाध्यास बढ्दै जान्छ। संसारका जड़पदार्थहरूसँग अति स्नेह गर्नाले जड़ाध्यास पनि बढ्दै रहन्छ।

वैराग्यको विना ब्रह्मज्ञान स्थायी हुन पाउँदैन। ब्रह्मज्ञानको कुरा गर्ने मानिस, धन र प्रतिष्ठासङ्ग पनि प्रेम गर्ने मानिस सच्चा ज्ञानी होइन। सच्चा ज्ञानी त्यही हो जो ईश्वरसँग प्रेम गर्छ। ईश्वरका विना संसारका जड़पदार्थहरूसङ्ग स्नेह भइहाल्छ र त्यसले शरीरभन्दा भिन्न आत्मालाई देख्न सक्दैन। ब्रह्मज्ञान प्राप्त भएपछि यदि सांसारिक विषयहरूमा मोह भयो भने त्यसलाई ब्रह्मानन्द प्राप्त हुँदैन। ब्रह्मज्ञान भएपछि ईश्वरसँग प्रीति भयो भने ब्रह्मानन्द प्राप्त हुन्छ।

ज्ञानी पुरुषलाई चाहिन्छ कुनै पनि वस्तुमा उसले स्नेह नगरोस्। यो मनुष्य जन्म तप गर्नका निमित्त हो। मनुष्य देहले तप गर्नाले अन्तःकरण शुद्ध हुन्छ। अन्तःकरणको शुद्धिबाट अनन्त ब्रह्मसुखको प्राप्ति हुन्छ।

महापुरुषहरूको सेवा मुक्तिको द्वार हो, कामीहरूको सङ्गत नरकद्वार हो।

यस मृत्युरूप संसारमा फँसेका अन्य मानिसहरूको जो उद्धार गर्न असमर्थ छ त्यो गुरु गुरु होइन; त्यो स्वजन, स्वजन होइन; ती माता-पिता, माता-पिता होइनन्। अर्थात् त्यो मनुष्य गुरु स्वजन, माता, पिता हुनलाई अपात्र छ।

योग वाशिष्ठ रामायणमा ज्ञानका सात भूमिकाहरू यस प्रकार निर्दिष्ट गरिएका छन्—( १ ) शुभेच्छु, ( २ ) सुविचारणा, ( ३ ) तनुमानसा, ( ४ ) सत्त्वापत्ति, ( ५ ) असंसक्ति, ( ६ ) पदार्थ भाविनी र ( ७ ) तुर्यगा।

( १ ) शुभेच्छा—आत्मकल्याणका निमित्त, श्रोत्रिय र ब्रह्मनिष्ठ गुरुको शरणमा गएर उनको उपदेशानुसार शास्त्रहरूको अवलोकन-अध्ययन गरेर आत्मविचार र आत्माको साक्षात्कारको उत्कृष्ट इच्छा गर्नु शुभेच्छा हो।

( २ ) सुविचारणा—सद्गुरु कथित उपदेश वचनहरूको तथा मोक्ष शास्त्रहरूको बारंबार चिन्तन र विचार गर्नु सुविचारणा हो।

( ३ ) तनुमानसा—श्रवण, मनन र निदिध्यासनद्वारा शब्दादि विषयहरूका प्रति जो अनासक्ति हुन्छ र सविकल्प समाधिमा अभ्यासद्वारा बुद्धिको जो तनुतासूक्ष्मता प्राप्त हुन्छ त्यही तनुमानसा हो।

( ४ ) सत्त्वापत्ति—उपर्युक्त तीनबाट साक्षात्कारपर्यन्त स्थिति अर्थात् निर्विकल्प समाधिरूप स्थिति सत्त्वापत्ति हो। ज्ञानको चौथो भूमिकावाला पुरुष ब्रह्मविद् कहलाउँछ।

( ५ ) असंसक्ति—चित्त-विषयक परमानन्द र नित्य अपरोक्ष यस्तो ब्रह्मात्मभावनाको साक्षात्कार रूप चमत्कार असंसक्ति हो। यसमा अविद्या तथा उसको कार्यको सम्बन्ध हुँदैन, त्यसकारण यसको नाम असंसक्ति हो।

( ६ ) पदार्थ भाविनी—पदार्थहरूको दृढ़ अप्रतीति हुन्छ। त्यो पदार्थभाविनी हो।

( ७ ) तुर्यगा—तीनै अवस्थाबाट मुक्त हुनु तुर्यगा हो। ब्रह्मलाई जुन अवस्थामा आत्मरूप र अखण्ड जान्दैछौं त्यही अवस्था तुर्यगा हो।

यी सातै भूमिकाहरूमध्ये तीन भूमिकाहरू साधनकोटिका हुन् र अन्य चार ज्ञानकोटिका हुन्। तीन भूमिकाहरूसम्म सगुण ब्रह्मको चिन्तन गर। ज्ञानको पाँचौं भूमिकासम्म पुगेपछि जड र चेतनको ग्रन्थि छुट्दछ र आत्माको अनुभव हुन जान्छ। आत्मा शरीरबाट भिन्न छ। यस भूमिकाहरूमा उत्तरोत्तर देहभान बिर्सिइन्छ र अन्तमा उन्मत्त दशामा प्राप्त हुन्छ। ऋषभदेवजीले यस्तो दशा प्राप्त गर्नुभएको थियो।

ज्ञानीजन पनि इन्द्रियहरू देखि डराउँछन्। तिनीहरूले इन्द्रियहरूलाई विश्वास गर्दैनन्, मनको विश्वास कहिले नगर, बोल्ने इच्छा पनि हुन नपाओस्, त्यसकारण ऋषभदेवजी आफ्नो मुखभित्र ढुंगा राख्नुहुन्थ्यो।

यौवनमा वैराग्य नआए सांसारिक विषयहरूप्रति अरुचि नभए प्रभुभक्ति प्राप्त नहुने हो। विषयहरूका प्रति जबसम्म वैराग्य जाग्दैन तबसम्म भक्तिको आरम्भ हुँदैन।

आँखाले शक्ति दिन्छ मनले, मनलाई शक्ति दिन्छ बुद्धिले र बुद्धिलाई शक्ति दिनुहुन्छ परमात्माले। आँखाका साथ मन नभएमा वस्तु देखिँदैन।

ऋषभदेवजी कर्णाटक आए। दावाग्निमा बुद्धिपूर्वक प्रवेश गर्नुभयो। ''देह सल्किरहेछ, तर आत्मालाई केही पनि हुँदैन''—यस्तो आत्मनिष्ठा परमहंसका निमित्त मात्र हो। ऋषभदेवजीको चरित्र सामान्य मनुष्यका निमित्त अनुकरणीय छैन।

ऋषभदेवजीका सर्वश्रेष्ठ पुत्र भरत थिए। यिनै भरतको नामले हाम्रो देशको नाउँ भरतखण्ड भयो। ऋषभदेवजीका पश्चात् भरतले देशको शासन सँभाले। उनको कथा वर्तमान कालको निमित्त उपयोगी छ। भरतजी महाभागवत हुन्। उनका सङ्गले सबैमा भागवतभाव जाग्थ्यो। उनका साथमा आउनेहरू भक्तिरङ्गमा रंगिन्थे।

भरतजीले व्यवहारको, मर्यादाको कहिले पनि उल्लङ्घन गरेका थिएनन्। उनी महावैष्णव भएर पनि यज्ञ गर्थे। अग्नि भगवान्को मुख हो। प्रत्येक देवलाई इष्टदेवकै स्वरूप मानेर अन्य देवहरूमा कृष्णको अंश मानेर पूजा गर्थे। अनेक यज्ञ गरेर त्यसको सारा पुण्य श्रीकृष्णका चरणहरूमा अर्पित गर्थे।

कर्मफल परमात्मालाई अर्पित गऱ्यौ भने आनन्द हुने छ। कर्मफल प्रभुलाई अर्पण गर्नाले कर्मको अभिमान नष्ट हुन्छ। ईश्वरसँग सकेसम्म धेरै प्रेम गर, अनि मात्र गरिएको कर्महरूको पुण्य परमात्मालाई अर्पित गर्न सक्नेछौ। पत्नी मिहिनेत गर्छिन् र त्यसको फल आफ्ना पतिलाई दिइहाल्छिन्।

कर्म गर र कर्मको फलको उपभोगको इच्छा नराख। कर्मफलको उपभोगको इच्छा राख्यौ भने कर्मको अल्पफल मात्र मिल्नेछ। तर यदि त्यो कर्मफल भगवान्लाई अर्पित गऱ्यौ भने अनन्तफल मिल्नेछ। सकाम कर्मको भागवतमा कति ठाउँमा निन्दा गरेको छ। सकाम कार्यमा क्षति भएपछि क्षमा पाईंदैन। भरत निष्काम भावले कर्म गर्थे र त्यसको पुण्य श्रीकृष्णलाई अर्पित गर्थे।

सत्कर्मको समाप्तिमा भन्नुपर्छ—

**अनेन कर्मणा भगवान् परमेश्वरः प्रीयताम् न मम।**

न मम—यस्तो भन्ने पनि कति जना छन्, तर अर्थ संझदैनन्। कर्म कृष्णार्पण गर्ने भावनाले मात्र भरतजी यज्ञ गर्दथे।

भरतजीलाई युवास्थामा एक दिन वैराग्य उत्पन्न भएर आयो। जसलाई युवावस्थामा वैराग्य उत्पन्न हुन्छ र जसले संयम गरेर भजन प्रवृत्ति बढ़ाउँछ त्यसलाई वृद्धावस्थामा भगवान्को प्राप्ति हुन्छ। वृद्धावस्थामा शारीरिक आसक्ति हुनाको कारणले तिमी भक्ति गर्न सक्दैनौ। तपश्चर्या यौवनमा पनि गर्न सकिन्छ। वृद्धावस्थामै तपश्चर्या गर्नाले आउने जन्म सुध्रिन्छ। शरीर दुर्बल भएपछि ब्रह्मचर्य पालनको कुनै अर्थ छैन। रामचन्द्रजी युवावस्थामा नै वनमा जानुभएको थियो। वनवासका समयमा उनको आयु सत्ताईस वर्षको थियो र सीताजी अठार वर्षकी। रामचन्द्रले युवावस्थामा रावणलाई मारेका थिए। तिमीले पनि आफ्नो युवावस्थामै कामरूपी रावणलाई नाश गर।

वृद्धावस्थामा आएको वैराग्य साँचो वैराग्य हुँदैन। जवानीमै वैराग्यको परीक्षा हुन्छ। जसका साथमा केही छैन त्यसले त्याग गर्नुको अर्थ केही भएन। जवानीमा सुख-सम्पत्ति भएर पनि विषय-सुखमा मन रम्न नजानु, त्यही सच्चा वैराग्य हो भन्न सकिन्छ।

भरतजीको मन घरमा रमेन। राजवैभव, सुखसम्पत्ति, स्त्री-पुत्र आदि सबै कुरा छन् तर आँखाहरू बन्द भएमा यसमध्येबाट केही पनि रहने भएन। जन्मनुभन्दा पहिले जीवको नाता-गोता कोही पनि थिएन। मृत्युपछि पनि कुनै सम्बन्धी हुने छैनन्। आरम्भ र परिणाम ( अन्त )-मा पनि कोही थिएन। मायाले तर बीचमा अल्मलाइदिन्छे।

भरतजी सोचिरहनुभएको छ सांसारिक सुखको उपभोग मैले कति वर्षसम्म गरें। अब विवेकपूर्वक त्यसको त्याग गर्नु छ। उनले यौवनमा बुद्धिपूर्वक त्याग गरे। विषयहरूलाई अनिच्छाले जबर्जस्ती छोड्नुपरेछ भने दुःख हुन्छ। तर विषयहरूलाई सम्झी-बुझी स्वैच्छिक त्याग गर्नाले शान्ति प्राप्त हुनेछ। यदि विषयले हामीलाई छोड़िदियो भने अशान्ति हुन्छ, तर यदि स्वयं हामीले तिनलाई छोड़िदियौं भने शान्ति प्राप्त हुन्छ।

परमात्माले यी ६ वस्तुहरूमा माया राखेको छ जसमा मन भुल्दछ—( १ ) भोजन, ( २ ) द्रव्य, ( ३ ) वस्त्र, ( ४ ) स्त्री, ( ५ ) घर, ( ६ ) पुस्तक। यिनमा चार प्रधान हुन् र अन्य दुइ गौण। यसमा स्त्रीको निंदा छैन, काम-सुखको निन्दा छ।

ईश्वरको माया विचित्र छ।

भरतमुनिले राज त्याग गरे, रानीहरूलाई त्यागे। सर्वस्व त्यागेर वनमा गए। वनमा एउटा मृगशावकसँग स्नेह भयो, आफ्नो मनमा त्यसलाई स्थान दिए। यसै आसक्तिको कारण उनको भजन-ध्यान आदि खण्डित भयो र उनलाई मृगयोनिमा जन्मनुपऱ्यो।

त्यसकारण आफ्ना घरमा जसलाई चाहे पनि राख तर मनमा चाहीँ कसैलाई वास नदेऊ। मनमा कसैलाई स्थान दियौ भने प्रभु-भजनमा त्यो बाधारूप हुनेछ।

जगत्‌मा कुनै पनि पदार्थसँग यति स्नेह नगर जसले गर्दा त्यो स्नेह तिम्रो प्रभु-भक्तिमा बाधा हुन जावोस्।

भरतमुनिका मनमा मृगशावकका निमित्त आसक्तिले जन्म लियो, त्यो उनका निमित्त पुनर्जन्मको पनि कारण बन्यो। सङ्कल्प ( वासना ) पुनर्जन्मको कारण बन्दछ।

मनमा अन्य कुनै वस्तुको प्रवेश भएपछि मनमोहन त्यहाँबाट फुत्त निस्कन्छन्।

श्रीरामकृष्ण भन्ने गर्थे संसारमा नाउजस्तो भएर बस्नुपर्छ। पानीमाथि नाउ उत्रिरहन्छ, तर यदि नाउभित्र पानी पऱ्यो भने तब त्यो डुब्छ। यस्तै प्रकारले संसारमा तिमी बस तर उसलाई आफ्ना मनभित्र बस्न नदेऊ अर्थात् निर्लेप भावले संसारमा बस। शरीर नाउ हो, संसार समुद्र हो र विषय जल हो।

विषयको चिन्तन गरिरहनाले आत्मशक्ति नष्ट हुन्छ।

ममता बन्धनकर्ता हो। मन मरेपछि मात्र मुक्ति प्राप्त हुन्छ। बन्धन मनको हुन्छ, आत्माको होइन। आत्मा मुक्त छ।

गृहत्यागको आवश्यकता छैन। गृहमा सावधान भएर बस्नुपर्छ।

प्रतिकूल परिस्थितिमा पनि प्रह्लाद घरमा बसेर उनको भक्तिमा कसैले बाधा पार्न सकेन। उता वनमा एकान्तमा पनि भरतजी मृगशावकमा आसक्त भएर भजन गर्न सकेनन्।

प्रतिकूल संयोगमा, प्रतिकूल वातावरणमा भजन कसरी गर्नुपर्छ यो कुरा प्रह्लादले जगत्लाई बताएका छन् र अनुकूल वातावरण भएर पनि मानिस सावधान भएन भने त्यसले भजन गर्न सक्दैन, यो कुरा हामी भरतको दृष्टान्तबाट बुझ्न सक्छौं।

घरमा भएका वस्तुहरू भजनमा बाधारूप होइनन् तर मनमा बसेका वस्तुहरू नै बाधारूप हुन्।

गृहत्यागी महात्माहरूलाई मायाले कस्तो प्रकारले सताउँछ, त्यो कुरा यस कथाले बताउँछ। भरतजीले सोच्नुभयो एकान्तमा बसेर म ईश्वरको आराधना गरूँला। उनी नेपालको गण्डकी नदीको किनारमा आए। त्यहाँ बसेर आदित्यनारायण भगवान्को आराधना गर्न थाले।

ईश्वरका सिवाय अन्य कसैको पनि सङ्ग भजनमा विक्षेप गर्ने छ। जसलाई तप गर्नुछ त्यसले एक्लै तप गरोस्। सदा यही सोच म एक्लो छैन, मेरा भगवान् पनि मेरा साथमा हुनुहुन्छ। ईश्वरका सिवाय अरूको सङ्ग गऱ्यौ भने दुःखी हुनेछौ।

भरतजी एक्लै तप गर्न भनी गएका थिए। गण्डकीको दोस्रो नाउँ हो शालिग्रामी। भरतजीको नित्य नियम थियो—चार बजे ब्रह्ममुहूर्तमा स्नान गर्ने। कम्मरसम्म पानीभित्र उभिएर सूर्यनारायणको ध्यान र गायत्रीमंत्रको जप गर्ने।

सूर्य नारायणको कृपाले बुद्धि उज्ज्वल हुन्छ, त्यसकारण उनको हामीले उपासना गर्नुपर्छ। सूर्यनारायणको उपकारका कारणले हामी उनका ऋणी छौं। उनले जगत्लाई सदा प्रकाश दान दिन्छन्। उनको उदय नभएमा जगत्मा प्रलय हुन्छ। समस्त स्थावरजङ्गमका आत्मा सूर्य हुन्। सूर्यनारायण सबैलाई प्रकाश दिन्छन्। तर उनले बिजुली कम्पनीले जस्तो बील पठाउँदैनन्। उनले शनिवारको छुट्टी पनि मनाउँदैनन्। जुन दिन उनले छुट्टी मनाउलान्, जगत्को प्रलय भइहाल्नेछ।

सूर्य परमात्माका साकार रूप हुन्।

मानिस र कागमा एक पटक झगड़ा परेछ। त्यस वेला कागले भनेछ—'तिमी ज्यादै बुद्धिमान् छौ, तर तिम्रोभन्दा एक गुणा बुद्धि बढ़ी ममा छ। म सूर्योदय अगावै निन्द्रा त्याग गर्दछु।'

सूर्योदय अगावै स्नानादि गरेर सूर्यनारायणलाई अर्घ्य देऊ। रात्रिको एघार बजेपछिको समयलाई राक्षसकाल भनिएको छ। यस निषिद्ध कालमा भोजन नगर्नू। आजकल मानिसहरू एघार बजे भोजन गर्छन्। यसो गर्नु ठीक होइन।

सूर्य-चन्द्र-समुद्र ईश्वरको मर्यादाको उल्लङ्घन गर्दैनन्। हे मानव, परमात्माको मर्यादाको पालन गर्नका निमित्त तिमीलाई सुख-समृद्धि दिएको छ।

भरतजी प्रार्थना गर्छन्—'मेरो मन, मेरो बुद्धि कहीं दुर्गामी नभइजाओस्। भगवान्‌को तेजोमय रूपको म चिन्तन गर्छु।'

अर्थ र ज्ञानका साथ जप गर।

शुकदेवजी वर्णन गर्नुहुन्छ—

'राजन्, भरत द्वारिकाधीशको मानसी सेवा गर्न थाले। प्रत्यक्ष सेवा उनले तर बहुतै गरेका थिए अब मानसी सेवा गर्नथाले।'

मानसी सेवा सरल छैन।

ज्यादाजसो पाप शरीरबाट होइन मनबाटै हुन्छ। त्यसकारण मानसी सेवा, मानसी ध्यान श्रेष्ठ छ। ईश्वरमा मनबाट तन्मय हुनु मानसी सेवा हो।

एकपटक एउटा बनियाँले गोसाईंजीकहाँ गएर भने—'महाराज ! म प्रभुसेवा गर्न चाहन्छु, तर एक पैसा पनि खर्च नभईकन हुने सेवा भए सो बाटो देखाउनुहोस्।'

तब गोसाईंजीले मानसी सेवाको मार्ग बताउँदै त्यस बनियाँलाई भने—'तिमीले मानसी सेवा विना खर्च गर्न सक्छौ। केवल मनले सङ्कल्प गर्दै रहनु म भगवान्‌लाई स्नान गराउँदै छु, पोशाक लगाइदिरहेछु, पूजा गरिरहेछु, भोग लगाइरहेछु, भोजन गर्दै हुनुहुन्छ इत्यादि।'

फेरि गोसाईंजीले उसलाई सोधे—'तिमीलाई भगवान्‌को कुनचाहिं स्वरूप ज्यादा मन पर्छ ?'

बनियाँले उत्तर दिए—'मलाई भगवान्‌को बालकृष्ण स्वरूप ज्यादा मन पर्छ।'

गोसाईंजीले भने—'प्रातःकालमा यस्तो भावना गर ठाकुरजीका निमित्त यमुना जल ल्याइरहेछु। घर आइपुगेपछि यस्तो भाव जगाऊ—ठाकुरजी नुहाइरहनुभएको छ। यशोदाजीको जस्तै भावना गर्दै बालस्वरूपको सेवा गर्नू। कालसेवामा वात्सल्यभाव मुख्य छ। सेवामा दूध र नौनी ल्याउनू। त्यसपछि कृष्णलाई मङ्गलगीत गाएर जागा गराऊ—'

जागो बंसी वाले ललना मोरे प्यारे॥
रजनी बीती भोर भयो है घर-घर खुले किवारे।
गोपी दही मथत सुनियत है कंगन के झनकारे॥
उठो लाल जी भोर भयो सुरनर ठाढ़े द्वारे।
ग्वाल बाल सब करत कुलाहल जय-जय सवद उचारे॥
माखन रोटी हाथ में लीन्हीं गउअन के रखवारे।

मीरा के प्रभु गिरधर नागर शरण आए कूँ तारे॥
जागो बंसी वाले ललना मोरे प्यारे॥

यशोदाजीले लालालाई फुल्याउँदै भन्थिन्—'यति नौनी खायो भने तिम्रो टुप्पी बलरामजी भन्दा पनि छिटै बढ्ने छ।'

तातो पानीले कालको माङ्गलिक स्नान गराउनु, फेरि ठाकुरजीको शृंगार गरिदिनु, कृष्णलाई सोध्नु आज कुनचाहीँ पीताम्बर लाउने हो ? कृष्णले जे भन्छन् त्यही लगाइदिनू। शृंगारमा तन्मयता भएपछि ब्रह्मानन्द जस्तो आनन्द प्राप्त हुन्छ।

कृष्णलाई नैवेद्य दिएर भावना गर भगवान् भोजन गरिरहनु भएको छ। फेरि आरती गरेर क्षमा प्रार्थना गर।

गोसाईंजीले भनेअनुसार बनियाँले श्रीकृष्णको बालस्वरूको मानसी सेवा गर्न थाल्यो। प्रतिदिन मानसी सेवा गर्थ्यो, यति तन्मय हुन थाल्यो सबै वस्तुहरू प्रत्यक्ष देखिन थाले। यस सेवामा मनको धारा टुट्नु हुन्न। कुनै लौकिक विचार आयो भने सम्झ सेवा खण्डित भयो। बाह्र वर्षसम्म उसले मानसी सेवा गऱ्यो।

एक दिन उसले दूध ल्यायो र त्यसमा चिनी हाल्यो, तर उसलाई लाग्यो कृष्णको दूधमा आज केही बढ्ता चिनी परेको छ। बनियाँ यो कसरी सहन सक्थ्यो ? स्वभाव सहज कृपणता कसरी मेटिन सक्छ ? प्राण र प्रकृति ( स्वभाव ) साथसाथै जाने हुन्। उसले सोच्यो 'चाहिए भन्दा बढी चिनी जो दूधमा परेको छ त्यो झिक्नु पऱ्यो, कहिले अरू कुनै काममा लाग्ला।' अब यहाँ न भाँडो छ, न दूध छ न चिनी नै थियो। किनभने उसले मानसी सेवा गर्दथ्यो। तैपनि तन्मयताले गर्दा यी सारा चीजहरू प्रत्यक्ष देखिन्थ्यो। अतः मनै मनको कल्पनामा त्यो चिनीलाई झिक्न खोजेको थियो।

कृष्णले सोचे जो होस् बनियाँले मेरो बाह्र वर्षसम्म सेवा गरेको छ, त्यस कारण उनलाई प्रकट हुने इच्छा भयो। बालकृष्ण प्रसन्न हुनुभएको थियो। उहाँले प्रकट भएर बनियाँको हात समातेर भन्नुभयो—'चिनी धेरै भएर के हुन्थ्यो ? तैंले एक पैसा पनि खर्च गरेको छैनस्।'

भागवत स्पर्श भएको हुनाले त्यो बनियाँ सच्चा वैष्णव भयो। ऊ भगवान्को अनन्य सेवक बनिहाल्यो।

बाह्र वर्षसम्म कुनै सत्कार्य नियमपूर्वक गरियो भने त्यसको फल अवश्य पाइन्छ। शङ्कराचार्य पनि श्रीकृष्णको मानसी सेवा गर्दथे।

भरतजी मानसी सेवा गर्दै तन्मय भएका छन्। सेवा गर्दा थाकेर ध्यान-कीर्तन गर्न थाले।

प्रभुका पछि जो लाग्छ त्यसलाई मात्र मायाले सताउँछे। सांसारिक विषयहरूमा जो फँसेको छ, त्यसलाई मायाले सताउँदिन किनभने माया भन्ठान्दछे यो मेरैै छ फेरि यसलाई अरू के गर्नु ?

जो व्यक्ति प्रभुका पछि लागेको छ त्यसलाई नै मायाले ज्यादै सताउँछे, तर जो मायाको प्रवाहमा बग्छ, उसलाई त्यो बाधा रूप हुँदिन। माया मान्दछे त्यो मेरो बन्दी हो।

मायाको गति बड़ो विचित्र छ।

कम्मरसम्मको पानीमा भरतजी उभिइरहेका थिए। ग्रीष्म ऋतु थियो। एउटी गर्भवती हरिणी प्रातःकालमा जल पिउन भनी आई। यत्तिकैमा कतैबाट सिंहले गर्जना गऱ्यो, जसले गर्दा त्यो हरिणी भयभीत भई। त्यसले सोची गण्डकी नदी तरिहालूँ। जोरसँग उफ्री। प्रसवकाल समीप थियो त्यसकारण हरिण बालकको जन्म भयो र त्यो नदीको जलमा खस्यो, पारिपट्टिको किनारमा हरिणीको मृत्यु भयो।

भरतजीले त्यस मृग बालकलाई नदीको जलमा तैरिरहेको देख्नुभयो, उहाँले यस बालकमा पनि श्रीहरिको दर्शन पाउनु भयो। उहाँ सोच्न थाल्नु भयो—यसकी आमाको मृत्यु भयो। जगत्मा यसको कोही रहेन। अब यसको लालन-पालन, रक्षा आदि कसले गर्ला? 'उहाँले दया लागेर त्यस बच्चालाई आफ्ना आश्रममा ल्याउनु भयो।'

उहाँ फेरि विचार गर्नुहुन्छ—'यो बालकले मसिवाय अरू कसैलाई चिन्दैन। यसको पालनपोषण गर्नु अब मेरो धर्म भयो। मैले यसको वास्ता गरिनँ भने यो मर्नेछ। मै यसको पिता हुँ र मै यसकी माता हुँ। यसको पालन-पोषण-रक्षा गर्नु मेरो कर्त्तव्य हो। मै यस मृगशावकको रक्षक पिता हुँ। त्यसकारण हरेक प्रकारले मैले रक्षा गर्नुपर्छ।'

जीव मान्दछ म अरूहरूको रक्षा गर्दछु। ए! तिमीले के रक्षा गरौला? तिमी पनि कालका ग्रास हौ! रक्षा गर्नेवाला उनै (प्रभु) हुन्। कर्ता-हर्ता श्रीहरि हुन्। पालक र संहारक पनि श्रीहरि हुन्। तिमी घरमा बस या वनमा तिम्रो रक्षा गर्ने श्रीहरि हुनुहुन्छ।

भागवतको सातौं स्कन्धको दोस्रो अध्यायको चालीसौं श्लोकमा यमराजले राजा सुयज्ञका सम्बन्धीहरूलाई यस्तो उपदेश दिएको थियो भनेर हिरण्यकशिपुले भनेको छ—

**पथिच्युतं तिष्ठति दिष्टरक्षितं गृहे स्थितं तद्विहतं विनश्यति।**
**जीवत्यनाथोऽपि तदीक्षितो वने गृहेऽपि गुप्तोऽस्य हतो न जीवति॥**

परमेश्वरको कृपा भयो भने जो अनाथ छ या वनवासी छ तापनि त्यो जीवित रहन्छ र परमेश्वरद्वारा मारिएको जीव घरमा सुरक्षित भएर पनि जीवित रहँदैन र मरिहाल्छ।

मृगशावकलाई पानीबाट बाहिर निकाल्ने धर्म भरतजीको थियो। उहाँले रक्षक पिता हुने जो नाता जोर्नुभयो त्यो राम्रो गर्नु भएन। जीवमात्रको रक्षक र पिता ईश्वर मात्र हुन्। सबै दोष अभिमानका कारणले उत्पन्न हुन्छ।

भरतजी त्यस मृगशावकको लालन-पालन गर्न थाल्नुभयो। विस्तार-विस्तार त्यो ठूलो हुन थाल्यो। भरतजी त्यसलाई काखमा राख्नुहुन्थ्यो र उसित खेल्नुहुन्थ्यो।

भरतजीले आफ्ना पूर्वावस्थामा शावकहरूको लालन-पालन गर्नुभएको थियो। पूर्वचित्ति अप्सरा त्यहाँ आइपुगी। पुराना संस्कारहरूलाई बिर्सनु बड़ो कठिन छ। सूक्ष्म संस्कार मनमा अझसम्म बनिरहेको थियो। त्यसकारण उनको मन त्यस हरिणको बच्चामा फँसिगयो अब उनको मन प्रभुभजनमा स्थिर हुन पाउँदैन थियो। ध्यानमा हर पाँच-दस पलमा त्यो बच्चा देखिइन थाल्यो। वासनाको विषय बदलियो तर वासना मनमा रहिहाल्यो। यस हालतमा यसको अपेक्षा गृहजीवनमा के खराबी थियो ? ज्ञानीलाई मन पनि मार्नुपर्छ।

भरतजीले मृगशावकलाई घरमा राख्नुभयो त्यो ठीकै भयो तर त्यसलाई जो मनमा राख्नुभयो त्यो ठीक गर्नु भएन।

संसारलाई छोड़ेर कहाँ जान्छौ ? जहाँ पनि जाऊ संसार त्यहीँ हाजिर हुनेछ। यसै कारणले महापुरुषले भनेका छन् 'संसारलाई आफ्नो मनबाट बिस्तार-बिस्तार हटाइदेऊ। संसारलाई मनमा कहिल्यै नराख। कसैलाई घरमा मन लागे राख, तर मनमा नराख। मनमा कामलाई राख या फेरि ईश्वरलाई, दुवै साथसाथै बस्न पाउँदैनन्।' भनेको पनि छ—

तुलसी दोनों नहीं रहे, रवि रजनी इकठाम।

भजन र भक्तिमा बाह्यसंसार होइन, अन्तर संसार मात्र बाधारूप छ।

त्यो मृगशावक भरतजीको कुटीमा मात्र होइन मनमा पनि बसिदियो। उहाँले घर, राज्य, पत्नी, सन्तान आदि सबै त्यागगर्नु भयो ठीकै हो तर अन्तमा उहाँ त्यस बच्चाको मायामा फँस्नुभयो।

परोपकारको भावना नै अतिसाधकका निमित्त उसको साधनामा बाधक हुन्छ। परोपकारको भुँवरीमा धेरै नफँस। परोपकार गर्नु सबैको धर्म हो, तर परोपकार यसरी नगर्नु जसले प्रभुको विस्मरण हुन जाओस्। संसारमा मानिस कप्टी नबनून् तर अतिसरल पनि नहोऊन्। परमात्माको ध्यान कदाचित् हुन सकेन भने केही कुरा भएन, तर मित्र कुनै पनि समस्या शत्रु बन्न सक्दछ।

भरतजीको प्रारब्ध हिरण्यबालकको रूपमा अगाड़ि देखा पऱ्यो। प्रारब्धलाई तर सामना गर्नै पर्छ। ज्ञान भएपछि वासना नष्ट हुन सकेन भने ज्ञान दृढ़ हुन सक्दैन। ज्ञानलाई दृढ़ गर्नका निमित्त प्रथम वासनालाई नष्ट गर्नु आवश्यक छ। वासनामा मन फँसेको छ। भरतजी महाज्ञानी हुनुहुन्छ। तर ज्ञान भएपछि पनि यदि मन वशमा भएन भने ज्ञान स्थिर ( स्थायी ) हुन सक्दैन। जबसम्म ज्ञानीले मन र वासनाको नाश गर्न सक्दैन तबसम्म उसको भक्ति र ध्यानमा स्थिरता आउन सक्दैन। वासनाका वेगमा कति पटक ज्ञान बगेर जान्छ। जसले वैराग्यका विना घरत्याग गर्छ त्यसले वनमा पनि नयाँ संसार बसाउँछ। भरतजी ज्ञानी हुनुहुन्छ तर वासनालाई अंकुश लाउन सक्नुभएन। घरमा बसेर वैराग्यको पूर्णतः प्राप्तिका पश्चात् गृहत्याग गर।

ज्ञानीका दुइ प्रकार छन्। जसले धेरै उपासना गरेको छ त्यो कृतोपास्ति ज्ञानी हो। त्यसलाई मायाले सताउँदिन। तर जो अकृतोपास्ति ज्ञानी छ, उसका निमित्त माया विघ्नकर्ता हुन्छ। वासनाको नाशविना तत्त्वानुभव हुँदैन। वासनाको नाश नभईकन तत्त्वज्ञानको प्राप्ति भए पनि ब्रह्मनिष्ठा हुँदैन। भरतको चरित्र यसको दृष्टान्त हो।

भरतजीलाई अहिलेसम्म अपरोक्ष साक्षात्कार भएको थिएन। यदि यो साक्षात्कार भएको भए उनको मन हिरण्यशावकमा फँस्ने थिएन।

भरतजी अब दिन पर दिन त्यस बच्चाको लालनपालनमा व्यस्त रहन लाग्नुभयो। परिणामतः सन्ध्या-पूजा आदि नित्यकर्म छुट्न थाल्यो। भरतजी त्यसलाई हरियो-कमलो घाँस खुवाउनुहुन्थ्यो। त्यो उफ्रन्थ्यो या मुनिको आङ चाट्थ्यो तब भरतजी सोच्नु हुन्थ्यो—'वाह, कति सुन्दर र लायक छ यो !'

दिन-प्रतिदिन यो आसक्ति बढ्दै गयो। एक दिन त्यो बच्चा कुद्दै खेल्दै घना जङ्गलमा गयो, रात पऱ्यो र पनि फर्केर आएन, मुनिलाई चिन्ता हुनथाल्यो मेरो बच्चालाई के भयो होला ? कहिले फर्केला ?

काललाई कसैमाथि दया आउँदैन। काल सदा-सर्वदा सावधान रहन्छ।

**न हि प्रतीक्षते मृत्युः कृतम् अस्य न वा कृतम्।**

मृत्युले कहिल्यै यो सोच्दैन यसले आफ्नो काम सकेको छ वा छैन। त्यसकारण प्रतिक्षण सावधान होऊ। मृत्युका निमित्त सदा तयार रहू। जीवन यसरी जिउनुपर्छ तिमी सावधान होऊ र मृत्यु जाओस्। कहीं यस्तो नहोस् तिम्रो तयारी नहोस् र तिमीलाई मृत्युले उठाएर लैजाओस्।

भरतजीलाई समाप्त काल आयो। भरतजीलाई मृगशावकको स्मरण भयो। उनले श्रीहरिको होइन मृगशावकको चिन्तन गर्दै देहत्याग गरे। यस मृगशावकको लालन-पालन गर्नाले भरतजीलाई आत्मस्वरूपको विस्मरण भयो। मृत्युका समयमा मृगशावकको चिन्तन गर्दै रहनाले उनलाई आगामी जन्ममा मृगकै शरीर मिल्यो।

मनुष्यले आगामी जन्मको अर्थात् पुनर्जन्मको तयारी आफ्नो यसै जन्ममा गर्दछ। यस जन्ममा बीउ पाइन्छ तर फल पाईंदैन। पूर्वजन्ममा गरेको तप निष्फल हुँदैन। पूर्वजन्ममा गरेको भजन व्यर्थ हुँदैन। भरतजीलाई मृग शरीरवाला जन्ममा पनि पूर्वजन्मको ज्ञान थियो।

पशु-पंक्षीको अनादर कहिल्यै नगर्नु। हुनसक्छ कुनै कारणवश कोही साधु-महात्मा पशु-पंक्षी बनेर आएका भए नि ? अहिल्या जस्ती कोही महासती पत्थर बनेर आएकी भए नि। नृग राजा छेपारो भएर आएका थिए र नल-कुबर वृक्ष भएर आएका थिए। कोही सिद्ध पुरुष वृक्ष भएर आएका भए नि। कुनै आत्माबाट केही अपराध भएमा त्यसले पशु-पंक्षीको योनिमा भ्रमण गर्दछ।

भरतजी मृगको स्वरूपमा घुमिरहनु भएको छ। उहाँलाई पूर्वजन्मको ज्ञान छ। म यसै गण्डकी नदीको किनारमा तपश्चर्या गर्थें भनेर सोचिरहनु भएको छ। यसै ठाउँमा मैले हरिणको बच्चालाई

उठाएको थिएँ र त्यसलाई आश्रममा लगेको थिएँ। त्यसप्रति ज्यादै आसक्ति हुनाकारणले मलाई मृगयोनिमा जन्म लिनुपर्‍यो। म कुनैबेला महाज्ञानी थिएँ, योगी थिएँ तर आज चारखुट्टे पशु बनेको छु। अब मलाई नयाँ प्रारब्ध कमाउनु छैन। जो मैले साथमा ल्याएको छु त्यसैलाई सहनु या भोग्नु छ।

यो मृग शावक ( भरतजी ) नदीमा स्नान गर्छ, वृक्षहरूका सुकेका पात खान्छ। यो घाँस खाँदैन, किनभने त्यसमाथि जन्तु हुन्छन्। हिंसा भएपछि नयाँ प्रारब्ध आइलाग्छ। यस मृगदेहमा पनि उनी एकादशीको व्रत गर्थे। प्राचीनकालमा भारतमा पशु पनि एकादशी व्रत गर्थे। आजकल कतिले एकादशी व्रत गर्दैनन्।

फेरि भरतजीले मृगदेह पनि त्याग गरे र एक ब्राह्मणको घरमा जन्म लिए।

मानव जीवन अतिशय विलासी भएएको छ। प्रजामा संयम, सदाचार, भगवद्‌भक्ति बढ़ेपछि नै सन्तहरूको जन्म हुन्छ। विलासी मातापिताका घरमा सन्तहरूको जन्म हुँदैन। सन्त जन्म लिनका निमित्त सुपात्र खोज्दछन्।

पवित्र ब्राह्मणको घरमा भरतजीको जन्म भयो। भरतजीको यो अन्तिम जन्म थियो। उहाँलाई पूर्वजन्मको ज्ञान छ हरिणको मायामा फँस्नाको कारणले उनलाई पशुदेह धारण गर्नुपरेको थियो। पूर्वजन्ममा हरिणसँग कुरा गर्थे, त्यसकारण पशु हुनुपर्‍यो। अब यस जन्ममा कसैसँग पनि बोल्ने छैन। एकपटक भूल भइहाल्यो। अब म बड़ो सावधान रहनेछु।

सानैदेखि भरतजी भक्तिको रङ्गमा रङ्गिएका छन्।

शास्त्रले अन्तिम जन्मका केही लक्षण बताएका छन्। बाल्यावस्थादेखि जसलाई भक्तिको रङ्ग चढ्यो तब संझ उसको त्यो अन्तिम जन्म हो। जसको बुद्धिले काम छोड़ेको होस्, उसको पनि त्यो अन्तिम जन्म हो। जबसम्म बुद्धिमा काम हुन्छ तबसम्म मानिलेऊ उसलाई अहिले जन्म लिन बाँकी छ। प्रत्येक वस्तुमा जसले भगवद्‌दर्शन गर्दछ, उसको त्यो जन्म अन्तिम हो। जहाँ पनि दृष्टि जान्छ त्यहाँ सबैलाई भगवान्‌कै दृष्टिगोचर हुन्छ त्यसका त्यो जन्म अन्तिम हो। हृदयको दीन र अभिमानरहित व्यक्तिको पनि त्यो जन्म अन्तिम जन्म हुने छ।

जड़भरतजीको यो अन्तिम जन्म थियो। साधारण व्यक्ति ( जीव ) वासनाको अधीन भएर संसारमा आउँछ तब सन्तचाहिं भगवद्-इच्छाद्वारा भगवत् कार्यका निमित्त संसारमा आउँछन्।

परमन र परधनलाई आकर्षित गर्ने व्यक्ति संसारका दृष्टिमा चतुर हुन्छ तर यो कला एक सामान्य स्त्रीलाई पनि सजिलो कुरा हो। सांसारिक दृष्टिमा फँसेको व्यक्ति साँच्चै जड़ हुन्छ। प्रभुप्रेममा मस्त, देहभानबाट अज्ञात महापुरुषलाई जड़ कसरी भन्ने? तर संसारको विपरीत मान्यताको कारण सांसारिक मानिसहरूले भरतजीको नाउँ जड़भरत राखिदिए।

मानिसहरूले भरतजीलाई मूर्ख मान्दछन्। भरतजी सोच्नुहुन्छ 'मानिसले मलाई मूर्ख माने यसमा के खराबी भयो? पूर्वजन्ममा ज्ञानको प्रदर्शन गर्न गएँ तब दुःखी भएँ। ज्ञान अरूहरूलाई उपदेश दिनका निमित्त होइन, ईश्वरको आराधना गर्नका निमित्त हो।'

ज्ञान भोगका निमित्त होइन, भगवान्‌का निमित्त हो।

शङ्कराचार्यजीले भनेको छ—

विदुषाम् यच्च वैदुष्यं मुक्तये न तु भुक्तये।

ज्ञान, धनमा प्रतिष्ठा कमाउनका निमित्त होइन, परमात्माको प्राप्तिका निमित्त हो। ज्ञानको फल धन र प्रतिष्ठा होइन, परमेश्वर हो। ज्ञान परमात्माका साथ एक हुनलाई हो।

जड़भरतले सोचे पूर्व जन्ममा पशुका साथ बोलचाल गरेर बिताएँ र यस जन्ममा मलाई पशुको अवतार मिल्यो। त्यसकारण यस जन्ममा कसैसँग पनि म कुरा गर्नेछैन। अब यदि कसैसँग कुरा गर्नु परेछ भने प्रभुका साथ मात्र गर्नेछु।

वाणी र पानीको दुरुपयोग गर्ने मानिस ईश्वरको अपराधी हो। अन्तःकालमा वाणीले उसलाई विश्वासघात गर्छ।

मीराबाईले पनि निश्चय गरेकी थिइन् कुरा गर्नुपरेछ भने पनि केवल आफ्ना गिरिधर गोपाल श्रीकृष्णका साथ मात्र। म आफ्ना गिरिधर गोपाललाई मात्र रिझाउँछु। संसारका मानिसहरू र नातागोताहरूलाई रिझाएर के लाभ छ?

राम नाम मेरे मन बसियो,
राम रसियो रिझाउँ रे माय॥

जड़भरत कसैसँग पनि बोल्नु हुन्नथ्यो।

अति बोल्नाले स्नेह उत्पन्न हुन्छ। त्यसो तर यस सृष्टिमा ईश्वरले एक-एक कामका निमित्त दुइ-दुइ इन्द्रिय दिनुभएको छ। एउटा आँखाले पनि हेर्न सकिन्छ र पनि दुइ आँखा दिएको छ। तर एउटै जिब्राले दुइ काम गर्नु परेको छ—बोल्ने र खाने। त्यसकारण जिब्रोमाथि ज्यादा नियन्त्रणको आवश्यकता छ।

अरूहरूका साथ कुरा गर्नाले, प्रेम गर्नाले वासना उत्पन्न हुन्छ। वैर र वासनाले नयाँ प्रारब्ध उत्पन्न हुन्छ र अर्को पटक पनि जन्मनुपर्छ।

जड़भरत हर किसिमबाट अंकुश राख्छन्। तिमीले स्वयं आफूमाथि अंकुश राख्नुपर्छ। तिम्रो मनलाई अरू कसले नियन्त्रण गर्ला?

रामदास स्वामीले भन्नुभएको छ 'अतिशय घुमघाम गर्नाले शान्ति पाईंदैन।'

जड़भरतका पिताले पढ़ाउन थाल्नुभयो र विचार गर्नुभयो 'मेरो छोरा लेखपढ़ गरेर पण्डित होला' तर उनको पाण्डित्य अनौठो थियो। उनको पाण्डित्य साँचो थियो। साँच्चैको पण्डित्याईं कुनचाहिँ हो ?

परमन परधन हरन कू, वेश्या बड़ी प्रवीन।
तुलसी सोई चतुरता, रामचरन लवलीन॥

भरतजी त्यसो तर सबै कुरा जान्नु हुन्थ्यो र पनि मन्त्रोच्चारण राम्रो किसिमले नगर्ने। उहाँ आफ्नो ज्ञान प्रसिद्ध होस् भन्न चाहनुहुन्नथ्यो।

जड़भरतजी भगवान्को स्मरणमै लीन रहनुहुन्थ्यो। ज्ञान र भक्तिको परिपक्व भएपछि जीव संसार-वृक्षबाट त्यस्तै किसिमले अलग्ग हुन सक्छ जस्तो किसिमले पाकेपछि फल आफैं वृक्षबाट अलग्ग भएर झर्दछ।

आमाबाबुले शरीर त्याग गरेपछि जड़भरतजी पागल जस्तो घुम्न थाल्नुभयो। पागल जस्तो त लाग्ने, तर एक क्षण पनि श्रीकृष्णलाई बिर्संदैनथे।

जड़भरतजीले भोजन कसरी गर्नुपर्छ भनी सिकाउनुभएको छ।

स्वाद नखोजी केवल शरीरको पोषण हेतु भोजन गर्नुपर्छ। जड़भरतका दाजुहरू उनलाई तिलको पीना, ढुटो, चोकर, फोहोर, सड़े-गलेको दाल आदि खान दिन्थे। तर ती वस्तुहरूलाई पनि अमृततुल्य मानेर उहाँ खानुहुन्थ्यो।

कसरी हिँड्नुपर्छ भनी भरतजीले बताउनुभएको छ। कुनै पनि जीवको हिंसा नहोस्। यस्तो विचार गरेर बाटामा हेरेर हिँड्नुहुन्थ्यो, पृथ्वीमा दृष्टि दिएर हिँड्नुपर्छ। हरदम सोच कहीं मबाट कुनै जीवको हिंसा हुन्छ कि ?

भरतजी अरूहरूको काम पनि गरिदिनु हुन्थ्यो। भाइहरूले उहाँलाई खेतको चारैतर्फ आली लाउनु भनेर पठाए। भरतजीले सोच्नुभयो म आज यो काम गरुँला तब भोलि अर्को काम दिने होलान्। त्यसकारण उहाँले आली लाउनुको साटो त्यस ठाउँमा खाड़ल बनाउनुभयो।

एक दिन दाइले खेतको यादविचार गर भने तब भरतजीले गाईहरूलाई खेतमा चर्न छोड़िदिनु भयो। भरतजी गाईहरूलाई रोक्नु हुन्नथ्यो। उहाँ भन्नुहुन्थ्यो—

खानेवाला राम खिलानेवाला राम
तो रोकनेका क्या काम ?

जगत्का समक्ष मानौं उहाँ नाटक गरिरहनुभएको छ म आफू पागल हुँ। ज्ञानी पुरुषहरूको ध्यानमा लोकसंग्रह बाधा रूप छ। सांसारिक व्यवहारको कहीं माया नलागोस् भन्ने हेतुले परमात्मा नारायणको आराधना गर्दै एकदिन खेतमा बसिरहनु भएको थियो।

एउटा भिल्ल राजा निःसन्तान थिए। उनले भाकल गरेका दिए—'सन्तान भयो भने भद्रकालीलाई नरबलीको भेटी चढ़ाउने छु।' पुत्र जन्मियो। कुनै नरलाई ल्याऊ भनेर राजाले आज्ञा दिए। राजाका नोकरहरूले जड़भरतलाई त्यस खेतमा देखे। उनीहरूले विचार गरे—'यो निकै मोटोघाटो छ। यसैलाई हामी समातेर लैजाऊँ।'

संसारका मानिसहरूका दृष्टिमा सन्त पागल हो र सन्तहरूको दृष्टिमा संसारसुखमा फँसेका मानिस पागल हुन्।

ती भिल्ल राजसेवकले पनि भरतजीलाई पागलै माने। उनीहरूले उहाँलाई समातेर भद्रकालीको मन्दिरमा ल्याए।

माताजीलाई बलिदान देऊ तर कुनै जीवको होइन। काम, क्रोध, लोभ आदि दुर्गुण पशु हुन्। उनीहरूकै बलिदान देऊ। देवी भागवतमा बलिदानको अर्थ यही बताइएको छ।

भरतजीलाई नुहाइदिए, फूलको माला लाइदिए र भोजनका असल पकवान पनि दिइयो।

भोजन गर्नु पाप होइन, तर स्वाद लिएर भोजन गर्नु पाप हो।

भोजन साधन हो र भजन साध्य हो।

भरतजी भोजन गर्नुहुन्थ्यो, तर उहाँको भोजन भजनका निमित्त थियो।

भिल्ल सोच्दछन्—'दुइ घण्टापछि यो मर्नेछ र पनि बड़ो आनन्दसाथ भोजन गरिरहेछ।'

यसपछि भरतजीलाई मन्दिरभित्र लिएर गए।

सन्तको परीक्षा उनको मनोवृत्तिको आधारमा हुनसक्छ, दाह्री जटाबाट हुँदैन। जड़भरतजीले माताजीलाई मनमनै प्रणाम गरेर शिर नुहाई शान्त चित्तले बस्नुभो। भिल्ल राजाले भद्रकालीको प्रार्थना गरेर तरवार लिई बलिदान दिनका निमित्त तयार भए।

सबैप्रति समभाव सिद्ध गर्न खोज्ने भरतलाई देखेर माताजीको हृदय मनभरी भयो। माताबाट यो दृश्य देखिनसक्नु भयो। भद्रकाली मूर्ति फोरेर प्रकट भइन् र भिल्ल राजाको तरवार लिएर उसैको मस्तक काटिदिइन् तथा टाउकोको भकुण्डो बनाएर खेल्न थालिन्।

ज्ञानी भक्त मान्दछ सहस्त्रबाहु भगवान् उसको रक्षाका निमित्त खड़ा छन्। दुइ हातवाला मनुष्यले के गर्न सक्ला ? ज्ञानी भक्त माताजीलाई बहुतै प्यारा हुन्छन्। ज्ञानी पुरुष आफ्नो मनलाई एक क्षणका निमित्त पनि ईश्वरबाट अलग हुन दिँदैनन्। उनको दृष्टि ब्रह्ममय हुन्छ।

कुनै एक समयमा सिन्धु देशका राजा रहुगण कपिलमुनिकहाँ ब्रह्मज्ञान प्राप्त गर्न भनी हिंड़े। तत्त्व ज्ञानको विद्या प्राप्त गर्नका निमित्त उनी पालकीमा चढ़ेर कपिल मुनिका आश्रमतर्फ जान थाले। पालकी उठाएर हिंड्ने सेवकमध्ये एउटा भागेर कता हिंड़िदिएछ। अनि राजाले भने—'जो पाइन्छ एउटा समातेर ल्याऊ।'

वैष्णवजन भगवद्-इच्छाले बाँच्दछन्। ज्ञानी प्रारब्ध-कर्म भोग्नका निमित्त जीउँछन्। ज्ञानीजन अनिच्छाले प्रारब्धलाई हेर्दछन् तर वैष्णवजन यसमा भगवद्-इच्छाले दर्शन गर्छन्।

साधकलाई स्पष्ट आज्ञा छ चार हातभन्दा अगाड़ि दृष्टि नजाओस्। दृष्टिको चञ्चलताले मन पनि चञ्चल हुन्छ।

राजाका सेवकले पालकी उठाउनका निमित्त जड़भरतलाई समातेर ल्याए, किनभने यिनी मोटाघाटा र बलिया थिए र काम पनि लाग्ने भए। उनले पालकी उठाए। आजसम्म जो पालकीमा बसेका थिए उनी आज पालकी उठाइरहेछन्। यही उनको प्रारब्ध थियो। प्रारब्ध भोग्नैपर्छ। अन्तिम जन्म भए पनि पाल्की उठाउनु परिरहेछ। भरतजी तलतिर हेरेर हिँड़िरहनु भएको छ कहीं आफूबाट कुनै जीवको हत्या हुन नजाओस्। उहाँले प्रत्येक जीवमा भगवान्को दर्शन पाउनुहुन्छ।

भरतजी सोच्नुहुन्छ 'अब मेरो केही प्रारब्ध बाँकी रहेको छ। मर्ने तर मेरो शरीरमात्र हो। म नारायणसँग मिलिहाल्नेछु। मलाई सावधान हुनुपरेको छ।'

असावधान हुनाले नै काम, क्रोध, लोभ आदि शिरमा आइलाग्छन्। निर्भय बन। निर्भयता त्यसैवेला आउँछ जब जीव परमात्माको सान्निध्यको सदा अनुभव गर्छ।

भरतजी बाटामा पनि प्रभुलाई रिझाउँदै हिँड्नुहुन्छ।

मनलाई शुद्ध गर्नका निमित्त भरतजीको आतुरता बढ़ाइदिएर भगवान् अदृश्य हुनुभयो। भगवान्को दर्शन भएमा भरतजी व्याकुल हुनुहुन्छ र रुन थाल्नु हुन्छ। 'संसारमा अल्मलिनु छैन। नाथ, मलाई कहिले शरणमा लिनुहोला ? मेरो प्रारब्ध कहिले समाप्त होला ? अझ पनि मलाई परमात्माको दर्शन किन हुँदैन।' यिनै विचार गरेर उहाँ रुनुहुन्थ्यो।

बाटामा कमिलो देखियो भने भरतजी उफ्रिदिनुहुन्थ्यो। यसो गर्नाले पाल्कीको माथिल्लो भागसँग राजाको शिर जुध्न पुग्यो। राजाले सेवकहरूलाई भने 'अलि राम्ररी हिँड़, मलाई अप्ठ्यारो भइरहेछ।' ती तीन सेवकहरूले भने—'हामीहरू ठीक किसिमले हिँड्ने थियौं तर यो नयाँ सेवक ठीक किसिमले हिँड्दैन। कहिले रोकिन्छ, कहिले दुगुर्छ, कहिले उफ्रन्छ, कहिले हाँस्छ, कहिले रुन्छ यो पागलजस्तो छ। यसैले दुःख दिइरहेछ।' राजाले जड़भरतलाई व्यंग्य गरेर भने—'तँ एकदम दुब्लो-पातलो छस्। तेरा अङ्ग पनि कति दुब्ला-पातला छन् ? त्यसकारण तँ कसरी ठीकसँग हिँड्न सक्लास् ?'

रहुगणले सोचे 'अब म भरतजीउपर नजर राख्नेछु।' भरतजी सोच्नुहुन्छ 'बाटामा कुनै जीव कुल्चियो भने पाप लाग्नेछ।' भरतजीले कमिलामा पनि कृष्णलाई देख्नु हुन्छ। कृष्ण कुनै एउटै घेराभित्र छैनन्। सबैमा कृष्णको दर्शन गरोस् त्यही वैष्णव हो।

जड़भरतले राजाको भनाइमा ध्यान दिनुभएन। कमिलालाई देखेर भरतजीले उफ्रिदिँदा राजाको शिर पाल्कीको उपल्लो डण्डीसँग फेरि ठोक्कियो। राजाले यो सहन सकेनन्। उनी रिसाएर जड़भरतको अपमान गर्न थाले—'अरे तँ बाँची-बाँचीकन मरेतुल्य छस्। तँलाई ध्यान छैन। राम्ररी हिँड्।'

खरानीमा दबेको आगो जस्ता प्रकारले देखिँदैन त्यस्तै प्रकारले ब्रह्मचिन्तनमा लीन ज्ञानी चिनिन सकिँदैनन्।

एक पटक फेरि राजाको शिर ठोक्कियो तब रिसाए। उनले भने—'म रहुगण राजा हुँ। तँलाई दण्ड दिनेछु।'

राजासँग न एक पैसा लिएको छु, न उसको केही खाएको छु तैपनि ऊ पिट्न तयार भयो। उनलाई पिट्न राजालाई के अधिकार? राजा अभिमानी थिए। ती मदान्ध भए।

केही बोल्ने इच्छा भरतजीलाई भएन। उहाँले सोच्नु भयो शरीर मोटो हुनु र दुब्लाउनु पनि शरीरको धर्म हो। आत्मालाई केही हुने होइन। यो राजा मैरै शरीरसँग कुरा गरिरहेछ। त्यसकारण यसका साथ बोल्नुपर्ने आवश्कता छैन, म मौन रहन्छु।

भरतजी फेरि सोच्न थाल्नुभयो—'मेरो अपमानको केही पनि महत्त्व छैन, तर जसलाई मैले उठाइरहेछु त्यो रहुगण राजा नरकवासी भयो भने पृथ्वीबाट सत्सङ्गको महिमा नष्ट हुनेछ। मानिसहरूले भन्लान् महाज्ञानी जड़भरतजीले जसलाई काँधमा उठाए त्यो पनि नरकवासी भयो। जगत्मा सत्सङ्गको बड़ो महिमा छ। जेहोस् राजालाई मैले काँधमा राखेको छु भने म उसको उद्धार गर्छु। उहाँले राजालाई उपदेश दिने निश्चय गर्नुभयो। सत्सङ्गको महिमालाई कायम राख्नका निमित्त आज जड़भरतले बोल्न चाहनुभयो। आजसम्म उहाँ मौन बन्नुभएको थियो राजाका निमित्त।'

उहाँलाई दया आयो।

राजाको कल्याण होस्। कपिलमुनिको आश्रममा तत्त्वज्ञानको उपदेश प्राप्त गर्न गइरहेछन्। उपदेश लिनका निमित्त दीन भएर, नम्र भएर जानुपर्छ, तर यी राजा अहंभाव साथमा लिएर गइरहेछन्। उनले अभिमान लिएर गए भने ऋषिले उनलाई विद्या दिनेछैनन्। आजदेखि उनलाई अधिकारी बनाउने छु।

रहुगण राजा भाग्यशाली छन्।

भागवतका सन्त मितभाषी हुन्छन्। सुदामा पनि बहुत कम बोल्थे। मौन रहनाले मायाको बन्धन काटिन्छ।

मजस्तो सन्तको अभिमान म सहिलिन्छु, तर परमात्मा सहन गर्नुहुने छैन। उहाँले यसलाई दण्ड दिनुहुनेछ। यो सोचेर भरतजीलाई बोल्ने इच्छा भयो। राजाको कल्याण गर्ने इच्छा उनको भयो।

बोल्नु यस्तो बोल्नु जसमा सुन्नेको कल्याण होस्।

भरतजी भन्न थाल्नुभयो—'हे राजन्! यो सत्य हो म पुष्ट छैन। तर तिम्रो कथनले न मेरो निन्दा भयो न खिसी। मोटोपन र दुबलोपन त शरीरको धर्म हो। यसबाट आत्माको कुनै सम्बन्ध छैन।'

'हे राजन्! म जिउँदै पनि मरेको छु, यस्तो जो तिमीले भन्यौ, त्यो पनि सत्य हो, किनभने सारा जगत्नै बाँचे पनि मरेजस्तै हुन्छ। यो पालकी पनि भरिएको छ र त्यसमा बसेका तिमी पनि बाँचेर पनि मरेतुल्य छौ।'

'सबै विकारी वस्तुको आदि र अन्त अवश्य हुन्छ, जो जन्मेका छन् ती सबैलाई मर्नुछ। राजन् ! तिमी पनि मरेतुल्य छौ, यो शरीर मुर्दासमान छ।'

'आत्मा र शरीरको धर्म भिन्न छ। आत्मा निर्लेप छ। आत्मा मनको द्रष्टा हो, साक्षी हो। ज्ञानी पुरुष ईश्वरका सिवाय अन्य कुनै वस्तु या व्यक्तिलाई सत्य मान्दैनन्। सबै जीवहरूमा परमात्मा विद्यमान छन्, त्यस कारण यिनमा राजा को हो र को सेवक।'

'व्यावहारिक दृष्टिबाट यी भेद छन्, अन्यथा तात्त्विक दृष्टिबाट 'म' र 'तिमी' भनेको एउटै हौं।'

'राजन्, केवल ईश्वर नै सत्य छ। तिमीले जो मलाई भन्यौ म तँलाई पिट्छु भनेर, भन त मेरो चाल त्यति गरेर बदलिन्छ ? शरीरले पिटाइ खाएर पनि म सुखी या दुःखी हुन्न। यी सब शरीरका धर्म हुन्। शरीरलाई शक्ति दिन्छ मनले, मनलाई शक्ति दिन्छ बुद्धिले। बुद्धिलाई चेतना दिन्छ आत्माले अर्थात् ''म'' शरीरको धर्मले मलाई प्रभावित गर्न सक्दैन।'

'राजन्, म यसप्रकार यसका निमित्त हिँड़िरहेछु कमिला आदि मेरा गोड़ामुनि आएर कहीं नकुल्चिऊन्। हिँड्दा-हिँड्दै कहीं मबाट पाप नभैजाओस्। यस्तो सोचेर म उफ्रेर हिँड्छु। मेरा श्रीकृष्ण सबै ठाउँमा विराजमान् हुनुहुन्छ। यी कमिलाहरूमा पनि परमात्मा हुनुहुन्छ। म कमिलाहरू र अन्य जन्तुहरूको ख्याल गरी हिँड्छु कहीं यिनीहरू नकुल्चिऊन्। कमिलामा पनि ईश्वर छन् यस्तो संझेर म आफ्नो कृष्णाको चिन्तन गर्दै हिँड्दछु, त्यसकारण मेरो चाल यस्तै हुनेछ।'

जड़भरतको यस्तो विद्वतापूर्ण वचन सुनेर राजाले विचार गरे—'होइन, होइन, यो बहुला होइन, यी कुनै परमहंस हुन्। यी कुनै ज्ञानी महात्मा हुन्। यी कुनै अवधूत सन्तजस्तो लाग्छ। वेदान्तको कठिन सिद्धान्त भनिरहेछन्। यिनको ब्रह्मनिष्ठा अलौकिक छ। मैले यिनको अपमान गरेर बड़ो हानि गरिदिएँ।' यो सोचेर हिँडिरहेको पालकीबाट राजा हाम्फाले। जो मार्न भनी तयार भएका थिए, उनै राजा अहिले वन्दना गरिरहेका थिए।

भरतजी निर्विकारी हुनुहुन्छ, रहुगणद्वारा अपमानित भएर पनि र सम्मानित भएर पनि अर्थात् दुवै अवस्थाहरूमा उहाँको समस्थिति थियो। न क्रोध, न दुःख, न सुख। सन्तको परीक्षा उसको मनोवृत्तिद्वारा हुन्छ, वस्त्रहरूद्वारा हुँदैन। सम्मान या अपमान भएर पनि त्यही समता, मानापमानमा सन्तको वृत्ति सम नै रहन्छ।

वंशद्वारा सन्त हुनु सरल छ, हृदयद्वारा सन्त हुनु बड़ो कठिन छ।

रहुगणले क्षमा मागे। उनले भने—'तपाईंको अपमान गर्नेलाई कल्याण कहिले पनि हुनेछैन।'

राजा रहुगणले सोधे—'यो सांसारिक व्यवहार सत्य छ, यसलाई हामीले झूठो कसरी भन्ने ? यदि वस्तु असत्य छ भने त्यसबाट कुनै पनि काम हुनसक्ने भएन। जस्ता प्रकारबाट मिथ्या घटद्वारा पानी ल्याउन सकिँदैन।'

फेरि राजाले सोधे—'तपाईंले भन्नुभयो शरीरलाई जो दुःख हुन्छ त्यो आत्मालाई हुँदैन। तर म शरीरलाई कष्ट भएपछि आत्मालाई पनि कष्ट हुन्छ भन्ने मान्दछु। यसको कारण यो हो यस शरीरको सम्बन्ध इन्द्रियहरूका साथ छ। इन्द्रियहरूको सम्बन्ध मनका साथ छ, मनको सम्बन्ध बुद्धिका साथ छ र बुद्धिको सम्बन्ध आत्माका साथ छ। त्यसकारण जो दुःख शरीरलाई हुन्छ त्यो आत्मालाई पनि हुन्छ। चूह्लोमाथि भाँड़ो र भाँड़ोमा दूध होस् र दूधमा चामल होस् तब चूह्लोको आगोद्वारा पारस्परिक सम्बन्धका कारण दूधमा रहेको चामल पाक्दछ भने शरीरलाई हुने कष्ट-दुःख आत्मालाई पनि हुनुपर्ने हो।'

जड़भरतजी भन्नुहुन्छ—'राजन् ! यो मिथ्या हो। आत्मा निर्लेप छ। अग्निमाथि राखिएको भाँड़ाको दूधमा रहेको चामल पाक्दछ तर दूधमा ढुङ्गा हाल्यो भने त्यो पाक्दैन किनभने त्यो निर्लेप छ। आत्मा सर्वश्रेष्ठ र निर्लेप छ।'

'संसार तर मनको केवल कल्पना हो।'

'राजन्, मनको विकृति भएपछि जीवन पनि विकृत भइहाल्छ। त्यसकारण मन सुध्रियो भने आत्मालाई मुक्ति भइहाल्छ।'

'एक पटक मेरो मन मृगशावकमा फँस्यो तब मृगयोनिमा जन्मनुपर्‍यो। त्यसकारण म सावधान भएको छु।'

'राजन्, यो उपदेश व्यावहारिक मनको हो, आमालाई आफ्नो सन्तानको बोझ केही पनि लाग्दैन, किनभने त्यहाँ मनको ममताले काम गरिरहेछ। आमालाई आफ्नो छोरा फूल जस्तो हलौं लाग्छ, अर्काको छोरा गर्‍हौं हुन्छ। त्यसको कारण पनि मन हो। मनले भन्दछ यो आफ्नो हो र त्यो अर्काको।'

'राजन् ! यी सबै मनका धर्म हुन्। यी सबै मनकै खेल हो। मनको खेलले गर्दा मलाई कहिले मृग बन्नुपर्‍यो। मनको सुधार भएपछि जगत् सुध्रिन्छ। मन मृगशावकमा फँसेको थियो तब मलाई पशु बन्नु पर्‍यो।'

'राजन्, तिमी त केवल कच्छप देशको राजा हौ, म त भरतखण्डको राजा थिएँ। तैपनि मेरो दुर्दशा भयो।'

गुणानुरक्तं व्यसनाय जन्तोः तदेव नैर्गुण्यमयो मनः स्यात्।

(भा० ५-११-८)

विषयासक्त मनले जीवलाई सांसारिक सङ्कटमा फँसाउँछ र त्यही मनले विषयहित भएपछि जीवलाई शान्तिमय मोक्षपदको प्राप्ति गराउँछ।

जीवको सांसारिक बन्धनको कारणरूप जीव हो र त्यही मनको मोक्षको कारण रूप पनि हो।

मनुष्यको मन विषयासक्त भयो भने त्यो सांसारिक दुःखदाता बन्दछ, त्यही मन विषयासक्तहरू हुनाको साटो यदि ईश्वर भजनमा लीन भयो भने तब मोक्षदाता हुन्छ। विषयहरूको चिन्तन गर्दै मन त्यसमा फँस्दछ तब उसको बन्धन आत्मा आफैंलाई मान्दछ, स्वयंमा आरोपित गरिलिन्छ। यो सबै मनकै दुष्टता हो। त्यसकारण मनलाई परमात्मामा स्थिर गर।

तिमीले आफ्नो मनलाई दण्ड दियौ भने यमराजले तिमीलाई दण्ड दिनेछैनन्। जुन दिन जिब्राले असत्य बोल्छ त्यस दिन उपवास गर। जुन दिन केही पाप भयो भने त्यस दिन माला अलि धेरै जप।

भरतजी भन्नुहुन्छ—'राजन्, तिमी मलाई सोध्छौ म को हुँ ? तर तिमी स्वयंले आफूलाई सोध तिमी को हौ ?'

'तिमी शुद्ध आत्मा हौ, जाग्रत, स्वप्न र सुषुप्ति यी तीनै अवस्थाहरूको साक्षी आत्मा हौ।'

'राजन्, ज्ञानी जगत्लाई सत्य मान्दैनन्। संसारलाई उनीहरू मनकल्पित मान्दछन्।'

'जगत् स्वप्नजस्तै छ। जस्ता प्रकारले स्वप्न झूटो भए पनि मानिसलाई रुवाउँछ, त्यस्तै प्रकारले यो मिथ्या जगत् पनि मानिसलाई र जीवलाई रुवाउँछ।'

मानिलेऊ एउटा मानिस सुतेको छ। उसले सपनामा देख्छ एउटा भयानक बाघ आक्रमण गर्न तयार छ। त्यो मानिस डराउँछ बाघले मलाई खाइहाल्ने भो। यस्तो विचार गरेर ऊ कराउन, रुन थाल्दछ, उसको निद्रा टुट्छ। ब्यूँझेपछि ऊ देख्छ त्यो सपना थियो र सपनाको बाघले ऊ डराएको थियो।

तर सपना असत्य हो, यो कुरा मानिसको संझनामा कहिले आउँछ ? केवल त्यसवेला आउँछ जब उ ब्यूँझन्छ। कुन मानिस जागा भएको छ ? विषयहरूबाट जसको मन हटिसकेको छ, छोड़िसकेको छ, उही जागा भएको हो। त्यसैले तुलसीदासजीले पनि भनेको छ—

जानिय तबही जीव जग जागा।
जब सब विषय विलास विरागा॥

'राजन् ! त्यसैले म भन्छु यी सबै मनका खेल मात्र हुन्। मनलाई शुद्ध गर्नका निमित्त सन्तहरूको समागम गर। महापुरुषको सेवाबाट ब्रह्मप्राप्ति हुन्छ।'

महत्यादरजोऽभिषेकम्।

'राजन् ! सत्सङ्गका विना ज्ञान प्राप्त हुँदैन। आफ्नो स्वरूपको परिपूर्ण ज्ञान एक सत्य वस्तु हो। एक ब्रह्म मात्र सत्य हो। ब्रह्म सत्यस्वरूप, भेदरहित, परिपूर्ण, आत्मस्वरूप हो। पण्डित त्यसको भगवान् वासुदेव, कृष्ण आदि नामहरूबाट वर्णन गर्दछन् अन्यथा जगत् मिथ्या हो।'

भरतजीले प्रथम राजर्षिलाई दिव्य तत्त्वज्ञानको उपदेश दिए र फेरि भवाटवीको वर्णन गरे।

आत्माको विवेकरूपी धनलाई एक-एक इन्द्रियले लुटेर लिन्छ। कोही सन्त भेट्टाएमा संसाररूपी वनबाट हामीलाई बाहिर निकालिदिन्छन्। संसारमा एक्लै कहिल्यै नघुम। कुनै सन्तको, सद्गुरुको आश्रय लिएमा संसाररूपी वनबाट बाहिर निस्कन सक्नेछौ।

मायाका कारण जीव सुखको आशामा यस संसाररूपी वनमा अल्मलिन्छ, घुम्छ तर त्यसले साँचो सुख पाउँदैन।

जुन जीवको नेता ( बुद्धि ) असावधान र अपात्र छ, उसलाई ६ डाकु ( इन्द्रियहरू )-ले लुटिलिन्छन्। उसको धर्मरूपी धन लुटिन्छ।

ठूलो बथानबाट पनि असावधान भेड़ालाई ब्वाँसोले जसरी तानेर लैजान्छ, सोही प्रकार जीवसंघका प्रमादी मानिसलाई शृंगालादिले ( स्त्री-सन्तानले ) घिच्याएर लैजान्छन्।

यो वन ( संसार ) लता र जालाहरूले ( गृहस्थाश्रम ) व्याप्त छ। डाहीहरू ( काम्यकर्महरू )-द्वारा यो जनसमुदायले कष्ट पाइरहेछ।

त्यस वनमा जीवसमुदाय गन्धर्वनगरलाई हेर्दछ अर्थात् मिथ्या शरीरादिलाई सत्य मान्दछ र पिशाच ( सुवर्ण )-लाई हेर्दछ। कतिपटक धूलोले भरिएको आँखा कारण ( रजोगुणबाट व्याप्त दृष्टि हुनाले ) र आँधीद्वारा उड़ाएको धुलोको कारण ( हुरीको जस्तो भ्रममा पनि स्त्रीका कारण ) दिशाहरू ( देवहरू )-लाई उसले ठम्याउन पाउँदैन।

त्यो जनसमुदाय भोकबाट व्याकुल भएर अपवित्र वृक्षहरू ( अधार्मिक मानिसहरू )-को आश्रय लिन्छ। उसलाई जब तिर्खाले सताउँछ तब मृगजल ( निष्फल विषयहरू )-तर्फ दगुर्छ। जहिले पानी पाउँछ तब वनका यक्ष ( राजा )-ले उसको प्राण ( धन ) हरिलिन्छ।

कतिपटक निर्जला नदी ( दुःखदायी मार्ग )-तर्फ दगुर्छ।

हिँड्दा-हिँड्दा उसका गोड़ा काँढ़ा, कंकड़ ( कैयौं प्रकारका सङ्कटहरू )-ले प्वाल पार्छन्।

यस संघका मानिसहरूलाई कहिले सर्प ( निद्राले रोक्छ ) र उ लाशजस्तो हुन जान्छ। कहिले उसलाई हिंस्रक पशु ( दुर्जन )-ले टोक्छ। कहिले अन्धा ( विवेक भ्रष्ट ) भएर त्यो अँध्यारो ( इनार )-मा खसेर दुःखी हुन्छ।

यसदेखि बाहेक यो जनसंघ यस जङ्गलमा लताका शाखाहरू ( नारीका कोमल भुजाहरू )-को आश्रय लिएर, त्यहीं अस्पष्ट तर मधुर शब्द गर्ने चराचुरुङ्गीहरू ( नारीका काखमा खेलिरहेका साना बच्चा )-को इच्छा गर्छ। सिंहको टोली ( कालचक्रद्वारा उत्पन्न हुने जरा-मृत्युबाट ) त्यसले त्रास पाउँछ।

वृक्षका तल ( घरबारमा ) ऊ खेल्न चाहन्छ। कहिले-कहिले पर्वतका गुफाहरू ( रोगादि दुःखहरू )-मा गएर वहाँ बसेको हात्ती ( मृत्यु )-बाट ऊ भयभीत हुन्छ।

जीवात्मा कहिले सुखी हुन्छ अनि कहिले दुःखी। जीव-जन्तु भगवान्‌को चरणको आश्रय लिन्छ तब कृतार्थ हुन्छ।

संक्षिप्त शब्दहरूमा भनौं भने यो संसारमार्ग दुर्गम र भयङ्कर छ। मनलाई विषयासक्त नगरीकन, श्रीहरिको सेवाबाट तीक्ष्ण बनेको ज्ञान-कृपाण लिएर यस संसार-वनको उतापट्टि पुगिहाल।

भरतजीले पहिलो शिक्षा दिनुभयो र फेरि दीक्षा दिनुभयो। भागवताश्रयीको आश्रय लिने कृतार्थ भइहाल्छ।

भरतजीले प्रभुको ध्यान गर्दै शरीर त्याग गर्नुभयो।

यसभन्दा अगाड़ि भरतवंशी राजाहरूको वर्णन छ। यसपछि आउँछ भारतवर्षका उपास्यदेवहरू र उपासक भक्तहरूको वर्णन।

भगवान् नरसिंहका भक्त यी मन्त्रहरूको जप गर्छन्—

ॐ नमो भगवते नृसिंहाय नमस्तेजस्तेजसे—
अविराविर्भव वज्र नखः ब्रज्रदंष्ट्रं कर्मा शयान्—
रन्धय रन्धय तमो ग्रस ग्रस ॐ स्वाहा—
अभयम भयमात्मनि भूयिष्ठाः ॐ क्षौम्॥

(भा० ५-१८-८)

"म ओंकारस्वरूप भगवान् नरसिंह देवलाई नमस्कार गर्छु। हे देव ! तपाईं अग्नि आदि तेजहरूका पनि तेज हुनुहुन्छ। तपाईंलाई नमस्कार छ। हे वज्रनख वज्रसिङ्ग, दाह्रीवाल, तपाईं हाम्रा समक्ष प्रकट भइदिनुहोस्। हाम्रा कामवासनाहरूलाई डढ़ाइ दिनुहोस्। हाम्रो अज्ञानरूप अन्धकारलाई नष्ट गरिदिनुहोस्। हाम्रा अन्तःकरणमा अज्ञानरूप हुँदै प्रकाशित भइदिनुहोस्।"

यो हो नरसिंह भगवान्को मन्त्र। यो मन्त्रको जप गर्दै श्रीधरस्वामीलाई वैराग्य भएको थियो।

भागवतमा मानवशरीरको कैयन् ठाउँमा निन्दा गरिएको छ। मानवशरीरको स्तुति केवल पाँचौं स्कन्धमा छ र त्यो पनि देवहरूद्वारा भएको छ।

मानव शरीर मुकुन्दको सेवा गर्नका निमित्त हो। यदि मानवले शुभ सङ्कल्प गर्छ भने त्यो नरबाट नारायण हुन सक्दछ।

देवता गाउँछन्—

अहो अमीषां किमकारि शोभनं प्रसन्न एषां स्विदुत स्वयं हरिः।
यैर्जन्मलब्धंनृषुः भारताजिरे मुकुन्दसेवौपयिकं स्पृहा हि नः॥

(भा० ५-१९-२१)

मानिसको जन्म सबै पुरुषार्थहरूको साधन हो, यसो भनेर यस भारतवर्षमा जन्मिएका मानिसहरूको महिमा देवगण यसप्रकार गाउँछन्—'अहो! यस भारतवर्षका मानिसहरूले कुनचाहीँ पुण्य गरेका होलान् ? अथवा के श्रीहरि उनमाथि स्वयं प्रसन्न भएरै उहाँले भगवान्को सेवायोग्य मनुष्य जन्म यस भारतवर्षमा पाएका हुन् ? यो मनुष्य जन्म श्रीहरिको सेवा गर्नमा उपयोगी हुनाको कारण हामी पनि यसको इच्छा गर्छौं र यस सौभाग्यका निमित्त हामी पनि सदा इच्छुक छौं।'

यसपछि आउँछ भौगोलिक वर्णन। यस खण्डमा पृथ्वीका सातखण्डहरूको वर्णन गरिएको छ। सप्तद्वीप र सात समुद्रको वर्णन छ।

भरतखण्डका स्वामी हुन् देवनारायण। भरतखण्ड कर्मभूमि हो। अन्य खण्ड भोगभूमि हो। भरतखण्डमा जन्मने इच्छा सबै देवहरूलाई पनि हुन्छ। शरीरको भागवतमा स्तुति पनि गरिएको छ र निन्दा पनि। यस मानवशरीरद्वारा भगवत्सेवा, मुकुन्द सेवा हुन सक्दछ।

यस स्कन्धमा ग्रहहरूको स्थितिको पनि वर्णन गरिएको छ।

यसै स्कन्धमा सप्त पातालहरूको प्रतिपादन गरिएको छ। यी पातालहरूका तल छन् शेष नारायण।

राजाले सोधे—'नरक-लोक कहाँ छ?'

शुकदेवजी भन्नुहुन्छ—'राजन्। यो नरकलोक दक्षिण दिशामा छ। नरक अनेक प्रकारका छन्। चोर तामिस्र नाउँ गरेको नरकमा जान्छ र व्यभिचारी अन्धतामिस्र नाउँ भएको नरकमा जान्छ। जति पाप छन्, उतिनै नरक छन्।'

कुन पापका कारण कुन नरकमा जानुपर्छ त्यसको क्रमबद्ध वर्णन यस स्कन्धमा गरेको छ। यसप्रकार हजारौं नरक र यमलोक छन्। यसो भनेर स्कन्ध समाप्त भएको छ।

**श्रीमन्नारायण नारायण नारायण नारायण**
**लक्ष्मीनारायण नारायण नारायण नारायण**
**बद्रीनारायण नारायण नारायण नारायण**
**श्रीमन्नारायण नारायण नारायण नारायण**

# ❀ षष्ठम् स्कन्ध ❀

नारायण जिन नाम लिया, तिन औरका नाम लिया न लिया।
अमृतपान किया घट भितर, गङ्गाजल भी पिया न पिया॥

नरकहरूको वर्णन सुनेर राजा परीक्षित्ले भने—महाराज, मलाई यस्तो बाटो देखाउनुहोस् जहाँबाट हिँड्नाले मलाई यी नरकहरूमा जानु नपरोस्। तपाईंले प्रकृति धर्म, निवृत्ति धर्म आदिको कथा सुनाउनुभयो, तर यी नरक लोकहंरूको वर्णन सुनेर मलाई डर लाग्छ। नरकमा जाने वर्णन कहिले पनि आउँदै नआवोस्, यस्तो कुनै उपाय भन्नुहोस्।

शुकदेवजी वर्णन गर्नुहुन्छ—'राजन्, शास्त्रमा प्रत्येक पापको प्रायश्चित्तको उल्लेख छ। पापको विधिपूर्वक प्रायश्चित्त गरियो भने पाप नष्ट हुन्छ। प्रायश्चित्त गरिसकेपछि फेरि कहिल्यै पाप गर्नु हुन्न, अन्यथा प्रायश्चित्त गरेको कुनै अर्थ भएन। दुःख सहेर ईश्वरको भजन गर्नाले पाप डढ़ेर जान्छ।'

राजाले सोधे—'विधिपूर्वक प्रायश्चित्त गरेपछि पनि पाप गर्ने इच्छा भइरहन्छ। त्यसको के उपाय छ ? प्रायश्चित्त गर्नाले पापको नाश हुन्छ, तर पाप गर्ने वासना-इच्छाको नाश हुन पाउँदैन। प्रायश्चित्त गर्नाले पनि पापवासना नष्ट नभएपछि तब के गर्ने ? कुनै यस्तो मार्ग देखाउनु होस् पाप गर्ने वासना नरहोस्।' प्रायश्चित्तबाट पाप डढ्छ, तर पापवासना नष्ट हुँदैन। त्यसकारण त्यसका निमित्त के गर्नुपर्ला।

शुकदेवजी सावधान गराउनुहुन्छ—

राजन् मनको लेशमात्र पनि विश्वास नगर। मन बड़ो विश्वासघाती छ। त्यसलाई नियन्त्रणमा राख। मनलाई कहीं एक-दुइपटक छुट्टी पायो भने त्यो फेरि पाप गर्न तयार हुन्छ। पापवासना अज्ञानबाट जागेर आउँछ र अज्ञानको मूल कारण हो अहङ्कार।

जुन व्यक्तिले श्रीकृष्ण भगवान्लाई प्राणार्पण गर्दछ उसलाई पाप गर्ने इच्छानै हुँदैन। त्यसको अहङ्कार नष्ट हुन जान्छ।

तप ( मन तथा इन्द्रियहरूको एकाग्रता ), ब्रह्मचर्य, शम ( मनको नियमन ), दम ( बाह्य इन्द्रियहरूको नियमन ), मनको स्थिरता, दान, सत्य, शौच, यम, नियम आदिबाट पापको वासना नष्ट हुन्छ।